# नेपाल
# Nepal

वर्ष ५२ अङ्क १ पूर्णाङ्क २३९ साउन/भदौ, २०७९

# साँस्कृतिक सम्पदा अङ्क



सूचना तथा प्रसारण विभाग

# सम्पादकीय...✍

विगत ५१ वर्षदेखि निरन्तररुपमा प्रकाशित भैरहेको ‘नेपाल द्वैमासिक’ यस पटक साँस्कृतिक सम्पदा अंकको रुपमा प्रकाशित भएको छ । नेपाल आफ्नो मौलिक साँस्कृतिक सम्पदाका कारणले बाह्य विश्वका लागि आकर्षणको केन्द्र बनेको छ । नेपालबाट काठमाडौं उपत्यका र लुम्बिनी गरी दुईवटा साँस्कृतिक र चितवन राष्ट्रिय निकुञ्ज र सगरमाथा राष्ट्रिय निकुञ्ज गरी दुईवटा प्राकृतिक सम्पदाहरू विश्व सम्पदा सूचीमा सूचिकृत छन् । काठमाडौं उपत्यकाभित्रका पशुपति, स्वयम्भु, बौद्ध, चाँगुनारायण तथा काठमाडौं, ललितपुर र भक्तपुरका दरबार परिसर पनि सो सूचीमा सूचीकृत छन् । नेपालका कयौं सम्पदाहरू विश्व सम्पदा सूचीमा पर्न योग्य भए पनि यसका मापदण्ड र विभिन्न प्रकृयागत कारणबाट सूचिकृत हुने पर्खाइमा छन् । प्रस्तुत अंकले काठमाडौं उपत्यका र मोफसलका यस्ता सम्पदाहरूका सम्बन्धमा यी बाहेक विभिन्न खोजपरक एवं अध्ययन तथा अनुसन्धानमूलक लेखहरूको संग्रह पाठक सामु पस्कने जमर्को गरेको छ ।

यस अंकमा समेटिएका लेखहरूलाई नेपाली र अंग्रेजी दुई खण्डमा प्रस्तुत गरिएको छ । जसमा विश्व सम्पदा सूचीमा समाविष्ट हुनका लागि आवश्क पर्ने मापदण्ड एवं प्रकृया तथा उक्त सम्बन्धमा नेपालको तयारीसम्बन्धी सामग्री समाविष्ट छन् । यी मापदण्ड र प्रकृयाका अतिरिक्त काठमाडौं उपत्यकाभित्रका कीर्तिपुर, खोकना र साँखु तथा उपत्यकाबाहिरका सिंजा उपत्यका, दैलेखको भूर्ति देवल, मुस्ताङ, पाल्पा, रुरु क्षेत्र, गोरखा, नुवाकोट, पनौती, रामग्राम, तिलौराकोट र जनकपुरका साँस्कृतिक सम्पदासम्बन्धी लेखहरू पनि यस अंकमा समेटिएका छन् । यस संग्रहबाट पाठकवर्गलाई विश्व सम्पदा सूचीमा प्रस्तावित सम्पदाहरूका ऐतिहासिक एवं साँस्कृतिक पक्ष र तिनको महत्व बारे जानकारी प्राप्त हुने आशा गरिएको छ । यस अतिरिक्त यस संग्रहले विश्व सम्पदा सूचीमा सूचीकृत गर्ने सम्बन्धमा नेपालको तयारीका सबल एवं दुर्बल पक्ष बुझ्न सजिलो हुनेछ ।

यस अंकमा आफ्ना अमूल्य विचार एवं लेख रचना उपलब्ध गराई यस द्वैमासिकको गरिमा बढाउन सहयोग पुऱ्याउनु हुने सबै लेखक तथा अनुसन्धानकर्ताहरूप्रति धन्यवाद ज्ञापन गर्दै प्रबुद्ध पाठक वर्गको पृष्ठपोषण एवं सहयोगको अपेक्षा गर्दछौं ।

**सम्पादक मण्डल**

# विषय सूची

| शीर्षक | पृष्ठ |
|---|---|

## नेपाली खण्ड

## अंग्रेजी खण्ड

# सम्भावित सूची : विश्व सम्पदा सूचीकरणको अनिवार्य प्रावधान



✍ डा. सुरेश सुरस श्रेष्ठ*

## १. परिचय

मानिसको जीवन एउटा सामाजिक प्राणीका रुपमा रुपान्तरण भएसँगै मानव मष्तिष्कले अनेक किसिमका आवश्यकता, सौख एवं मनोरञ्जन हेतु अनेक मष्तिष्कीय उपज एवं संस्कृतिका संवाहक रुपमा विभिन्न क्रियाकलापहरूमा संलग्न हुन र तिनबाट बहुमूल्य सामग्री वा वस्तुहरूको उपार्जन गर्न थालेको देखिन्छ, जसलाई मानवीय अमूल्य सम्पदाका रुपमा परिभाषित गर्ने गरिन्छ, जो एक पटक नाश भएर गएपछि पुनः स्थापना गर्न असम्भव प्रायः हुन्छ । त्यस्ता सम्पदाहरू संसारभरिकै मानव जातिका साझा सम्पदा हुन् । त्यसैले तिनको संरक्षण गर्नु सवै मानव जातिको दायित्व हो, तिनको नाश हुनु सम्पूर्ण मानवीय सम्पदाहरूको नाश हुनु हो । यस विशिष्ट उद्देश्यले ती सम्पदाहरूको संरक्षणका लागि युनेस्को/विश्व सम्पदा समिति अन्तर्गत विभिन्न साँस्कृतिक तथा प्राकृतिक सम्पदाहरूलाई Convention Concerning the Protection of World Cultural and Natural Heritage, 1972, जसलाई World Heritage Convention, 1972 वा विश्व सम्पदा महासन्धि पनि भनिन्छ, का प्रावधानहरू बमोजिम विश्व सम्पदाको रुपमा सूचिकृत गर्ने गरिन्छ ।

यस विश्व सम्पदा महासन्धिले मूर्त सांस्कृतिक सम्पदालाई यसरी परिभाषा (UNESCO, 1972) गरेको छ :

स्मारकहरू : वास्तुकलाकृतिहरू, स्मारकको रूपमा रहेका वास्तुकला तथा चित्रकला कृतिहरू, वास्तुकलात्मक प्रकृतिका संरचना वा अवयवहरू, अभिलेखहरू, गुफा,

---

*सहसचिव तथा सँस्कृति महाशाखा प्रमुख, सँस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय

आश्रयस्थलहरू लगायतका संरचनाहरू, जो इतिहास, कला वा विज्ञानको दृष्टिले सर्वश्रेष्ठ विश्वव्यापी महत्वका छन्,

**भवनहरूको समूह** : छुट्टाछुट्टै वा एकापसमा जोडिएका भवनहरूको समूह, जो वास्तुकला एवम् तिनको एकरूपताका कारणले अमूल्य छन् वा भूदृश्य वा तिनको अवस्थितिका कारण महत्वपूर्ण छन् । यी सबै कला, इतिहास वा विज्ञानका दृष्टिले सर्वश्रेष्ठ एवम् विश्वव्यापी मूल्य भएको हुनुपर्नेछ ।

**स्मारक स्थलहरू** : मानवसृजित कृतिहरू वा प्रकृति र मानवद्वारा संयुक्त रूपमा सृजित कृतिहरू, स्मारक स्थलहरू । ती स्मारक स्थलहरू ऐतिहासिकता, सौन्दर्य, नृतत्वशास्त्र वा मानव जातिका दृष्टिले सर्वश्रेष्ठ एवम् विश्वव्यापी महत्वको हुनुपर्नेछ ।

विश्वसम्पदा महासन्धि १९७२ ले पनि स्मारकहरू, भवनहरूको समूह वा स्मारक स्थलहरू, जो मानव निर्मित, प्राकृतिक वा दुवैको संयुक्त रूपमा सृजित जुनसुकै किसिमको भएता पनि इतिहास, कला वा विज्ञानका दृष्टिले सर्वश्रेष्ठ एवम् विश्वव्यापी महत्व रहेका छन् भने तिनलाई सम्पदाको रुपमा परिभाषित गरेको देखिन्छ ।

त्यस्तै, युनेस्कोको Convention for the Safeguarding of the Intangible Cultural Heritage, 2003 ले अभौतिक सांस्कृतिक सम्पदालाई यसरी परिभाषित गरिएको छ (UNESCO, 2003):

क) अमूर्त सांस्कृतिक सम्पदाको संवाहकको रूपमा भाषासहितका मौखिक परम्परा तथा अभिव्यक्तिहरू

ख) अभिनय कलाहरू

ग) सामाजिक व्यवहार, अनुष्ठान तथा चाडपर्व– उत्सवहरू

घ) प्रकृति र ब्रह्माण्डसँग सम्बन्धित ज्ञान तथा व्यवहारहरू

ङ) परम्परागत कलाकौशलता ।

यसप्रकार, सांस्कृतिक सम्पदासम्बन्धी विभिन्न अन्तर्राष्ट्रिय महासन्धिहरू अनुसार मानवीय जीवनयापन एवं सभ्यताको विकास क्रममा मानव सृजित विभिन्न किसिमका भौतिक चिजका अतिरिक्त यी भौतिक चिजसँग सम्बन्धित विभिन्न अभौतिक क्रियाकलापहरू समेत हाम्रा महत्वपूर्ण एवं अमूल्य सम्पदा हुन्, यी सम्पदाहरू मानव मात्रको साझा भएकाले यिनको संरक्षण गर्नु हरेक मानिस तथा मानव समुदायको कर्तव्य हुन आउँछ । तथापि, मानव सभ्यताका विभिन्न चरणहरूमा सृजित एवं विकसित गरिएका यस्ता सांस्कृतिक सम्पदाको संरक्षणका लागि सबैको ध्यान केन्द्रित भएको भने त्यत्ति पाइँदैन । सांस्कृतिक सम्पदाहरू मानव जीवनका अभिन्न अङ्ग हुन्, जसलाई कुनै पनि किसिमले नकार्न सकिँदैन ।

त्यसैले कुनै न कुनै रूपमा यसलाई स्विकार्न तथा संरक्षण गर्नै पर्दछ, यो एउटा जन्मसिद्ध कर्तव्य हो र यसलाई हाम्रा आगामी पुस्तालाई जस्ताको तस्तै हस्तान्तरण गर्नु हाम्रो दायित्व हो, जो यस पुस्ताले पनि अघिल्लो पुस्ताबाट नै हस्तान्तरित रूपमा प्राप्त गरेको हो, त्यसैले यी निधिहरूको कुनै पनि किसिमले विनास गर्ने हक कसैलाई पनि छैन । कुनै पनि समुदायको मूर्त होस् या अमूर्त, जुनसुकै किसिमका सांस्कृतिक सम्पदाहरूको संरक्षण गर्नु मानव मात्रको परम कर्तव्यको रूपमा स्वीकार गर्नु नै मानवीय समुदायको एउटा अलग्गै पहिचान हो ।

## २. **विश्व सम्पदा भनेको के हो** ?

मानिसले एक सामाजिक प्राणीको हैसियतले आफ्नो जीवन निर्वाहको सिलसिलामा आफू एक्लैको प्रयासबाट वा प्रकृतिसँग मिलेर आफूलाई परेको आवश्यकता वा मनोरञ्जन वा सौख पूरा गर्नका लागि सृजना गरिएको वस्तु वा सामग्रीलाई साँस्कृतिक सम्पदाको रुपमा लिइने गरिन्छ (Shrestha, 2016) । यस्ता मानवीय जीवनोपयोगी कुनै बेला सृजित र उपयोगमा आएका तथा कतिपय तत्कालीन समयदेखि वर्तमानसम्म पनि निरन्तर रुपमा प्रयोगमा आइरहेका वा नआएका भए पनि कुनै कालखण्ड, मानव समुदाय वा वर्गको प्रतिनिधित्व गर्ने भएकाले यी सम्पदा मानव सभ्यता वा मानिससँग सम्बन्धित धेरै पक्षहरूको अध्ययन गर्न सकिने वा वताउन सक्ने खालका जीवन्त इतिहास हुन्, जसलाई भविष्यका लागि पनि उत्तिकै महत्वका साथ सुरक्षित राखिनु पर्दछ (Shrestha, 2020) भन्ने मनसायले संरक्षण गर्नु अति नै आवश्यक हुन्छ । सोही प्रयोजनका लागि युनेस्को विश्व सम्पदा महासन्धिले यस्ता अद्धितीय र अनुपम मानव साँस्कृतिक तथा प्राकृतिक सम्पदालाई संसारभरिका मानव मात्रको सम्पदाको रुपमा संरक्षण गर्न र पहिचान दिनका लागि महासन्धिका प्रावधान बमोजिम सूचीकृत गर्न सकिने व्यवस्था गरेको  छ । तसर्थ कुनै पनि देश वा समुदायको यस्ता अनुपम सम्पदा जो विश्व सम्पदा महासन्धि अनुरुप विश्व सम्पदा सूचीमा सूचीकृत भएका वा गरिएका छन् भने ती सम्पदालाई विश्व सम्पदा मानिन्छ (Shrestha, 2016)  । यसका लागि विशिष्ट प्रावधानहरू मार्फत आधारहरू र प्रक्रिया निर्धारण गरिएका छन् । सोही प्रावधान र प्रक्रिया अनुरुप नेपालले सन् १९७८ मा विश्व सम्पदा महासन्धि १९७२ लाई अनुमोदन गरी यस महासन्धिको पक्ष राष्ट्र (श्रेष्ठ, २०७७) भएपछि तत्कालै साँस्कृतिक तर्फ काठमाडौं उपत्यका (हाल सात वटा संरक्षित स्मारक क्षेत्रका रुपमा रहेका छन्) सम्पदा स्थल र प्राकृतिक तर्फ सगरमाथा राष्ट्रिय निकुञ्जलाई मनोनयन दर्ता गरेकोमा सन् १९७९ मा दुवै सम्पदा विश्व सम्पदा सूचीमा सूचीकृत भएका थिए (UNESCO/WHC,1979) भने पछि सन् १९८४ मा चितवन राष्ट्रिय निकुञ्ज (प्राकृतिक) र सन् १९९७ मा भगवान् गौतम बुद्धको जन्मस्थल लुम्बिनी विश्व

सम्पदा सूचीमा सूचीकरण (UNESCO/WHC, 1984, 1997) गरिएका छन् । यसरी नेपालको सन्दर्भमा साँस्कृतिक दुई र प्राकृतिक दुई गरी चार वटा सम्पदा स्थलहरू विश्व सम्पदा सूचीकृत भएका छन् (श्रेष्ठ, २०७७) ।

विश्व सम्पदा सूचीमा सूचीकृत काठमाडौं उपत्यकाका सात क्षेत्रहरूलाई एकल रुपमा काठमाडौं उपत्यका विश्व सम्पदा स्थल भनी सूचीकरण गरिसकेपछि नेपाल सरकारले आफ्नो नैतिक दायित्व एवं उच्च स्तरीय सुरक्षा वा संरक्षणका लागि नेपालको सम्पदा संरक्षण सम्बन्धी प्रमुख कानूनको रुपमा रहेको प्राचीन स्मारक संरक्षण ऐन, २०१३ को दफा ३ अनुसार यी सात क्षेत्रहरूलाई चार किल्ला तोकी सीमांकन गरी क्रमशः स्वयम्भू (वि.सं. २०३६), हनुमानढोका, पाटन र भक्तपुर दरवार क्षेत्र, चाँगुनारायण तथा बौद्ध (वि.सं. २०४१) र पशुपति (२०५५) लाई अलग अलग संरक्षित स्मारक क्षेत्र भनी घोषणा (नेपाल सरकार, २०३६, २०४१, २०५५) गरेको थियो, जसले यी क्षेत्रहरूमा युनेस्को का कानूनी प्रक्रियाका अतिरिक्त नेपालको आफ्नै कानूनद्धारा अफ बढी संरक्षण एवं व्यवस्थापन गर्न सकिन्छ । यी क्षेत्र, जो संरक्षित स्मारक क्षेत्रका रुपमा घोषित छन् र विश्व सम्पदा स्थलका रुपमा समाविष्ट छन्, भित्र रहेका विभिन्न सार्वजनिक स्मारकहरूका अतिरिक्त निजी स्वामित्वमा रहेका निजी घर भवन वा अन्य जुनसुकै किसिमका स्मारकहरू पनि यस कानूनको दायराभित्र पर्दछन् र सोही अनुरुप विश्व सम्पदा सम्बन्धी एवं संरक्षित स्मारक क्षेत्रभित्र लागू हुने भनी नेपाल सरकारद्वारा जारी गरिएका जुनसुकै किसिमका ऐन, कानून, नियम वा मापदण्डहरू अनिवार्य रुपमा पालना गर्नु हरेक सरोकारवालाहरूको कर्तव्य एवं दायित्वका रुपमा देखा पर्दछ । त्यसैगरी, भगवान् गौतम बुद्धको जन्मस्थल लुम्बिनी विश्व सम्पदास्थललाई पनि संरक्षित स्मारक क्षेत्र घोषणा गर्नका लागि नेपाल सरकारले आवश्यक प्रक्रिया शुरु गरिसकेको अवस्था रहेको छ, जसले यस्ता अनुपम र अद्वितीय सम्पदा स्थलहरूलाई राज्यको उच्च स्तरिय सुरक्षा र संरक्षण उपलब्ध गराउँदछ ।

यस कारणले गर्दा नै यस विश्व सम्पदा महासन्धि १९७२ अनुरुप संसारभरिका अथाह सम्पदा स्थलहरूलाई विश्व सम्पदा सूचीमा सूचीकरण गर्न हरेक देश र समुदाय अत्यन्तै लालयित छन्, जसले आफ्ना सम्पदालाई विश्व समुदाय समक्ष प्रस्तुत गर्दछ । हालसम्म युनेस्को विश्व सम्पदा समितिले १६७ पक्ष राष्ट्रहरूको साँस्कृतिकतर्फ ८९७, प्राकृतिकतर्फ २१८ र मिश्रिततर्फ ३९ गरी जम्मा ११५४ सम्पदाहरूलाई विश्व सम्पदा स्थलका रुपमा सूचीकृत गरेको छ (unesco. org; 17 Sep 2022) । यसमध्ये ४३ सम्पदा स्थलहरू अन्तरदेशीय (trans-boundary) छन् भने विभिन्न कारणले ५२ सम्पदा स्थलहरू खतराको सूचीमा र ३ वटा भने विश्व सम्पदा सूचीबाट हटाइसकेको (unesco.org; 19 Sep 2022) अवस्थामा रहेका छन् ।

### ३. विश्व सम्पदा स्थल सूचीकरणका आधारहरू

विश्व सम्पदा महासन्धि कार्यान्वयनसम्बन्धी कार्य सञ्चालन निर्देशिकाको दफा (paragraph) ७७ ले कुनै पनि सम्पदा विश्व सम्पदाका रुपमा सूचीमा सूचीकरण हुनका लागि दश वटा प्रावधान वा आधार (criteria) हरू स्पष्ट परिभाषित गरिदिएको छ। ती दश मध्ये (i) देखि (vi) सम्मका आधारहरू साँस्कृतिक सम्पदाका लागि, जसको मूल्यांकन मनोनयन प्रक्रियाका सिलसिलामा सामान्यतया विश्व सम्पदा समितिको सल्लाहकार निकायका रुपमा इकोमस (ICOMOS) ले गर्ने गर्दछ र (vii) देखि (x) सम्मका आधारहरू प्राकृतिक सम्पदाका लागि, जसको मूल्यांकन आइयुसिएन (IUCN) ले गर्ने गर्दछ (UNESCO/WHC, 2019)। यी दश प्रावधानहरू देहाय बमोर्जिम रहेका छन् ।

(i) मानवीय सिर्जनात्मक प्रतिभाको उत्कृष्ट नमूनालाई प्रतिनिधित्व गर्ने,

(ii) एउटा कालखण्ड वा विश्वको कुनै सांस्कृतिक क्षेत्रभित्र वास्तुकला वा प्रविधि, स्मारक-कला, शहरी विकास, वा भूपरिदृश्य डिजाइनमा भएको विकासको बारेमा हुने मानवीय मूल्य मान्यताको महत्वपूर्ण आदानप्रदानलाई प्रदर्शित गरेको हुनुपर्ने;

(iii) जीवित वा लुप्त सांस्कृतिक परम्परा वा सभ्यताको अद्वितीय वा कमसेकम उत्कृष्ट दसी वहन गरेको हुनुपर्ने;

(iv) मानव इतिहासका महत्वपूर्ण श्रृंङ्खला (हरू) लाई प्रदर्शित गर्ने घर/भवन, वास्तुकलात्मक वा प्राविधिक यौगिक अथवा भूपरिदृश्यको प्रकारको उत्कृष्ट नमूना जसले मानव इतिहासका विभिन्न महत्वपूर्ण चरणलाई उजागर बनाउँदछ,

विशेषगरी अपरिवर्तनीय रुपान्तरण (irreversible change) को प्रभावले क्षतिशील बन्न पुगेको संस्कृति (वा संस्कृतिहरू), वा वातावरणसँग मानवको अन्तर्क्रियालाई अभिव्यक्त गर्ने परम्परागत मानव बस्ती, भूउपयोग, वा समुद्र उपयोगको विशिष्ट वा अनुपम नमूनाको रुपमा रहनुपर्ने;

(v) अनुपम विश्वव्यापी महत्वका घटनाक्रम, जीवित परम्परा, विचार, आस्था अथवा कलात्मक तथा साहित्यिक रचनास'ग प्रत्यक्ष वा देखिने गरी सम्बन्धित रहनुपर्ने

(vi) उच्च कोटीको प्राकृतिक घटना वा विशिष्ट प्राकृतिक सुन्दरता तथा सौन्दर्यात्मक महत्व भएका क्षेत्रहरू समावेश भएको;

(vii) जीवनको अभिलेख, भूबनोटको निर्माणमा निरन्तर चलिरहने उल्लेख्य भौगर्भीय प्रक्रियाहरू, वा उल्लेख्य भूतलीय वा भौतिकीय

विशेषताहरूलगायत पृथ्वीको इतिहासका प्रमुख चरणहरूको प्रतिनिधित्व गर्ने अनुपम उदाहरणका रुपमा रहेको,

(viii) विद्यमान् पर्यावरणीय वा जैविक प्रक्रियाको विकास तथा थलीय, ताजा जलीय, तटीय तथा समुद्री पर्याप्रणाली तथा जीव एवं वनस्पति समुदायको उद्भव तथा विकासमा निरन्तर चलिरहने उल्लेख्य पर्यावरणीय तथा जैविक प्रक्रियाहरू दर्शाउने अनुपम उदाहरणको रुपमा रहेको,

(ix) विज्ञान तथा संरक्षणको दृष्टिले अनुपम विश्वव्यापी महत्व भएका लोपोन्मुख प्रजातिहरू समावेश हुने लगायतका जैविक विविधताको यथास्थानमा गरिने संरक्षणका लागि सर्वाधिक महत्वपूर्ण र उल्लेख्य प्राकृतिक वासस्थान समावेश भएको ।

यी दश वटा आधारहरूमध्ये साँस्कृतिक र प्राकृतिक सम्पदाका लागि आ-आफ्नो विषय क्षेत्रका आधारमध्ये कुनै एक वा बढी आधारहरू मार्फत विश्वव्यापी महत्व दर्शाएर विश्व सम्पदा सूचीमा सूचीकरण गर्न सकिन्छ भने मिश्रित सम्पदाका हकमा भने स्वभावैले कुनै दुई आधारहरूबाट विश्वव्यापी महत्वलाई प्रामाणिक बनाउनु पर्ने अवस्था रहेको देखिन्छ। जेभएता पनि, विश्व सम्पदा सूचीमा सूचीकृत हुनका लागि माथि उल्लेख गरिएकामध्ये कुनै न कुनै आधारबाट कुनै सम्पदा वा सम्पदा स्थलको विश्वव्यापी महत्वलाई उजागर गर्दछ भन्ने प्रमाण प्राप्य हुनु अनिवार्य रहेको छ ।

## ४. विश्व सम्पदा सम्भावित सूची

विश्व सम्पदा समितिले विश्व सम्पदा स्थलहरूको संरक्षण एवं व्यवस्थापनका सन्दर्भमा सूचीकरणका लागि कानूनी प्रक्रिया वा सामग्री (tool) का रुपमा लागू गरेको Operational Guidelines for the Implementaion of World Heritage Convention अनुसार विश्व सम्पदा सूचीमा सूचीकरण गर्नका लागि हरेक पक्ष राष्ट्रले आफ्नो सम्पदा स्थललाई सर्वप्रथम सम्भावित विश्व सम्पदा स्थलहरूको सूचीमा सूचिकृत गर्नु पर्ने प्रावधान रहेको छ। वास्तवमा हरेक पक्ष राष्ट्रले आफ्ना अद्वितीय अनुपम सम्पदाहरूमध्ये कुन सम्पदालाई विश्व सम्पदा सूचीमा सूचीकृत गर्न योग्य छ र विश्व सम्पदा स्थलसम्बन्धी आवश्यक प्रक्रियामा लैजान सकिन्छ भन्ने कुरामा यकीन भएपछि मात्र सोको लागि आवश्यक थालनी गर्नु नितान्त व्यवहारिक पक्ष पनि हो (श्रेष्ठ, २०७७)। सम्भावित विश्व सम्पदाको सूचीमा सूचीकृत भैसकेपछि मात्र त्यसका लागि आवश्यक पूर्वाधारहरूको अध्ययन गरी तयारीयोग्य ठानिएको हदसम्ममा त्यस्ता राष्ट्रिय सम्पदा स्थलहरूलाई विश्व सम्पदा स्थलमा सूचीकरणका लागि प्रक्रिया अगाडि बढाउन सकिने हुन्छ। एक पटक सम्भावित विश्व सम्पदा सूचीमा सूचीकृत

गरिसकेपछि पक्ष राष्ट्रले त्यस्ता सम्पदालाई विश्व सम्पदा सूचीमा सूचीकरण गर्नका लागि उपयुक्त ठानेमा सोको प्रक्रियामा जान सक्दछ भने त्यसलाई सोही सूचीबाट हटाउन पनि सक्दछ । तथापि हरेक पक्ष राष्ट्रले यो सूचीलाई हरेक दश बर्षमा पुनर्विचार वा पुनरावलोकन गरी थपघट गर्नु पर्ने (UNESCO/WHC, 2019) प्रावधान रहेको छ र साथै सम्भावित विश्व सम्पदाको सूचीमा सूचीकरण गर्ने सम्पदाहरूको सूची तयार गर्दा सम्बन्धित सरोकारवालाहरूसँग विस्तृत छलफल गरेर मात्र निर्क्यौल गर्नु पर्ने (UNESCO/WHC, 2019) समेत व्यवस्था रहेको छ ।

समान्यतया विश्व सम्पदा महासन्धिको पक्ष राष्ट्र भैसकेपछि त्यस्ता राष्ट्रहरूले आफ्नो सरहदभित्रका सवै खालका हरेक किसिमका महत्वपूर्ण साँस्कृतिक तथा प्राकृतिक सम्पदाहरूको पहिचान गरी तिनको समुचित संरक्षण एवं व्यवस्थापन गर्नै पर्दछ र सो को सिलसिलामा सम्बन्धित सरोकारवाला वा स्थानीयवासी, समुदायलाई संलग्न गराई तिनको राय सुझाव एवं सहमति अनुसार व्यवस्थापन एवं संरक्षणको कार्य गर्नु पर्दछ । यसको बैज्ञानिक ढंगले अभिलेखनलाई दुरुस्त राख्नु पनि पक्ष राष्ट्रको अनिवार्य दायित्व हो भनी महासन्धि कार्यान्वयनको कार्य संचालन निर्देशिकाको दफा १५ ले स्पष्ट पारेको छ (UNESCO/WHC, 2019) । त्यस्तै, विश्व सम्पदा सूचीमा सूचीकरण गर्ने योजना रहेको अवस्थामा त्यस्तो सम्पदाका सन्दर्भमा, पक्ष राष्ट्रको पहिलो कार्य नै आफ्नो राज्यको सीमाभित्र रहेका सम्भावित विश्वव्यापी महत्व रहेका महत्वपूर्ण साँस्कृतिक र/वा प्राकृतिक सम्पदाहरूको विवरण सूची वा इन्भेन्ट्री अनिवार्य रुपमा तयार गर्नु हो, जो विश्व सम्पदा सूचीमा सूचीकरण हुन सक्ने सम्भावना बोकेको हुन्छ । यो इन्भेन्ट्रीलाई हरेक पक्ष राष्ट्रले बर्षभरिमा कुनै पनि उपयुक्त समयमा युनेस्को विश्व सम्पदा केन्द्र मार्फत विश्व सम्पदा समितिमा पेश गर्न सक्दछ, जसलाई समितिले आफ्नो नियमित सेसन वा बैठकमा अनुमोदन गरी प्रारम्भिक सूचीमा सूचीकरण गर्न सक्दछ । यही प्रारम्भिक सूचीलाई सम्भावित विश्व सम्पदा सूची भनिन्छ र यसमा पक्ष राष्ट्रले त्यस्तो सम्पदाहरूलाई समावेश गर्दछ, जसलाई आगामी पाँच वा दश बर्षभित्रमा विश्व सम्पदा सूचीमा सूचीकरणका लागि मनोनयन दस्तावेज तयार गरी आवश्यक अन्य प्रक्रियाहरू समेत पूरा गरी विश्व सम्पदा केन्द्रमार्फत् विश्व सम्पदा समितिमा पेश गर्दछ । तथापि आफ्नो सीमा क्षेत्रभित्रका सवै खालका सामान्य सम्भावना बोकेका सम्पदाहरूलाई सूचीकरण गर्ने भन्ने यस सम्भावित सूचीमा सूचीकरण गर्नुको आशय भने होइन, यो सूचीहरूलाई कुनै पनि समयमा अद्यावधिक गर्न सकिन्छ । पक्ष राष्ट्रहरूलाई हरेक दश दश बर्षमा आफ्नो सम्भावित सूचीको पुनरावलोकन गर्न र पुनः पेशका लागि प्रोत्साहन पनि गरिने कुराको व्यवस्था निर्देशिकाको दफा ६५ ले गरेको छ, जसमा कुनै सम्पदालाई विश्व सम्पदा सूचीमा सूचीकरण गर्न मनोनयन दस्तावेज तयार गरी

पेश गर्नुभन्दा कम्तीमा एक बर्ष अगाडि यस किसिमको प्रारम्भिक वा सम्भावित सूचीमा सूचीकरण नगरिएका सम्पदाहरू विश्व सम्पदा सूचीमा सूचीकरण लागि पेश गरिएको मनोनयन स्वीकार नगरिने भनी स्पष्ट व्यवस्था समेत गरिएको छ। तसर्थ, यो सम्भावित सूची एउटा असाध्यै महत्वपूर्ण प्रक्रिया हो, जो प्रारम्भिक सूची हो र यसमा सूचीकरण नभैकन विश्व सम्पदा सूचीमा सूचीकरण हुन प्रक्रियामा लैजान समेत सकिंदैन। तसर्थ, विश्व सम्पदा सूचीमा सूचीकरण गर्ने प्रक्रियाको पहिलो चरणका रुपमा यसलाई लिइनु अनिवार्य हुन्छ ।

यसका लागि सम्भावित सूची पेश गर्ने ढाँचाहरू पनि कार्य संचालन निर्देशिकामा स्पष्ट रुपमा समावेश गरिएको छ भने क्रमागत अन्तरदेशीय (serial nomination) र अन्तरसीमायुक्त (trans-boundary nomination) मनोनयनका लागि समेत विशेष खालका ढाँचाहरू समेत समावेश गरिएका छन् ।

यहाँनेर सम्भावित सूचीका सम्बन्धमा विशेष ध्यान दिनुपर्ने कुरा भनेको, पक्ष राष्ट्रहरूले कुनै पनि सम्पदालाई विश्व सम्पदा सूचीमा सूचीकरणका लागि मनोनयन पेश गर्नु कम्तीमा एक बर्ष अगाडि नै त्यस्तो सम्पदा सम्भावित विश्व सम्पदा सूचीमा सूचीकरणका लागि पेश गर्नुपर्दछ। यसो नभएको सम्पदाका हकमा पेश गरिएको मनोनयनलाई सामान्यतया स्वीकार नगरिने व्यवस्था कार्य संचालन निर्देशिकाले स्पष्ट व्यवस्था गरेको छ (UNESCO/WHC, 2019)। तसर्थ विश्व सम्पदा सूचीमा सूचीकरण गर्नका लागि यो एक अनिवार्य प्रावधानको रुपमा लिइने गरिन्छ।

## ४.१ **सम्भावित विश्व सम्पदा सूचीको अनिवार्यता**

विश्व सम्पदा समितिले सम्बन्धित पक्ष राष्ट्रको आफ्नो सम्भावित विश्व सम्पदाको सूचीमा पहिले नै (कम्तीमा एक बर्ष अगाडि) सूचीकरण नभएको कुनै पनि सम्पदालाई विश्व सम्पदा सूचीमा सूचीकरण गर्ने प्रक्रियाको लागि योग्य ठहर गर्दैन, अर्थात् विश्व सम्पदा सूचीमा सूचीकरण हुन मनोनयन दर्ता प्रक्रियाको पहिलो प्रावधान नै मनोनयन पेश गरिन लागिएको सम्पदा कम्तीमा एक बर्ष अगाडिदेखि नै सम्भावित विश्व सम्पदा सूचीमा सूचीकरण भएको हुनु पर्दछ। तसर्थ, यो विश्व सम्पदा सूचीमा सूचीकरणको प्रक्रियामा असाध्यै महत्वपूर्ण छ, जहाँबाट विश्व सम्पदा सूचीमा सूचीकरणको प्रक्रियाको थालनी वा शुरुवात हुन्छ। यसका अतिरिक्त देहायका कारणले पनि यो सूची निकै महत्वपूर्ण रहेको छ :

- यसले उक्त सम्पदा सम्बन्धमा प्रारम्भदेखि नै विश्व सम्पदामा सूचीकृत हुने सम्भावना भएकाले सम्बन्धित संघीय, प्रादेशिक, क्षेत्रीय र स्थानीय सरकार, सम्पदाको स्वामित्ववाला र/वा व्यवस्थापक, स्थानिय समितिहरू, निजी क्षेत्र र गैरसरकारी सँस्थाहरू जस्तो स्थानीय समितिहरू, इकोमस र आइयुसिएनका प्रतिनिधिहरूसहित सबै खालका सरोकारवालाहरूसँग परामर्श, सहकार्य एवं यस

विषयमा सहमति वा सम्झौता गर्ने कार्य गर्दछ ।

● यसले पक्ष राष्ट्रलाई साँस्कृतिक र प्राकृतिक सम्पदाको विश्वव्यापी रुपमा रहेको सम्भावित महत्वको पहिचान गर्ने बारेमा प्रारम्भिक अध्ययन गर्न सहयोग गर्दछ ।

● यसले पक्ष राष्ट्रलाई व्यवस्थापनका लागि रहेका आवश्यकताहरू तथा सुरक्षा एवं संरक्षणका लागि उपायहरूको पहिचान गर्न मदत गर्दछ, जसबाट आवश्यकतानुसार साँस्कृतिक र प्राकृतिक सम्पदासँग सम्बन्धित विज्ञहरूको राय सल्लाह लिन पनि सकिने हुन्छ ।

● यसले खासगरी पक्ष राष्ट्र, विश्व सम्पदा समिति, विश्व सम्पदा केन्द्र र सल्लाहकार निकायहरूका लागि भविष्यका सम्भावित मनोनयनसम्बन्धी योजना तर्जुमाको एउटा महत्वपूर्ण र उपयुक्त औजारको रुपमा कार्य गर्दछ ।

● विश्व सम्पदा सूचीमा सूचीकरण गर्न मनोनयन तयार गर्ने सिलसिलामा आवश्यक तुलनात्मक विश्लेषणका लागि यसले एउटा महत्वपूर्ण र उपयुक्त श्रोतको काम गर्दछ ।

माथि उल्लेखित बाहेक पनि यो सूची र सूचीकरण भैसकेपछि यसले उक्त सम्पदाको सुरक्षा, संरक्षण एवं व्यवस्थापनका लागि विशिष्टीकृत रुपमा योगदान पुऱ्याउने परिस्थितिहरूको सृजना गर्ने कार्य गर्ने हुनाले विश्व सम्पदा सूचीमा सूचीकरण गर्नु पूर्वको यो अवस्था कुनै पनि सम्पदाका लागि अति नै महत्वपूर्ण हुन्छ ।

### ४.२ नेपालका सम्भावित विश्व सम्पदा स्थलहरू

नेपालले पनि सन् १९९६ र सन् २००८ मा गरी दुई पटक विभिन्न राष्ट्रिय सम्पदाहरूलाई सम्भावित विश्व सम्पदाको सूचीमा सूचीकृत गरिसकेको छ, जसमध्ये सन् १९९६ मा सम्भावित विश्व सम्पदाको सूचीमा सूचीकृत गरेको लुम्बिनी, भगवान बुद्धको जन्मस्थलाई सन् १९९७ मा नेपाल सरकारको आफ्नै पहलमा गरिएको अनुरोध अनुरुप प्रक्रियागत रुपमा नै विश्व सम्पदा सूचीमा सूचीकृत गरिएको थियो । यसका अतिरिक्त देहायका राष्ट्रिय सम्पदा स्थलहरू हालसम्म पनि सम्भावित विश्व सम्पदा सूचीमा सूचीकृत अवस्थामा रहेका छन् (unesco.org; 11 September 2022) :

- Cave architecture of Muktinath Valley of Mustang (23/05/1996)
- Khokana, the vernacular village and its mustard-oil seed industrial heritage (23/05/1996)
- Ramagrama, the relic stupa of Lord Buddha (23/05/1996)
- The early medieval architectural complex of Panauti (23/05/1996)

- The medieval palace complex of Gorkha (23/05/1996)
- Tilaurakot, the archaeological remains of ancient Shakya Kingdom (23/05/1996)
- Medieval Earthern Walled City of Lo Manthang (30/01/2008)
- Medieval Settlement of Kirtipur (30/01/2008)
- Nuwakot Palace Complex (30/01/2008)
- Ram Janaki Temple (30/01/2008)
- Bhurti Temple Complex of Dailekh (30/01/2008)
- Rishikesh Complex of Ruru Kshetra (30/01/2008)
- Sinja valley (30/01/2008)
- The Medieval Town of Tansen (30/01/2008)
- Vajrayogini and early settlment of sankhu (30/01/2008)

यसप्रकार उपर्युक्त नेपालका पन्ध्र सम्पदा स्थलहरू वर्तमानसम्म सम्भावित विश्व सम्पदा सूचीमा सूचिकृत भैरहेको अवस्थामा छ भने हालैका दिनहरूमा स्थानीय तहहरूको चाखलाग्दो पहलबाट यी मध्ये केही सम्पदा स्थलहरूलाई विश्व सम्पदा सूचीमा सूचीकरण गर्नका लागि पूर्वाधार तयारीको कार्य एवं सो सम्बन्धी अध्ययन  भैरहेको अवस्था रहेको छ ।

यसरी, सम्भावित विश्व सम्पदा सूचीमा सूचिकृत भैसकेपछि युनेस्को स्वयंले त्यस्ता सम्पदा स्थललाई विश्व सम्पदा सूचीमा सूचीकृत गर्ने नभै त्यसका लागि आवश्यक प्रक्रिया पक्ष राष्ट्र स्वयंले नै पूरा गर्नु पर्दछ, बरु यसका लागि आवश्यक आर्थिक तथा प्राविधिक सहयोग भने विश्व सम्पदा केन्द्र मार्फत युनेस्को विश्व सम्पदा समितिले गर्न भने सक्ने देखिन्छ (UNESCO, 2011) ।

## ५. उपसंहार

यसप्रकार, नेपालले विश्व सम्पदा महासन्धि, १९७२ लाई अनुमोदन गरी सदस्य राष्ट्र वा पक्ष राष्ट्र भएको हैसियतले विश्व सम्पदा स्थलका रुपमा काठमाडौं उपत्यका विश्व सम्पदा स्थल र लुम्बिनी गरी दुई वटा साँस्कृतिक तथा चितवन र सगरमाथा राष्ट्रिय निकुञ्ज दुई वटा प्राकृतिक गरी जम्मा चार वटा सम्पदाहरूलाई विश्व सम्पदा सूचीमा सूचिकृत गराइसकेको छ । विश्व सम्पदा महासन्धिमा हस्ताक्षर गरी पक्ष राष्ट्र भैसकेपछि विश्व सम्पदा सूचीमा सूचिकृत सम्पदा स्थल मात्र होइन कि आफ्नो राज्य सीमाभित्र रहेका जुनसुकै किसिमका सम्पदा, जो स्थानीय महत्वका वा राष्ट्रिय महत्वका हुन सक्दछन्, हरूको संरक्षण

तथा व्यवस्थापन गर्नु पर्ने र त्यसका लागि युनेस्को विश्व सम्पदा समितिले पारित गरेका कानूनहरूको दायरामा प्रतिवद्ध भएर रहनु पर्ने अनिवार्यता रहन्छ (UNESCO/WHC, 2011) ।

विश्व सम्पदा स्थलका रुपमा सूचीकरण प्रक्रियामा जानु वा लैजानु कम्तीमा एक बर्ष अगाडिदेखि नै त्यस्तो सम्पदा विश्व सम्पदा महासन्धि कार्य सञ्चालन निर्देशिका बमोजिम अनिवार्य रुपमा सम्भावित विश्व सम्पदा सूचीमा सूचीकरण भएको हुनुपर्दछ (UNESCO/WHC, 2019)। त्यसो नभएको अवस्थामा विश्व सम्पदा सूचीमा सूचीकरण गर्नका लागि तयार गरिएको मनोनयन प्रक्रियालाई कुनै पनि रुपमा विश्व सम्पदा समितिले अगाडि बढाउन नसक्ने स्पष्ट छ (श्रेष्ठ, २०७७) । तसर्थ कुनै पनि सम्पदालाई विश्व सम्पदाका रुपमा सूचीकरण गर्नुपूर्व एउटा अनिवार्य प्रावधानको रुपमा लिइने सम्भावित विश्व सम्पदा सूचीमा सूचीकृत भएका सम्पदाले एकातिर पक्ष राष्ट्रलाई विश्व सम्पदा सूचीतर्फ झक्झकाई रहन्छ भने अर्कातिर ती सम्पदाहरूको विशेष संरक्षण एवं व्यवस्थापन गर्नतर्फ उन्मुख गराइरहोस् भन्ने युनेस्को विश्व सम्पदा महासन्धि कार्य संचालन निर्देशिकाको सूक्ष्म मकसद रहेको देखिन्छ। यसले गर्दा हरेक पक्ष राष्ट्रले साँस्कृतिक सम्पदाप्रतिको राज्यको जिम्मेवारीलाई हरबखत निरन्तर रुपमा सम्बन्धित सरोकारवाला व्यक्ति, समुदाय तथा निकायहरूसँगको सहकार्य र समन्वयमा अनवरत कार्य गरिरहने उर्जा समेत प्राप्त गर्दछ। यसर्थ, पनि यो विश्व सम्पदा सूचीमा सूचीकरण हुनका लागि मात्र एउटा अनिवार्य प्रावधानका रुपमा नलिएर हरेक व्यक्ति, समुदाय र पक्ष राष्ट्रले सम्पदाहरूको संरक्षण र व्यवस्थापनका लागि अनिवार्य प्रावधानका रुपमा ग्रहण गरिनु अनिवार्यता रहन आउँछ। यसो भएमा मात्र विश्व सम्पदा सूचीमा सूचिकृत भैसकेका सम्पदा स्थलहरूको संरक्षण एवं व्यवस्थापनका लागि छुट्टै व्यवस्थापन योजना निर्माण एवं सोही बमोजिम संचालन गर्नुका साथै राष्ट्रिय कानूनद्धारा उच्च प्राथमिकताका आधारमा संरक्षण एवं व्यवस्थापन गर्नु पर्ने अनिवार्यतालाई मूर्त स्वरुप दिन सक्ने क्षमता राख्ने देखिन्छ।

नेपालका सम्भावित विश्व सम्पदा सूचीमा सूचीकृत विभिन्न सम्पदा स्थलहरूलाई सापेक्षिक रुपमा अद्यावधिक गर्दै तिनलाई विश्व सम्पदा स्थलहरूको सूचीमा सूचीकृत गर्नका लागि आवश्यकतानुसार पूर्वाधारहरू तयार गर्दै जानुका साथै क्रमशः अध्ययन अनुसन्धान कार्य गर्दै जानु पर्नेतर्फ पनि ध्यान दिनु आवश्यक रहेको देखिन्छ।

## References:


- DoA/ GoN (1978). *Nomination Document for inscription of the Kathmandu Valley on the World Heritage List.* Kathmandu: DoA/GoN.

(www.unesco.org)

- DoA/GoN, (1996). *Nomination Document for inscription of Lumbini, the birth place of Lord Buddha, on the World Heritage List.* Kathmandu: DoA/GoN. (www.unesco.org)
- Shrestha, Suresh Suras (2016). **Swayambhu: A World Heritage Destination** (Conservation and Management System). Kathmandu: Oriental Cultural Heritage Sites Protection Alliance (OCHSPA), Paris, France.
- UNESCO/WHC, (1972). *Convention Concerning the Protection of World Cultural and Natural Heritage, 1972.* Paris: UNESCO.
- UNESCO/WHC, (1979). *Decision of World Heritage Committee* - Session, Paris: UNESCO.
- UNESCO/WHC, (1984). *Decision of World Heritage Committee* – Session, Paris: UNESCO.
- UNESCO/WHC, (1997). *Decision of World Heritage Committee* – Session, Paris: UNESCO.
- UNESCO/WHC, (2003). *UNESCO Convention for the Safeguarding the Intangible Cultural Heritage, 2003.* Paris: UNESCO.
- UNESCO/WHC,(2011). *Operational Guidelines for the implementation of World Heritage Convention. Paris*: UNESCO.
- UNESCO/WHC,(2019). *Operational Guidelines for the implementation of World Heritage Convention. Paris* : UNESCO.
- unesco.org (Extracted on different dates in September 2022)
- नेपाल सरकार, (वि.सं.२०३६) । **नेपाल राजपत्र**, काठमाडौं : श्री ५ को सरकार ।
- नेपाल सरकार, (वि.सं.२०४१) । **नेपाल राजपत्र**, काठमाडौं : श्री ५ को सरकार ।
- नेपाल सरकार, (वि.सं.२०५५) । **नेपाल राजपत्र**, काठमाडौं : श्री ५ को सरकार ।
- श्रेष्ठ, सुरेश सुरस, (वि.सं. २०७७) । **सम्पदा : विश्व सम्पदा सूची** (**सूचीकरणका लागि मनोनयनको तयारी**) । काठमाडौं : युनेस्कोका निमित्त नेपाल राष्ट्रिय आयोगको सचिवालय ।

# मुक्तिनाथ उपत्यकास्थित गुफा वास्तुकलाका ऐतिहासिक र सांस्कृतिक पृष्ठभूमि



✍ प्रा. डा. मदन कुमार रिमाल*

## परिचय

प्रस्तुत लेख नेपालको गण्डकी प्रदेशअन्तर्गत मुस्ताङ जिल्लास्थित मुक्तिनाथ उपत्यकाको प्रमुख नदी कालीगण्डकीको दुवै किनारामा सीमित रहेको छ। कालीगण्डकीका अग्ला पहराहरूमा अवस्थित यी गुफाहरू के-कस्ता छन्, मानवद्वारा यसको प्रयोगको प्राचीनता के कस्तो छ र यी गुफाहरू मानव इतिहास तथा संस्कृतिका दृष्टिले कति महत्वपूर्ण छन् भन्ने विषयमा यो लेख केन्द्रित रहेको छ । यसै सन्दर्भमा प्रस्तुत यो लेखमा मानव जातिको उद्भव र विकासक्रमसँगै विकसित भएको गुफा मानवको संस्कृति के-कस्ता प्राप्त भएका छन् भन्ने संक्षिप्त चर्चा गर्दै मुस्ताङ क्षेत्रमा रहेका गुफा मानवको संस्कृतिबारे प्रष्ट पार्ने प्रयास गरिएको छ ।

रूपन्देही जिल्लाको बुटवल नगरपालिका नजिक पर्ने तिनाउ खोलाको पहरामा भेटिएको एक करोड १० लाख वर्षअघि मानिएको रामापिथेकसको नामले प्रसिद्ध नरवानरको बंगाराको प्राप्त जीवाष्मले मानव उद्विकासको शृंखलामा नेपाल पनि महत्वपूर्ण स्थल रहेको थियो भन्ने प्रमाणित गरेको छ ।[1] मुस्ताङ जिल्लाको कालीगण्डकी नदीको दुवै किनारातर्फ रहेको पहराहरूमा अवस्थित

1 प्रधान, केदारनाथ (वि.सं.२०४५) नेपालको १.१ करोड वर्षअघिको रामनरवानरले पिथेकसको सन्दर्भमा आदि मानवको उद्गम र उद्गमस्थल, प्राचीन नेपाल, संख्या १०६, श्री ५ को सरकार शिक्षा तथा संस्कृति मन्त्रालय, पुरातत्व विभाग, काठमाडौं ।

*प्राध्यापाक, इतिहास संस्कृति तथा पुरातत्व केन्द्रीय विभाग, त्रिभुवन विश्वविद्यालय

गुफा मानवको बस्तीले पनि मानव उद्‌विकासको क्रममा निकै महत्व राख्दछ भन्ने विषय यस लेखमा प्रस्तुत गरिएको छ । नेपालमा प्राग् मानवहरूको खोजी निकै पहिलेदेखि हुँदै आएको भए पनि हालसम्म बर्दिया, दाङ उपत्यका, काठमाडौं उपत्यका, महोत्तरी, भोजपुर आदि क्षेत्रबाट प्राग् मानवको सांस्कृतिक जीवाष्म (प्राग् मानवले प्रयोग गरेको ढुंगाका उपकरणहरू) मात्र प्राप्त भएको छ । मुस्ताङ क्षेत्रमा भने सांस्कृतिक जीवाष्महरूका साथसाथै मान्छे तथा अन्य जीवका शारीरिक जीवाष्महरू पनि प्राप्त भएको हुनाले मानव उद्‌विकासको क्रममा नेपालका भू-भागहरूको पनि महत्व बढेको स्पष्ट हुन्छ । मुस्ताङ क्षेत्रमा गरिए को पुरातात्विक अन्वेषण र उत्खनन्को क्रममा प्राप्त भएका सांस्कृतिक तथा शारीरिक जीवाष्मका प्रमाणहरूले अस्पष्ट नेपालको प्राग् इतिहासलाई स्पष्ट पारेको छ । जसले नेपालको प्राचीन इतिहासमा नयाँ आयाम प्रदान गरेको छ । प्राचीन कालदेखि केही दशकअघिसम्म पनि मुस्ताङ गुफामा मान्छेको बसोबास रहेको भन्ने तथ्यले गुफा मानवको सांस्कृतिक क्रमबद्धतालाई पनि उजागर गरेको छ । यो लेखमा यिनै गुफा मानवहरूको सांस्कृतिक क्रमबद्धतालाई नेपालको प्राग् इतिहासको प्राप्त प्रमाणका आधार प्रष्ट पार्ने कोसिस गरिएको छ ।

वि.सं. २०५१ तिर मुस्ताङ क्षेत्रमा प्राचीन गुफा मानवहरूको पुरातात्विक अन्वेषण र उत्खनन्मा सहभागी भई प्रत्यक्ष अवलोकन गर्ने अवसर यी पंक्तिकारले प्राप्त गरे तापनि प्रस्तुत लेख द्वितीय स्रोतको आधारमा तयार पारिएको छ ।

## गुफा र मानव संस्कृति

जीवहरूको उत्पत्ति दैवी शक्ति वा ईश्वरबाट भएको हो भन्ने अवधारणामा असहमति जनाउँदै चार्ल्स डार्बिनले ई.सं. १९५९ मा 'द ओरिजिन अफ स्पेसिस बाय मिन्स अफ नेचुरल सेलेक्सन्स' भन्ने पुस्तकमा विकासवादको सिद्धान्तलाई प्रस्तुत गरे । उनका अनुसार प्रत्येक जीवले आफ्नो अस्तित्व रक्षाका लागि जीवनमा संघर्ष गर्ने गर्छन् जसको परिणाम स्वरूप योग्यतम् प्राणी मात्रै जीवित रहन्छन् । यसप्रकार उनले प्राकृतिक चयनद्वारा जीवहरूको उत्पत्ति हुन्छ, प्राणीहरूको हरेक पुस्ताले गरेको जीवन संघर्षको परिणाम स्वरूप नयाँ नयाँ उपयोगी लक्षणहरूको निर्माण हुन्छ र तिनका सन्तानमा वंशानुगत संकेतहरू देखा पर्न जान्छ । हजारौं, लाखौं वर्षपछिका सन्ततिहरू आफ्नो पुर्खाभन्दा भिन्न हुन जान्छन् ।[2] उनको यस अवधारणालाई पछिका अनुसन्धानहरूले पनि पुष्टि गऱ्यो र यसैलाई हाल विश्वले उद्‌विकासवादको वैज्ञानिक अवधारणाको रूपमा स्वीकार गरेको छ ।

यसै अवधारणाको आधारमा मान्छेको उद्‌विकास सम्बन्धी सिद्धान्त अनुरूप व्याख्या गर्दा लगभग बीस लाख वर्षअघि प्रारम्भ भई दश हजार वर्षअघि

2 Fagen, Brisn M. (1947), World Prehistory, Bosten Little Brown and Company, P.3 .



मुस्ताङ जिल्लामा रहेको मानव निर्मित गुफा

समाप्त भएको (प्यालेस्टोसिन) प्रातिनूतन कालको हिमयुग र अन्तरहिमयुगको विषमजलवायुसँग मानवपुर्खाले संघर्ष गर्नुपरेको थियो । प्रारम्भमा जंगलका रुखहरूलाई आश्रयस्थल मानेका मानवपुर्खाहरूले विषमजलवायुबाट आफूलाई सुरक्षित राख्नका लागि गुफा, ओढार तथा शिलाश्रयहरूलाई आफ्नो आश्रयस्थल बनाए । आजभन्दा करिब ३ लाख वर्षअघि होमो इरेक्टस भन्ने मानवपुर्खा गुफा ओढार तथा शिलाश्रयमा बस्न थालेको संकेत युरोप, अफ्रिका तथा एसियामा प्राप्त प्रमाणहरूले पुष्टि गरेको छ ।[3] मानव उद्‌विकासक्रममा होमो सापियन्स सापियन्स आजभन्दा चालिस हजार वर्षअघि युरोप, एसिया र अफ्रिकामा देखा पऱ्यो । अत्यधिक चिसोका कारणले मानिसको प्रमुख आश्रयस्थल गुफा र ओढारहरू रहेको यो समयमा मानिसले आफू बस्ने गुफाका भित्तामा चित्र बनाउने र स-साना मातृका, घोडा, माछा आदिका मूर्तिहरू बनाउन थाले । आफूले प्रयोग गर्ने उपकरणहरूमा पनि बुट्टा बनाउन थाले । यस प्रकारको संस्कृतिको विकास दक्षिणपूर्वी एसियामा पनि भयो ।[4]

3 Fagen, Brisn M. (1947), World Prehistory, Bosten Little Brown and Company, P.83-87.

4 ऐजन, पृ. १०३ देखि १३४ तथा द्यगचपप्तत, M.C. The Old Stone age, 1985 Rupa and co. Delhi, P. 137 to 172

## मुस्ताङ जिल्लाको परिचय



मुस्ताङ जिल्लामा रहेको मानव निर्मित गुफा

मुस्ताङ जिल्ला हाल नेपालको गण्डकी प्रदेशको सीमाभित्र पर्ने उत्तरी जिल्ला हो । मुस्ताङ जिल्लाको उत्तरपूर्वमा सबैभन्दामाथि गणतन्त्र चीनको स्वशासित क्षेत्र तिब्बत रहेको छ। दक्षिणपूर्वी भेगमा मनाङ जिल्ला रहेको छ। त्यस्तै, पश्चिमतर्फ डोल्पा जिल्ला पर्दछ भने दक्षिणमा म्याग्दी जिल्ला पर्दछ। पूर्वमा तिब्बतलाई दामोदर हिमालले र मनाङलाई नीलगिरि हिमालले छुट्याएको छ भने पश्चिममा मुकुट हिमालयले डोल्पा जिल्लालाई छुट्याएको छ। यो जिल्ला २८ं२४ देखि २९ं२० उत्तरी अक्षांश र ९३ं३० देखि ८४ं१० पूर्वी देशान्तर भित्र पर्दछ। यो जिल्ला उत्तरदेखि दक्षिणतिर केही भिरालो भई ढल्केको छ। उत्तर सीमानजिक करिब २७००० फिट अग्लो हिमशिखर छ भने दक्षिण म्याग्दी जिल्ला समुद्री सतहदेखि ५५०० फिट माथि अवस्थित छ। धवलागिरि र अन्नपूर्ण हिमशृंखला भएको यो जिल्लाको मुख्य नदी कालीगण्डकी हो ।[5] यस जिल्लामा अन्य नदी, खोला, ताल, कुण्ड आदिहरू पनि छन् । जुन बोन, हिन्दु र बौद्ध धर्मावलम्बीहरूका लागि महत्वपूर्ण आस्थाका केन्द्रहरू हुन् ।

## मुक्तिनाथ उपत्यका

मुस्ताङ जिल्लालाई माथिल्लो र तल्लो मुस्ताङ भनी विभाजित गर्ने गरिएको छ । जिल्लाको दक्षिणतर्फ रहेको तल्लो मुस्ताङमा पर्ने घासा, लेते, बाग्लुङ, कोवाङ, टुक्चे, मार्फा, ठिनी, जोमसोम, कागबेनी र मुक्तिनाथ आदि महत्वपूर्ण मानव

5 क्षेत्री, नारायण प्रसाद (वि.सं. २०४४), मुस्ताङ दिग्दर्शन, साझा प्रकाशन, काठमाडौं पृ. ३देखि २८.

बसोबासका स्थलहरू हुन् । त्यसभन्दा माथि उत्तरतर्फ नाम्चे, छुसाङ धामी, चराङ र मुस्ताङ मुख्य मानव बसोबासका स्थलहरू हुन् । घासादेखि मुक्तिनाथसम्मको क्षेत्रलाई तल्लो मुस्ताङ भन्ने गरिन्छ । तल्लो मुस्ताङको उपर्युक्त बसोबास क्षेत्रलाई महाभारत तथा पुराण साहित्यहरूमा मुक्तिक्षेत्र, शालिकग्राम क्षेत्र, हरिहर क्षेत्र, रेवाखण्ड आदि विभिन्न नामले सम्बोधन गर्ने गरिएको छ । यस जिल्लामा पर्ने विभिन्न ताल, कुण्ड, खोला, नदीनाला, पर्वत आदिलाई विभिन्न पौराणिक ग्रन्थहरूमा उल्लेखित नामहरूद्वारा सम्बोधन गर्ने गरिएको छ । यो स्थल प्रसिद्ध तीर्थस्थलको रूपमा महाभारत तथा पुराणहरूमा उल्लेखित छ । तसर्थ, लगभग दुई हजार वर्षअघिदेखि भारतवर्षमा यो क्षेत्र मुक्तिक्षेत्रको रूपमा प्रसिद्ध रहेको बुझिन्छ ।[6] सातौं शताब्दी ईस्वीतिर तिब्बतमा बौद्ध धर्म लोकप्रिय भएपछि यो स्थल बौद्ध तीर्थस्थलको रूपमा पनि प्रसिद्ध हुन गयो ।[7] भगवान् विष्णु तथा शिवसँग सम्बन्धित पवित्रस्थल मोक्षप्राप्ति हुने स्थल (मुक्तिक्षेत्र) शालग्राम क्षेत्र (शालिग्राम क्षेत्र) को रूपमा प्रसिद्ध यस स्थलको स्थानीय तिब्बती नाम भने सयौं धारा भएको पवित्रस्थल (chu-mig-brgya-rtsa) हो । मानिसहरूले मोक्ष प्राप्त गर्ने भएको विश्वासले गर्दा हिन्दु र बौद्ध धर्मावलम्बीहरूका साथै स्थानीय बोन धर्मका अनुयायीहरूले समेत यस क्षेत्रलाई मुक्ति क्षेत्र भन्दछन् । जसले गर्दा यस क्षेत्रलाई मुक्तिनाथ उपत्यका भनिएको हो । मुक्तिनाथको तीन तह छाना भएको मन्दिर र एकसय आठ धारा रहेको क्षेत्रलाई हिन्दु, बौद्ध र बोन धर्मका अनुयायीहरूले पवित्र स्थलको रूपमा पूजा गर्ने गर्दछन् । सो मन्दिर क्षेत्रमा ज्वालामाई भनिने पवित्र स्थल पनि रहेको छ भने सोही क्षेत्रमा एउटा बौद्ध गुम्बा पनि रहेको छ । यस स्थलमा जनैपूर्णिमा वा रक्षाबन्धनको समयमा हजारौं तीर्थयात्रीहरू आएर ब्रतबन्ध गर्ने गर्छन् । यहाँ स्थानीय मानिसहरू यार्तुङ जात्रा, घोडा जात्रा आदि पर्वहरू मनाउने गर्छन् । यस क्षेत्रमा पिण्डदान गरे पितृहरूको उद्धार हुन्छ भन्ने जनविश्वास रहेको छ ।[8]

## मुक्तिनाथ उपत्यका र गुफा वास्तुकला

कालीगण्डकी नदीको दुवैतर्फ पहराहरूमा हजारौंको संख्यामा प्राकृतिक गुफाहरू रहेका छन् । त्यस्ता गुफाहरूमा मानिसले आफ्नो आवश्यकता अनुरूप निर्माण गरेका वास्तुकलाले गर्दा कतिपय गुफाहरूलाई मानवनिर्मित गुफाहरू भनी सम्बोधन

6 Messerschmidt, Donald (1984), A Geography adsacred symbolism of Muktinath Shrine, Nepal, Himalayan Review, vol-XV, P. 39-50.

7 Messerschmidt, Donald (1984), A Geography adsacred symbolism of Muktinath Shrine, Nepal, Himalayan Review, vol-XV, P. 39-50.

8 Messerschmidt, Donald And Jyoti Sharma, A social process on the Hindu pilgrimage to Muktinath, Kailash 09/0203-02.

गर्ने गरिन्छ । त्यसकारण यहाँका गुफालाई प्राकृतिक र मानवनिर्मित गुफाहरू भन्ने गरिएको हो । यी गुफाहरूलाई स्थानीय मानिसहरूले चिसोबाट बच्न बसोबास तथा अन्य प्रयोजनका लागि प्रयोग गर्ने गर्दथे भन्ने कुराको संकेत सर्वप्रथम ईस्वीको १९५३-५५ मा त्यस क्षेत्रको भ्रमण गर्ने इटालीका विद्वान जिसेप टुचीले गरेका थिए । उनले यी गुफाहरू सम्भवतः प्रागैतिहासिक मानवको बसोबास गर्ने स्थल रहेको कुराको संकेत गरेका छन् ।[9] त्यसपछि यस क्षेत्रको गुफाहरूमा ईस्वीको १९६१ तिर स्वीस विद्वान् टोनी हागनले ध्यान आकृष्ट गराएका थिए । उनले यहाँका गुफाहरूमा बौद्ध विहारहरू रहेको र यी गुफाहरू बौद्ध लामाहरूको बासस्थान रहेको तर्फ संकेत गरेका छन् । उनले उत्तरतर्फबाट आएका लुटपाट गर्ने आक्रमणकारीबाट बच्न यहाँका स्थानीयहरू यी गुफाहरूको प्रयोग गर्थे होलान् भन्ने अनुमान गरेका छन् ।[10] यस क्षेत्रतर्फ चीन सरकारको पनि ध्यान आकर्षित हुन गयो र ईस्वी १९८६ मा चीन-जापानको संयुक्त टोलीले पनि चीनतर्फ पर्ने यस क्षेत्रको महत्वको अध्ययन गरेको थियो । ईस्वीको १९७८ देखि १९७९ मा चीनका विद्वानहरूले पूर्वीतिब्बत क्षेत्रमा रहेका गुफाहरूको अध्ययन गरेर नवपाषाण कालमा मानव बसोबास रहेको जानकारी प्राप्त भएको उल्लेख गरेका छन् ।[11]

उपर्युक्त अध्ययनहरूले नेपालको मुस्ताङ क्षेत्रमा कालीगण्डकीको दुवैतर्फका पहरामा अवस्थित गुफाहरूको अध्ययन गर्नुपर्ने आवश्यकतामा जोड दियो । ई.सं. १९८६ देखि १९८७ मा यस क्षेत्रको अन्वेषण गरेका जर्मन विद्वान प्राध्यापक डिटेर शुले गरे । उनले मुस्ताङस्थित गुफा तथा गुफाबाहिरका बस्तीसँग सम्बन्धित सभ्यता लगभग ६ हजार वर्ष पुरानो हुन सक्ने बताए । यसप्रकार उनले त्यहाँको संस्कृति नेपालको संस्कृति र सभ्यतालाई विश्वको प्राचीन विकसित संस्कृति र सभ्यताको समकालिक हुन सक्ने कुराको संकेत पनि गरेका छन् ।[12] डा. शुले यहाँका मानिसहरू अहिले पनि गुफामा निवास गर्दछन् र आफ्नो

9 Report on the 2013/14 field research in Upper Mustang and narphu district of Nepal by the team of nepal's Department of Archaeology and the sky door foundation, Peter.

10 Sharma, Janak Lal (1994), A Brief Note on thr seminar on high mountain Archaeology, Ancient Nepal, no. 136, His Majesty's Government, Ministry of Education Culture and Social Welfare, The Department of Archaeology.

11 Mishra, Tarananda, The archaeological Research in the high Mountains of Mustang District, An Assessment of the situation, Kathmandu, Ancient Nepal, no.136, page, 147-52.

12 Mishra, Tarananda, The Archaeological Research in the high Mountains of Mustang District, An Assessment of the Situation, Kathmandu, Ancient nepal, no.136, page, 147-52.

सुविधानुसार पर्खाल लगाएर तथा झ्याल/ढोकाहरू निर्माण गर्दछन् भन्ने उल्लेख गरेका छन् । कतिपय गुफाहरू दुई वा तीन तल्लामा पनि छन् उनले बताएका थिए । यसप्रकार शुको अध्ययनले पनि चीनका विद्वानहरूले बताए अनुसार मुस्ताङ क्षेत्रमा नवपाषाणकालीन बस्ती हुन सक्ने कुरालाई पुष्टि गऱ्यो ।

यस क्षेत्रको प्राचीनताको बारेमा जानकारी दिने अर्का विद्वान देवेन्द्रनाथ तिवारी हुन् । मुस्ताङको मुक्तिनाथ उपत्यकाको चोखोपानीस्थित चिहान गुफा आकस्मिक रुपमा प्राप्त भएपछि उनले सो क्षेत्रमा बचाव उत्खनन् गरेका थिए । जुन उत्खनन् को बारेमा उनले ई. सं.१९८५ मा पुरातत्व विभागको मुखपत्र प्राचीन नेपालमा लेख प्रकाशित गरेका छन् । उनको लेखबाट प्राप्त हुन आएको जानकारी अनुसार कालीगण्डकी नदीको दाहिनेतर्फ रहेको टुकुचे गाउँको देब्रेतर्फ अवस्थित पहरामा ३ वटा चिहान गुफाहरू भेटिएका छन् । त्यतिबेला ती गुफाहरू बिजुली स्टेसनको लागि पानीको पाइप ओछ्याउँदा बिग्रेभत्केको अवस्थामा थिए । ती गुफाहरूबाट उनले हातले बनाएको माटाका भाँडाहरू, काँच र तामाका भाँडा र बस्तुहरू, काठको डाडु, चम्चाहरू, ढुंगाको धनुवाणको टुप्पो, कौडी मालाका मोतीदानाहरू, कस्तुरी मृगको दाँत, मानिसका हाडखोरहरू, दुईवटा सानो हाँडीझैं लाग्ने जोडिएका कलशपात्र वा जोडिएका माटाका भाँडाहरू प्राप्त गरेको जानकारी गराएका छन् । यस्ता प्राप्तिहरू उनले ताम्रपाषाण कालको हुन सक्ने बताएका छन् । किनकि उनले सो क्षेत्रबाट फलामको कुनैपनि वस्तु प्राप्त गर्न सकेका थिएनन् । ई.सं. १९९१ मा डा. शुले पुनः चोखोपानी गुफामा अध्ययन गरेर सयभन्दा बढी प्राचीन माटाका भाँडाहरू संकलन गरेका थिए ।

उपर्युक्त उपलब्धिहरूले मुस्ताङ क्षेत्रमा नेपाललगायत विश्वका पुरातत्वविद्हरूको समेत ध्यान आकर्षित हुन गयो । फलस्वरूप नेपाल सरकार, पुरातत्व विभाग र जर्मनको Coulfield meisezahl Institute for High Asian Studies, Bonn बीच 22 Nomber 1990 मा धवलागिरि अञ्चलको मुस्ताङ जिल्लाको अन्वेषण र उत्खनन् गर्ने सम्झौता भयो । ई. १९९२ देखि 'नेपाल जर्मन प्रोजेक्ट अन हाइ माउन्टेन आर्कियोलोजी'ले 'जर्मन रिसर्च सोसाएटी'को आर्थिक सहयोगमा यस क्षेत्रको पुरातात्विक अध्ययन पुनः अघि बढेको थियो । यस प्रोजेक्टको मुख्य उद्देश्य गुफामा बसोबास गर्ने मानिसहरू को थिए ? नवपाषणकालसँग यिनीहरूको सभ्यता सम्बन्धित छ वा छैन ? तिब्बत क्षेत्रका गुफा मानवहरूसँग यिनीहरूको सम्बन्ध छ छैन ? तिब्बतको सेनाले सातौं शताब्दीतिर यो क्षेत्र विजय गरेपछि यिनीहरूको राजनीतिक अस्तित्व के कस्तो रह्यो र त्यसपछि यहाँका मानिसहरूले गुफाहरू कुन कार्यका निमित्त प्रयोग गरिरहे ? गुफा लगायत यस क्षेत्रको इतिहास के-कस्तो रहेको छ भन्ने खोजी गर्नु रहेको थियो ।[13]

13 Schuhm Dieter (1993), Introduction, Ancient Nepal, No. 130-33, His Majestry's Government, Ministry of Education, Culture and Social Welfare, The Department of Archaeology, Kathmandu.

प्रोजेक्ट सम्झौता गरेकै वर्ष ई.सं. १९९० मा एन्जेला साइमन भन्ने जर्मन पुरातत्वविद्ले यस क्षेत्रको कालक्रमको जानकारी लिने उद्देश्यले झोङ, झारकोट र खिङ्गाभन्ने ठाउँमा तीन हप्तासम्म परीक्षण उत्खनन् गरिन् । उनले प्राप्त गरेको नमुनाहरूको कार्बन १४ विधि अनुसार परीक्षण गर्दा विभिन्न मितिहरू देखा परे । उनको रिपोर्ट अनुसार उनले तेस्रो शताब्दी ईसापूर्वदेखि पन्ध्रौं शताब्दी ईस्वीसम्मका वस्तु रहेको निष्कर्ष निकालिन् । यसपछि उनले ई.सं. १९९२ मा पुनः त्यस क्षेत्रमा उत्खनन् गरिन् । जसबाट निम्न कालक्रमका सामग्रीहरू प्राप्त भएका छन् । त्यसपछि १९९३ मा पनि उनको नेतृत्वमा दक्षिणी मुस्ताङमा कालीगण्डकी उपत्यकाको थाकखोलामा अवस्थित चोखोपानीको नजिक रहेको टुकुचे गाउँको नजिक चिहान गुफा लगायत अनेकौं गुफाहरू र माथिल्लो मुस्ताङ झोङ गाउँ, झारकोट नजिकको मेब्राकको गुफा प्रणालीमा उत्खनन् गरियो । चिहान गुफा लगायत अनेकौं गुफाहरूमा मानव गतिविधि प्राप्त भएको थियो । गुफा वा ओढार जस्तो बासस्थलमा स्तरक्रम अनुसार उनले उत्खनन् गरेकी थिइन् । जहाँबाट कोइला हाड, खाना पकाउने चुलो आदि प्राप्त भयो । रेडियो कार्बन तिथि अनुसार ईसापूर्व ७८५ हाराहारीको सामग्री भेटियो । अर्को गुफामा फलाम हार्ड ढुंगा र बाँसका अवशेषहरू प्राप्त गरिन् । यी गुफाबाट प्राप्त सामग्रीहरू प्रारम्भिक प्राग् ऐतिहासिक कालसँग सम्बन्धित मानिएको छ । जो चोखोपानी गुफाको प्राप्तिसँग मिल्दोजुल्दो छ । गुफाहरूबाट मानव तथा जनावरका हाडखोरहरू पनि प्राप्त भए । जसमा १४ वयस्क मानव, ३ युवा र २ बालकहरूको जीवास्म प्राप्त भयो । साना माटाका भाँडाहरू, काँस तथा धातुका गहनाहरू सम्भवतः कण्ठहारका अवशेषहरू प्राप्त भए । जसबाट लगभग ८०० ई.पू.तर्फको गतिविधिहरू प्रष्ट भए । सोही क्षेत्रमा रहेका चिहानहरूबाट कचौराहरू पनि पाइएका छन् भने ढुंगाका वाणका टुप्पाहरू ४० वटा पाइएका छन् । मेब्राकमा गरेको उत्खनन् अनुसार सबैभन्दा तल्लोस्तरमा ढुंगाको भुइँमा माटोको लेपन गरिए को तह, त्यसभन्दामाथि दोस्रोस्तरमा चिहानहरू र केही भग्नावशेषहरू सहित कोइल ाको प्राप्ति त्यसभन्दा माथिको स्तरमा पुनः भुइँमा माटोको लेपन गरिएको, चौथोमा पनि मानव बसोबासका चिह्नहरू तथा भग्नावशेष, पाँचौंस्तरमा चराका बिस्टाहरू, छैटौं तहमा पुनः भुइँमा माटोको लेपन गरिएको, सातौं स्तरमा दोस्रो झैं भग्नावशेषहरू, आठौं स्तरमा भत्किएका स्तरहरू, कोइला आदि प्राप्त भए ।[14] ती उत्खनन्मा निम्नानुसार मितिक्रमका सामग्रीहरू भेटिएको छ ।

मुस्ताङको यी प्राप्तिहरूको निष्कर्षमा पुरातत्वविद् डा. साफल्य अमात्यले यहाँका अवशेषहरूलाई १००० ईसापूर्वदेखि ५०० ईसापूर्वसम्म भएको उल्लेख

14 Simons, Angela, Trial excavation of a cave system in Muktinath valley, Ancient Nepal, No 130-133, pg.1-19.

गर्नुभएको छ ।[15]

सो परियोजनाले दक्षिणी मुस्ताङमा प्रागैतिहासिक समयपछिको प्राचीन, मध्यकालीन र आधुनिक इतिहासबारे पनि जानकारी लिने प्रयास गरेको थियो । जसबाट यो क्षेत्र सातौं शताब्दी ईस्वीदेखि नवौं शताब्दी ईस्वीसम्म विशाल तिब्बतको अधिनमा रहेको तथ्य पत्ता लागेको छ । त्यसपछि तेह्रौ शताब्दीदेखि चौधौं शताब्दीसम्म गुङथाङ, सोह्रौं शताब्दी ईस्वीमा जुम्ला राज्य, सत्रौं शताब्दी ईस्वीमा लद्दाक, १८ औं शताब्दी ईस्वीमा पुनः जुम्ला र पछिल्लो १८ औं शताब्दीमा (ईस्वी १७८९) गोरखा राज्यको अधिनमा रहेर विशाल नेपाल राज्यमा गाभिएको तथ्य पनि सो अध्ययनबाट थाहा भएको छ ।[16]

दक्षिणी मुस्ताङमा रहेको ठिनी, जोमसोम, दङ्करजोङ, कागबेनी र झारकोट भन्ने प्रमुख बस्तीहरू लगायत वरिपरिका क्षेत्रमा बनेका कोट वा किल्लाहरू उपर्युक्त ऐतिहासिक कालतिर नै बनेका हुन् । त्यस क्षेत्रमा रहेका स-साना राजा रजौटाहरूको एकआपसमा हुने आक्रमण, जुम्ला तिब्बत, लद्दाख जस्ता क्षेत्रबाट हुने आक्रमण र लुटपाटबाट सुरक्षित हुन यहाँका स्थानीय मानिसहरूले गुफालाई सुरक्षित बासस्थानको रूपमा निरन्तरता दिएको देखिन्छ । परिणाम स्वरूप उनीहरूले गुफामा सुरक्षा प्रयोजनका निमित्त घाममा सुकाएका इँटाहरूद्वारा पर्खाल लगाए र काठको झ्यालढोकाहरू बनाए । लामो समयसम्म बस्न मिल्नेगरी विभिन्न तल्लाहरूको निर्माण गरी आफू अनुकुलको कोठाहरू पनि बनाए । जुन कोठाहरूलाई अन्न भण्डार, सुत्ने र भान्साकोठाको रूपमा प्रयोग गर्ने गरि एको थियो । आक्रमण नभएको समयमा गुफाको बाहिरतर्फ खुला आकाशमुनि कालीगण्डकी नदीको किनारामा बसोबास गर्ने गरेको अवशेषहरू पनि प्राप्त भएका छन् । पछिल्लो समयमा यहाँका गुफाहरू धार्मिक प्रयोजनका लागि र गुरु लामाहरूको निवास वा ध्यान गर्ने स्थलको रूपमा प्रयोग भएको देखिन्छ ।

समुद्र सतहदेखि २७००० फिट र ४००० फिटसम्मको उचाइमा रहेको यो क्षेत्र तिब्बतको सीमाभन्दा तल अवस्थित छ । यहाँ अवस्थित प्रत्येक गुफाहरू आकारप्रकारमा एकअर्काभन्दा भिन्न किसिमका छन् । यीमध्ये कुनै गुफाहरूको मुख पर्खाल लगाई बन्द गरिएको छ भने कुनै आधा बन्द गरिएको छ । केही गुफाहरूमा पुग्न हिँड्न सक्ने गोरेटोहरू बनाइएको छ ।

पुरातात्विक अन्वेषण र उत्खननूहरूबाट प्राप्त जानकारी अनुसार प्रागैतिहासिक

15 Mishra, Tarananda, The archaeological research in the high mountains of Mustang District, An assessment of the Situation, Kathmandu, Ancient nepal, no.136, page, 150-51.

16 Seeber, Christian G., Reflections on the existence of castles and observa tower in the area, under investigation, The South Mustang (Thimi-jomsom-Dankardzong-Kagbeni-jharkot).

कालदेखि २० औं शताब्दीसम्म मानिसहरूले विभिन्न प्रयोजनका लागि यी गुफाहरूको प्रयोग गरे । सोही प्रयोजन अनुकुल चिहान बसोबास खाद्य सामग्रीको भण्डार, शत्रू र चिसो हावाबाट सुरक्षा, युद्ध गर्नका निमित्त गुफा वास्तुकलाको निर्माण गरे । पछिल्लो समयमा धार्मिक कार्य वा लामा गुरुहरू बस्नको निम्ति पनि गुफाहरूको उपयोग गरेको देखिन्छ । नेपाली विद्वान नारायण प्रसाद क्षेत्रीले स्वतन्त्र रूपले गरेको अनुसन्धानबाट प्राप्त भइको जानकारी यसप्रकार छ :

मुस्ताङको थाकखोलका दुवै किनारामा रहेका दुईदेखि चार तलासम्मका प्रशस्त कोठा तथा झ्यालढोका भएका गुफाहरू छन् । यस क्षेत्रमा बसोबास गर्ने मानिसहरूले शत्रूहरूको आक्रमण भएमा सुरक्षाका निम्ति र गुफामै बसेर शत्रूविरुद्ध ढुंगाका हतियार र धनुषवाणको प्रयोग गरेर युद्ध गर्ने गर्दथे ।

यी गुफाहरू उच्च पहाडको बीचमा र फेदमा रहेका छन् । फेदमा ढुंगाद्वारा बनेका र एक किसिमको कडा चट्टान बराबरको माटोबाट बनेका गुफाहरू छन् । चट्टानझैं माटोबाट निर्मित गुफाहरू मानवनिर्मित हुन्, जो कुनै अनुभवी वास्तुशिल्पकलाको ज्ञान राख्ने व्यक्तिबाट बनाएको झैं अनुभव गर्न सकिन्छ । उनका अनुसार हाल (२०४४ तिर) पनि तीनवटा परिवारका मानिसहरू गुफामा बसोबास गरिरहेका छन् । यस्ता गुफाहरूमा माटो र ढुंगाको पर्खाल लगाई फराकिलो बनाएर सुत्ने कोठाहरू बनाइएका छन् । धेरैजसो मानिसहरू गुफा नजिकै घर बनाएर पनि बस्ने गरेका छन् । यहाँका मानिसले आफ्नो गुफाको स्वामित्व पनि यथावत् नै कायम राखेका छन् ।

धेरैजसो गुफालाई रातो र सेतो माटोले लिपपोत गरेको देखिन्छ । गुफामा घाँसदाउरा पनि राख्ने गरिएको पाइन्छ । तत्कालीन मुस्ताङ गाउँ पञ्चायतको छोछेर गाउँका मानिसहरूको जीवन, पहिरन, सांस्कृतिक क्रियाकलाप र व्यवहारहरू हेर्दा भर्खर गुफा युग छाडी आधुनिक भौतिक युगमा प्रवेश गर्न लागेझैं देखिन्छन् । उनीहरूले डरलाग्दो ठूलाठूला भोटेकुकुर पाल्ने र रौंमा (बाहिरको मानिसलाई रौंमा भनिन्छ) आएमा घर वा गुफाबाट बाहिर निस्किएर हेर्ने गर्छन् । सिघा गाउँको झोङ वा गुफा अगाडि चेप्टो ढुंगा राखिएको छ । सो ढुंगामाथि मरेको मुर्दालाई काटेर गिद्धलाई खुवाउने ठाउँ बनाइएका छन् । त्यसभन्दा केहीमाथि अर्को गुफा छ । जहाँ दोस्रो तल्लामा १६ वटा कोठा, त्यसभन्दा माथि तेस्रो तल्लामा २५ वटा कोठा, त्यसभन्दा माथि ९ वटा कोठाहरू रहेका छन् । उनले दिएको जानकारी अनुसार कुनै समय कालीगण्डकी थुनिएको समयमा गुफामा पानी बढ्दै गएपछि गुफाका मानिसहरूको डुबेर मृत्यु समेत भएको थियो ।[17]

17 क्षेत्री, नारायण प्रसाद (वि.सं. २०४४), मुस्ताङ दिग्दर्शन, साझा प्रकाशन ।

## निष्कर्ष

मुस्ताङ जिल्लाको कालीगण्डकी नदीको किनारामा अवस्थित पहराहरूमा रहेका गुफाबाट प्राप्त पुरातात्विक महत्वका भौतिक तथा सांस्कृतिक अवशेषहरूबाट यो क्षेत्र प्रागैतिहासिक कालमा मानिसहरूको आवादी रहेको क्षेत्र थियो भन्ने प्रमाणित हुन्छ। आठ सय ईस्वीपूर्वदेखिका प्राप्त सामग्रीहरूको अवशेष तथा जीवाष्महरूले यहाँको गुफाहरूमा सो समयभन्दा निकै अघिदेखि मानवको बसोबास रहेको बोध गराउँछन्। यस क्षेत्रमा बसोबास गर्ने मानिसहरू प्रारम्भिक समयका गुफा मानव थिए। यद्यपि यी मानवहरूले प्रयोग गर्ने ढुंगे उपकरणहरूको संस्कृति निर्माण उद्योग स्थलहरूको खोजी गर्नेतर्फ ध्यानाकर्षित गर्न सकिएको छैन। यस क्षेत्रको नदी, सहायक नदी तथा शाखा नदीहरूको किनारामा प्रागैतिहासिक ढुंगाका उपकरणहरूको खोजी कार्यलाई तीव्रता दिनु आवश्यक देखिएको छ। प्रागैतिहासिक कालमा यहाँका मानवहरू क्रमशः पशुपालन समाजको विकास गर्दै कृषि युगमा प्रवेश गरेको स्पष्ट देख्न सकिन्छ। यस्तो क्रमबद्ध विकास युरोप तथा अन्य क्षेत्रका प्रागैतिहासिक स्थलहरूमा कमै देख्न सकिन्छ।

यहाँका गुफामानवहरूले गुफा वास्तुकलाको निर्माण गर्ने प्राविधिक कुशलता अनुभवको आधारमा प्राप्त गरेका थिए। जसलाई उनीहरूले ऐतिहासिक कालमा विकसित गरे। सिन्ध उपत्यकाको सभ्यतापछि एकैपटक भारतको मौर्य सम्राट अशोकको समयममा इँटाको प्रयोग देखिएको पाइन्छ। यस मुस्ताङ क्षेत्रमा विकसित धाममा सुकाएको इँटाको प्रविधि निश्चित पनि मौर्यकालीन इँटाभन्दा प्राचीन छन्। जसले पछिसम्म निरन्तरता पाएको छ। इँटा बनाउने प्रविधि यहाँ पनि पाइएको छ। भारतवर्षबाट सिकेको प्रविधि आगोमा पोलेर बनाउने प्रविधि किन प्रयोग गरेनन् ? जस्तो प्रश्नहरूको उत्तर यो विषयको अनुसन्धानले प्रष्ट पार्ने छ।

यस क्षेत्रमा प्राप्त पुरातात्विक महत्वका वस्तुहरूले पछिल्लो समय यहाँका मानिसहरू व्यापारिक मार्गको कारण मध्यएसिया तथा मध्यपश्चिम एसियामा विकसित सभ्यताहरूको सम्पर्कमा आएको प्रमाणित गर्दछ। मध्य एसियातर्फ चीनमा विकसित सिल्क व्यापार मार्गसँग जोडिएको काजकिस्तान, ताजकिस्तान तथा क्यासपियन सागर क्षेत्रमा विकसित सभ्यताहरूसँग यिनीहरूको सम्पर्क हुन पुग्यो। यस्तै, यसै मार्गबाट मध्यपश्चिम एसियाका इरान, इराक जस्ता क्षेत्रमा विकसित प्राचीन सभ्यताका मानिसहरूसँग यहाँका मानिसहरूको सम्पर्क हुन गयो भन्ने बुझिन्छ। यस मुक्तिनाथ उपत्यकाको पूर्वमा मनाङ र मुक्तिनाथ, पश्चिममा डोल्पा र लोमानथाङ, उत्तरमा तिब्बत र दक्षिणमा नेपालको पहाडी क्षेत्र भारतसँग जोडिएको उत्तरी व्यापारिक मार्गको नदी, शाखा नदी, खोलानाला क्षेत्रमा विस्तृत अध्ययनद्वारा मात्र मुक्तिनाथ क्षेत्रको अध्ययनले पूर्णता पाउने छ।

प्राचीन भारतवर्षमा विकसित भएको उत्तरापथ व्यापारिक मार्गबाट पनि यिनीहरूको तत्कालीन भारतवर्षका राज्यहरूसँग सम्बन्ध रहेको सहजै अनुमान लगाउन सकिन्छ । प्राचीन भारतवर्षका हिन्दु, बौद्ध, जैन, धर्मका साहित्यहरू, आयुर्वेदिक ग्रन्थहरू, कौटिल्यको अर्थशास्त्र जस्ता साहित्यहरूमा उल्लेखित उत्तरतर्फ जंगलमा गुफा, कन्दरा तथा पहाड र हिमालय क्षेत्रमा बसोबास गर्ने किरातहरूको उल्लेखले पनि प्राचीन भारतीय राज्यहरूसँग यिनीहरूको सम्बन्ध रहेको स्पष्ट पार्दछ । भारत वर्षसँगको सम्पर्ककै कारण शालिग्राम मुक्तिनाथ लगायत निलगिरि हिमाल कालीगण्डकी नदी दामोदर हिमाल, कुण्ड तथा तालहरू हिन्दुधर्मका देवीदेवताहरूको बासस्थानको रूपमा यो क्षेत्र प्रसिद्ध भयो । कालान्तरमा तीर्थ क्षेत्रको रूपमा यो क्षेत्र प्रसिद्ध हुन गयो ।

सातौं शताब्दीतिर राजा स्रङचङ गम्पोले विशाल तिब्बतमा राज्य गरे । यिनको समयमा तिब्बतमा बौद्ध धर्मले पश्रय पायो । पद्मसम्भव जस्ता प्रसिद्ध बौद्ध विद्वान देवताका रूपमा पूजित छन् । उनको प्रभावले पनि तिब्बतमा प्रचलित बौद्ध धर्मले लोकप्रियता प्राप्त गऱ्यो । शक्तिशाली राजा स्रङचङ गम्पोको अवसानपछि तिब्बतमा उदाएका शक्तिशाली राजाहरू र लामाहरूले आ-आफ्नो तर्कद्वारा बौद्ध धर्मलाई व्याख्या गर्न थाले । परिणामस्वरूप तिब्बतमा बौद्ध धर्मका विभिन्न सम्प्रदायहरूको विकास हुन गयो । तिब्बतको बौद्ध धर्मको प्रभावले मुस्ताङ क्षेत्रमा पनि प्रभाव पारेको पाइन्छ । परिणाम स्वरूप त्यस क्षेत्रमा विभिन्न बौद्ध सम्प्रदायका गुम्बा, मन्दिर, देवदेवीको मूर्ति आदि स्थापित भए । यी गुम्बा तथा मन्दिरहरूमा रहको प्राचीन ग्रन्थहरूले यस क्षेत्रको प्राचीन तथा मध्यकालीन र आधुनिक इतिहासलाई प्रकाश पारेको छ भन्ने सर्वविदितै छ । तर पनि ग्रन्थहरूको व्यापक खोजी र तिनीहरूबाट प्राप्त हुने तथ्य संकलन गर्न आवश्यक देखिन्छ ।

यस क्षेत्रमा प्रागैतिहासिक कालदेखि प्रचलित प्राकृतिक धर्मबाट विकसित भएको धर्म भोन्बु, साङ्गे, युङहुङ, भुन्जी, तेम्बा आदि हो जसलाई पछि बोन धर्म भनियो । ऐतिहासिक कालका बोनपाशेराबलाई पछि बोन धर्मको प्रवर्तक मानियो । यस धर्मसँग सम्बन्धित कथा, किंवदन्तीको खोजी गर्नु र यस क्षेत्रमा रहेका मौखिक इतिहासको खोजी गर्नुपर्ने देखिन्छ जसबाट यस क्षेत्रको इतिहास प्रष्ट हुन्छ । यस क्षेत्रमा बसोबास गर्ने समुदायहरूको मानवशास्त्रीय दृष्टिकोणबाट अध्ययन हुनु आवश्यक छ । जसबाट गुफा मानवहरूसँग हालका मानव समुदायहरूको सम्बन्ध, समाज र संस्कृतिलाई प्रष्ट पार्न सकिने छ । बहुआयामिक दृष्टिकोणबाट यस क्षेत्रको अध्ययन गर्नु आवश्यक देखिन्छ ।  विशेषगरी विद्वानहरूले यहाँको संस्कृतिलाई तिब्बती संस्कृतिको प्रभाव भने तापनि यस क्षेत्रमा विकसित मौलिक

संस्कृति जुन प्रागैतिहासिक कालदेखि विकसित हुँदै आएको देखिन्छ । जसलाई थप अध्ययन गरी उजागर गर्नुपर्ने देखिन्छ ।

## सन्दर्भ सामग्री


1. Angela, Simons and Shrestha, Sukrasagar (1994), First result of the 1993 archaeological investigations in cave connected ruined site, No138, pg. 12.

2. Amatya, Safalya (1998), Foreword, Ancient Nepal, No. 140, pg. 1-2.

3. Fagen, Brisn M. (1947), World Prehistory, Bosten Little Brown and Company, P.3 .

4. Fagen, Brisn M. (1947), World Prehistory, Bosten Little Brown and Company, P.83-87.

५. Messerschmidt, Donald (1984), A Geography adsacred symbolism of Muktinath Shrine, Nepal, Himalayan Review, vol-XV, P. 39-50.

6. Messerschmidt, Donald (1984), A Geography adsacred symbolism of Muktinath Shrine, Nepal, Himalayan Review, vol-XV, P. 39-50.

7. Messerschmidt, Donald And Jyoti Sharma, A social process on the Hindu pilgrimage to Muktinath, Kailash 09/0203-02.

8. Mishra, Tarananda, The archaeological Research in the high Mountains of Mustang District, An Assessment of the situation, Kathmandu, Ancient Nepal, no.136, page, 147-52.

9. Mishra, Tarananda, The Archaeological Research in the high Mountains of Mustang District, An Assessment of the Situation, Kathmandu, Ancient nepal, no.136, page, 147-52.

10. Mishra, Tarananda, The archaeological research in the high mountains of Mustang District, An assessment of the Situation, Kathmandu, Ancient nepal, no.136, page, 150-51.

11. Report on the 2013/14 field research in Upper Mustang and narphu district of Nepal by the team of nepal's Department of Archaeology and the sky door foundation, Peter.

12. Sharma, Janak Lal (1994), A Brief Note on thr seminar on high mountain Archaeology, Ancient Nepal, no. 136, His Majesty's Government, Ministry of Education Culture and Social Welfare, The Department of Archaeology.

13. 10. Sharma, janak lal (1994), A brief note on the seminar on high mountain Archaeology, Ancient Nepal, no. 136, His Majesty's Government, Ministry of Education Culture and Social Welfare, The Department of Archaeology.

14. Schuhm Dieter (1993), Introduction, Ancient Nepal, No. 130-33, His Majestry's Government, Ministry of Education, Culture and Social Welfare, The Department of Archaeology, Kathmandu.

15. Seeber, Christian G., Reflections on the existence of castles and observa tower in the area, under investigation, The South Mustang (Thimi-jomsom-Dankardzong-Kagbeni-jharkot).

16. Simons, Angela, Trial excavation of a cave system in Muktinath valley, Ancient Nepal, No 130-133, pg.1-19.

१७. ऐजन, पृ. १०३ देखि १३४ तथा द्यगचपष्तत, M.C. The Old Stone age, 1985 Rupa and co. Delhi, P. 137 to 172

१८. प्रधान, केदारनाथ (वि.सं.२०४५) नेपालको १.१ करोड वर्षअघिको रामनरवानरले पिथेकसको सन्दर्भमा आदि मानवको उद्गम र उद्गमस्थल, प्राचीन नेपाल, संख्या १०६, श्री ५ को सरकार शिक्षा तथा संस्कृति मन्त्रालय, पुरातत्व विभाग, काठमाडौं ।

१९. क्षेत्री, नारायण प्रसाद (वि.सं. २०४४), मुस्ताङ दिग्दर्शन, साझा प्रकाशन ।

२०. क्षेत्री, नारायण प्रसाद (वि.सं. २०४४), मुस्ताङ दिग्दर्शन, साझा प्रकाशन, काठमाडौं पृ. ३देखि २८.

# सम्भावित विश्वसम्पदा सहर कीर्तिपुर : इतिहास र धार्मिक एवं सांस्कृतिक स्मारकहरू



✍ डा. महेश कुमार आचार्य*

**लेख सार**

संयुक्त राष्ट्रसंघ शिक्षा, विज्ञान तथा संस्कृति संगठन (युनेस्को UNESCO) ले संसारभरका विश्वस्तरीय महत्वका सम्पदा क्षेत्रहरूको सूची निर्माण गर्ने र प्रकाशन गर्ने गर्दछ । यस सूचीमा नेपालका २ सांस्कृतिक स्मारक क्षेत्रहरू र दुई प्राकृतिक स्थलहरू सूचीकृत छन् । यसबाहेक युनेस्कोले विश्व सम्पदाको सम्भावित सूची (Tentative List) पनि प्रकाशित गर्ने गर्दछ । नेपालका यस्ता १५ सांस्कृतिक र ऐतिहासिक महत्वका स्थलहरू यस सूचीमा परेका छन् । यीमध्ये एक हो मध्यकालीन बस्ती कीर्तिपुर । यो मध्यकालीन बस्ती काठमाडौं जिल्लाको कीर्तिपुर नगरपालिकाभित्र रहेको छ । विश्वकै महत्वपूर्ण सम्पदा स्थलको रूपमा नेपाल सरकार र युनेस्कोले पहिचान गरिसकेको यो स्थलको ऐतिहासिकता र यहाँका प्रमुख सांस्कृतिक स्मारकहरूको व्यवस्थित अध्ययन हुन नसकेको अवस्थालाई प्रमुख शोध समस्या पहिचान गरी कीर्तिपुरको ऐतिहासिकता खोजी गर्दै युनेस्कोले कीर्तिपुरलाई सम्भावित सूचीमा राख्नको लागि तोकेका वर्गीकृत १२ स्मारकहरूको सांस्कृतिक परिचय र ऐतिहासिकता प्रकाशमा ल्याउनु लेखको मुख्य उद्देश्य रहेको छ । अवलोकन, अन्तर्वार्ता, तथा प्रकाशित पुस्तक तथा लेखहरूबाट तथ्यहरू संकलन गरी वर्णनात्मक शैलीमा यो लेख तयार पारिएको छ । अध्ययनबाट यो सहरमा मानव बसोब ासको इतिहास लिच्छविकालपूर्वसम्म पुग्न सक्ने, व्यवस्थित सहर निर्माणको

*सह-प्राध्यापक, नेपाली इतिहास संस्कृति तथा पुरातत्व केन्द्रीय विभाग, त्रि.वि.

इतिहास एघारौँ शताब्दीसम्म पुग्न सक्ने, मध्यकालमा यो किल्लाबन्द सहरको रूपमा विकसित भएको र गोरखाली आक्रमणको क्रममा उक्त किल्ला एवं सहरको भौतिक संरचनाको विनाश भएको तथ्य प्रकाशमा आएको छ। सांस्कृतिकरूपले कीर्तिपुर दुई क्षेत्रमा विभक्त रहेको, पश्चिमतर्फको शिवगल क्षेत्र सांस्कृतिक इतिहासको दृष्टिले पुरानो रहेको, यो क्षेत्र हिन्दु संस्कृतिको केन्द्रको रूपमा विकसित रहेको तथ्य र पूर्वतर्फको देवगल क्षेत्र तुलनात्मक रूपले पछिल्लो समयमा विकास भएको र वज्रयानी बौद्ध संस्कृतिको केन्द्र रहेको तथ्य पनि प्रकाशमा आएको छ। यी दुवै स्थलमा रहेका सांस्कृतिक स्मारकहरूले हिन्दु तथा वज्रयानी बौद्ध संस्कृतिको प्रतिनिधित्व गर्ने र कीर्तिपुरलाई विश्व सम्पदाको रूपमा परिचित गराउने सामर्थ्य राख्दछन् भन्ने तथ्य पनि यो लेख मार्फत् उजागर भएको छ।

**शब्द कुञ्जिका** : मध्यकालीन बस्ती, देवगल क्षेत्र, शिवगल क्षेत्र, कीर्तिपुर किल्ला।

## १.विषय परिचय

कीर्तिपुर मध्यकालीन एक नेवार बस्ती हो। यो बस्ती हाल कीर्तिपुर नगरपालिका क्षेत्रमा पर्दछ। काठमाडौंदेखि करिब ६ किलोमिटर दक्षिण पश्चिममा अवस्थित यो क्षेत्र उत्तर पश्चिमदेखि पूर्व दक्षिणतर्फ फैलिएको डाँडोको शिखरमा छ। संयुक्त राष्ट्रसंघ शिक्षा, विज्ञान तथा संस्कृति संगठन (युनेस्को UNISCO ) ले संसारभरका विश्वस्तरीय सांस्कृतिक महत्वका सम्पदाहरूको सूची निर्माण गर्ने र प्रकाशन गर्ने गर्दछ। यस सूचीमा नेपालका दुई सांस्कृतिक स्मारक क्षेत्रहरू र दुई प्राकृतिक स्थलहरू परेका छन्। यस बाहेक युनेस्कोले विश्व सम्पदाको सम्भावित सूची (Tentative List) पनि प्रकाशित गर्ने गर्दछ। विश्व सम्पदा केन्द्रले जारी गरेको Operational Guideline for the Implementation of the World Heritage Convention को च्याप्टर II C दफा ६२ देखि ७६ सम्म यस्तो सम्भावित सूचीको राज्यपक्षबाट गर्ने प्रस्ताव र सूचीमा समावेश गरिने विधि र प्रकृयाको उल्लेख भएको छ ( World Heritage Centre, 2021, p 27--29)। यसमा उल्लेखित प्रकृया पूरा गरी विश्वसम्पदाको सम्भावित सूचीमा नेपालका यस्ता १५ सांस्कृतिक र ऐतिहासिक महत्वका स्थलहरू परेका छन्। यीमध्ये एक कीर्तिपुर पनि हो। नेपाल सरकारको प्रस्तावमा सन् २००८ जनवरी ३० देखि यो बस्ती युनेस्कोको विश्व सम्पदा सम्भावित सूचीमा सूचिकृत रहेको छ। यो कुनै पनि सांस्कृतिक स्मारक क्षेत्रलाई विश्व सम्पदामा सूचिकृत गर्ने प्रारम्भिक पाइला हो।

कीर्तिपुर सहरको नामले औपचारिक परिचय पाएको यो बस्तीलाई स्थानीय

बासिन्दाहरूले भने किपू : सहर भन्न रुचाएको पाइन्छ। ऐतिहासिक सामाग्रीहरूमा भने यसलाई फरक फरक नामले सम्बोधन गरिएको देखिन्छ। गोपाल राजवंशावलीमा कीर्तिपुरलाई गुन्दे क्वाठ भनिएको छ ( Vajracarya & Malla, 1985, p. 94 )। क्वाँठ किल्ला बुझाउने नेवारी शब्द हो भने गुँन्दे वा गुँदे कीर्तिपुरलाई बुझाउने पुरानो स्थानीय नाम हो जसको अर्थ जंगलमाथिको वा जंगलले घेरिएको बस्ती भन्ने हुन्छ। बाघभैरव प्राङ्गणको मनविनायक मन्दिरमा रहेको ने.सं ६२३ माघ महिना (सन् १२०३)को अभिलेखमा यस ठाउँलाई कीर्तिपुरी तथा गुंदे दुवै नाम प्रयोग गरिएको छ (श्रेष्ठ, वि.सं.२०५७,पृ.८८)। यस अभिलेखले मध्यकालसम्म कीर्तिपुरकै अर्को नाम गुंदे वा गुन्दे थियो भन्ने स्पष्ट भएको छ। यसै गरी सन् १७५९ मा नेपाल आउने इटलीका धर्म प्रचारक पादरी Father Giuseppe De Ravato ले यो सहरलाई किपोली (Cipoli) नामले सम्बोधन गरेका छन् (Father,1799, p.308)। यसबाट अठारौँ शताब्दीसम्म यस सहरलाई किपोली पनि भनिने गरेको स्पष्ट हुन आएको छ। आजभोलि भने यो सहर कीर्तिपुर नामबाटै परिचित रहँदै आएको छ। यो नामको विषयमा आम मानिसमा गौरवपूर्ण सहर भन्ने अर्थमा कीर्तिपुर नाम प्रसिद्ध भएको विश्वास रहेको छ।

कीर्तिपुर, किपू: किपोली, गुंदे वा गुन्दे जस्ता नामले परिचित यो मानव बस्ती ऐतिहासिकताको दृष्टिले र सांस्कृतिक सम्पन्नताको दृष्टिले पनि ज्यादै महत्वपूर्ण रहेको छ। त्यसैले यो आलेखमा समग्र कीर्तिपुर सहरको ऐतिहासिक विकासक्रम खोजी गरिएको छ र विश्व सम्पदाको सम्भावित सूचीमा समावेश भएका यहाँका महत्वपूर्ण सांस्कृतिक स्मारकहरूको ऐतिहासिकता र सांस्कृतिक विशेषताहरूको खोजी गरिएको छ। यस्तो अनुसन्धान र प्रकाशनले मात्र यी स्मारकहरूको संरक्षण सम्भव देखिन्छ।

## २.अध्ययन विधि

यो एक ऐतिहासिक र सांस्कृतिक अन्वेषण कार्य हो। यस्तो प्रकृतिको अध्ययन वा खोज गुणात्मक प्रकृतिको हुनु स्वभाविकै हो। त्यसैले यस खोजी कार्यको लागि गुणात्मक प्रकृतिको शोध ढाँचा अवलम्बन गरिएको छ। यसै आधारमा यस खोजी कार्यमा प्राथमिक र द्वितीयक स्रोतबाट तथ्यहरू संकलन गरिएको छ। प्राथमिक स्रोत अन्तर्गत अवलोकन र अन्तर्वार्ता विधि प्रयोग गरी तथ्यहरू संकलन गरिएको छ। स्मारकहरूको कलाशैली, वास्तुकलात्मक ढाँचा र स्मारकहरूमा गरिने धार्मिक र सांस्कृतिक अभ्याससम्बन्धी तथ्यहरू अवलोकन विधिबाट संकलन गरिएको छ। कीर्तिपुरको ऐतिहासिकतासम्बन्धी जनधारणा, स्मारकको निर्माण समय र निर्मातासम्बन्धी जनधारणा तथा यहाँका धार्मिक स्मारकहरूमा गरिने धार्मिक र सांस्कृतिक अनुष्ठानहरूका विषयमा पनि

अन्तर्वार्ताबाट तथ्यहरू संकलन गरिएको छ। यस कार्यमा कीर्तिपुर क्षेत्रमा बसोबास गर्ने धर्म र संस्कृतिमा रुचि राख्ने ३ जना उत्तरदातासँग अन्तर्वार्ता लिइएको छ। प्राप्त तथ्यहरूको विश्लेषण र व्याख्याको लागि संस्कृति विषयका प्राध्यापक र सह प्राध्यापक जस्ता विषय विज्ञहरू दुईजनासँग अन्तर्वार्ता लिइएको छ। विश्वसम्पदा सूची र सम्भावित सूची निर्माण एवं युनेस्को समक्ष प्रस्तुत गर्ने सरकारी नीति, विधि र प्रकृया सम्बन्धमा पुरातत्व विभागका एक पुरातत्व अधिकृतसँग अन्तर्वार्ता लिइएको छ। यी सबै उत्तरदाताहरूको छनोट सम्भावनारहित उद्देश्यपूर्ण नमूना छनोट विधिबाट छनोट गरिएको छ। कीर्तिपुरको मानव बासोबास र सहरीकरणको इतिहास र स्मारकहरूको ऐतिहासिकतासम्बन्धी अधिकांश तथ्यहरू द्वितीयक स्रोत अन्तर्गतका प्रकाशित पुस्तक, लेख तथा शोध प्रतिवेदनहरूबाट संकलन गरिएको छ। प्राथमिक र द्वितीयक स्रोतहरूबाट प्राप्त तथ्यहरूको सम्पादन कार्य तथा सत्यता परीक्षण कार्यपछि मात्र शोधमा उपयोग गरिएको छ। प्राप्त तथ्यहरूलाई वर्णनात्मक शैलीमा प्रस्तुत गरेर आलेख तयार पारिएको छ। तथ्यहरूले संकेत गरेका नवीन सत्यहरूमाथि छलफल गरी निष्कर्षको रूपमा प्रस्तुत गरिएको छ।

## ३. कीर्तिपुरमा मानव बसोबासको आरम्भ

कीर्तिपुर क्षेत्रमा मानव बसोबासको इतिहासबारेमा स्पष्ट भन्न सकिने पुरातात्विक आधार प्राप्त हुन सकेको छैन। पौराणिक साहित्यहरूले भने काठमाडौं उपत्यका जलमग्न रहेकै अवस्थामा कीर्तिपुर क्षेत्रमा बसोबास आरम्भ भएको वर्णन गरेको पाइन्छ। स्कन्दपुराण अन्तर्गतको नेपाल महात्म्य पुराणले चन्दनगिरि (चन्द्रागिरि)देखि उत्तरतर्फको समतल क्षेत्रमा (कीर्तिपुर डाँडोको दक्षिणतर्फको भागमा) महेन्द्र दमन नामक राक्षसले सुप्रभानगर निर्माण गरेको, उसको उत्तराधिकारी दैत्यले चोभारको बाँध थुनेर उपत्यकालाई जलमग्न बनाएको, यहाँ कच्छपासुर, बाणासुर, दानासुर आदि राक्षसहरूले शासन गरेको र चोभारमा जलविनायक उत्पन्न भएपछि उनले उक्त राक्षसहरूको सुप्रभानगर ध्वस्तपारी राक्षसहरूलाई पाताल भगाएर यहाँ मानव बसोबास आरम्भ गराएको वर्णन गरेको छ (शर्मा, १९७६, पृ.९६)। पुराणको यो वर्णन पूर्णतया सत्य पुष्टि हुन सक्दैन। तर यस वर्णनले उपत्यकाभन्दा पहिले यो क्षेत्रमा गैर हिन्दुहरूको बसोबास आरम्भ भएको कुराको भने संकेत गर्दछ। किनभने हिन्दु धार्मिक साहित्यहरूले गैर हिन्दुहरूलाई प्राय असुर वा राक्षसको रूपमा व्याख्या गर्ने गरेको पाइन्छ। भुवनलाल प्रधानले पनि उपत्यका जलमग्न रहेको अवस्थामै प्रथम मानव आबादी शतरुद्र पर्वत क्षेत्र (टोखा, बुढानिलकण्ठमाथिको पहाड) मा भएको र दोस्रो मानव बस्ती सुप्रभानगर अर्थात् कीर्तिपुर आसपासको क्षेत्रमा भएको उल्लेख गरेका छन्



मध्यकालिन बस्ती कीर्तिपुर

(प्रधान, वि.सं.२०७६ पृ.८५) । यस आधारमा कीर्तिपुर डाँडो मै नभए तापनि यस आसपासको क्षेत्रमा मानव बसोबासको इतिहास निकै पुरानो देखिन्छ ।

वंशावलीहरूले नेपालमा राजनैतिक इतिहासको आरम्भ गोपालवंशीय शासकहरूले गरेको बताएका छन् । कतिपय स्थान नाम, रीति परम्परा तथा जनविश्वासको आधारमा कीर्तिपुर डाँडोमै पनि नेपालका यी प्रथम राजवंश मानिने गोपालहरूकै शासनकालमा मानव बस्ती बसेको परोक्ष संकेत पाइन्छ । यहाँ अहिलेसम्म गोपाली थरका नेवारहरूको बसोबास रहेको, सागल (गाइ गोठ) नामको एक टोल रहेको र ग्वा पुखु (गोपाल पोखरी) नामको एक पोखरी रहेको छ । यस बाहेक यहाँको कोतघरमा बडा दशैंको अवसरमा द्वादशीको दिनमा प्रधानहरूले गोपाली परिवारको प्रतिनिधिबाट टीका ग्रहण गर्ने परम्परा रहेको (कीर्ति अध्ययन तथा अनुसन्धान मण्डल, वि.सं.२०७३,पृ.२) र ग्वापुखुमा घण्टाकर्ण जात्राको अवसरमा गोपालीहरूले नै पोखरीको चारै कुनामा भातको मुखाकृति बनाई कालो भटमासको आँखा र लसुनको जुङ्गा बनाई त्यस आकृतिमा पूजा गर्ने प्रचलन केही अघिसम्म पनि रहेको (श्रेष्ठ, वि.सं.२०५७, पृ.४) देखिन्छ । यी तथ्यहरूलाई हेर्दा हालका गोपालीहरूका पूर्खा सम्भवत : नेपालका प्रथम राजवंश गोपालहरूको बसोबास कीर्तिपुरमा थियो भन्ने विश्वासयोग्य अनुमान गर्न सकिन्छ । सायद यसैलाई आधार बनाएर कीर्तिपुरको उत्पत्ति सम्बन्धमा चर्चा गर्दै भुवनलाल प्रधान लेख्दछन् :

..तर काठमाडौं खाल्डो अति प्राचीनकालमा धापिलो नै भएको हुनाले

> यसको दक्षिण पश्चिमपट्टिको केही उचो भागमा गौशाला बनाई बसोबास गरिरहेका गोपाल अर्थात् गोठालाहरूको बस्तीको चर्चा भेटिन्छ । ती गोठालाहरूमध्येकै एकजना 'नेप' नाउँ गरेका गोठालाको गाई मार्फत् पशुपतिनाथ फेला परेको कुरा वंशावलीहरूमा उल्लिखित भएबाट आजकलको कीर्तिपुरमा उपत्यकाको अति प्राचीन, सम्भवतः पहिलो आबादी रहेको सम्भावनातिर सङ्केत मिल्दछ (प्रधान, वि.सं.२०७६,पृ८४) ।

गोपालहरूपछिका नेपालका शासक महिषपालको समयमा कीर्तिपुरमा मानव बसोबासको गतिविधिसम्बन्धी जानकारी प्राप्त हुन सकेको छैन । उनीपछि नेपालमा शासन गर्ने किराँतहरूको समयमा भने कीर्तिपुरमा मानिसहरूको बसोबास रहेको विश्वास गरिन्छ । नेपालको इतिहास लेख्ने आरम्भिक समयका इतिहासकार डेनियल राइटलाई उधृत गर्दै भुवनलाल प्रधानले सम्राट अशोक उपत्यका आएको वेला कीर्तिपुरमा पनि एउटा स्तुप बनाएका थिए भनेका छन् (प्रधान, वि.सं.२०७६, पृ.८५) । वंशावलीको आधारमा लेखिएको यो कुरा प्रमाणित तथ्य भने होइन । यद्यपि यस भनाइले किराँतकालमा पनि कीर्तिपुर मानव आबादीयुक्त क्षेत्र थियो भन्ने कुरातर्फ भने संकेत गर्दछ । किनभने वंशावलीमै भारत पटलीपुत्रका मौर्य सम्राट अशोक चौधौँ किराती राजा स्थुंकोको समयमा नेपाल आएको र धेरै चैत्यहरू निर्माण गरेको वर्णन गरिएको छ (Wright,1990 p.110) । वंशावलीका यी भनाइका आधारमा कीर्तिपुरको चिलंचो चैत्यलाई अहिले पनि अशोकले बनाएको चैत्य भन्ने गरिन्छ । यद्यपि यो विश्वास ऐतिहासिक तथ्यबाट पुष्टि भएको छैन । वंशावलीका यी वर्णनहरू किराँतकालमा पनि कीर्तिपुर निर्जन स्थान थिएन भन्ने कुराको संकेत भने पक्कै हो ।

किराँतहरूलाई विस्थापित गरी भारतको वैशालीक्षेत्रबाट आएका लिच्छविहरूले नेपालमा शासन गरेका थिए । उनीहरूको शासनकालमा कीर्तिपुरका डाँडो आसपासका चोभार, चारघरे, खासीः बजार, ट्याङ्लाफाँट जस्ता ठाउँका साथसाथै कीर्तिपुर डाँडोका उमामहेश्वर क्षेत्र र बाघभैरव क्षेत्रमा मानव बसोबास रहेको पुष्टि हुने पुरातात्विक प्रमाणहरू प्राप्त भएका छन् (आचार्य, वि.सं.२०७७, पृ.५५-६१) । यस तथ्यले लिच्छविकालमै कीर्तिपुरको पश्चिमोत्तर क्षेत्रका मानिसहरूको बसोबास थियो भन्ने पुष्टि भएको छ । लिच्छविकालपछि भने यहाँ व्यवस्थित सहर बसाइएको ऐतिहासिक विवरण प्राप्त भएका छन् ।

## ४.कीर्तिपुरमा व्यवस्थित किल्ला बन्द सहरको विकास

नेपाल संवत्को आरम्भ (सन् ८७९) अर्थात् नवौँ शताब्दी पछिको ऐतिहासिक समयलाई सामान्यतया मध्यकाल भन्ने परम्परा रहेको छ । यस आधारमा

मध्यकाल आरम्भको करिब दुईसय वर्षपछि शिवदेव नामका एक राजाले कीर्तिपुरमा पूर्वाधार सहितको व्यवस्थित सहर बनाएको ऐतिहासिक विवरण एक वंशावलीमा उल्लेख भएको छ। गोपालराज वंशावलीको पत्र २४ (क) मा “ ने.सं. २१९ लाग्दा श्री शिवदेव राजा भएको र उनले कीर्तिपुरमा वलवल देवीको तपस्या गरेको, नहर बनाएको, ठाउँठाउँमा ढुङ्गेधारा र पोखरी बनाएको” उल्लेख गरिएको छ (Bajracharya, & Malla,1985, p.80)। वंशावलीले उल्लेख गरे जस्तै ने.सं. २१९(सन् १०९८)मा शिवदेव नामका राजा थिए वा थिएनन् ? भन्ने तथ्यलाई विचार गर्दा इतिहासकार वेण्डालले कीर्तिपुर स्थापना गर्ने राजा शिवदेवका ने.सं.२४० र ने.सं. २४३ (सन् १११९ र ११२२) का दुइवटा अभिलेख फेला पारेको चर्चा गरेका छन् (उधृतः प्रधान, वि.सं.२०७६, पृ.८७) । साथै मेरी स्लसर नामक लेखकले पनि सन् १०९९ देखि ११२६ सम्म नेपालमा शिवदेव नामका राजाले राज्य गरेको विवरण उल्लेख गरेकी छन् (Slusser, 1982, p.389)। यी तथ्यका आधारमा वंशावलीले उल्लेख गरेको ने.सं. २१९ तिर शिवदेव नामका राजा रहेको र उनले कीर्तिपुको मानव बस्तीलाई व्यवस्थित गराउने कार्य गरेको थाहा हुन आएको हो ।

आरम्भदेखि नै यो सहर किल्लाबन्द सहरकै रूपमा विकसित भएको देखिन्छ । वंशावलीहरूमा उल्लिखित यस सहरको पुरानो नाम गुन्दे वा गुँदेको नेवारी भाषाको अर्थ वन दुर्ग अर्थात् वनले घेरिएको बस्ती भन्ने हो । यस नामले पनि यो सहरका निर्माताले चारैतिर वनले घेरिएको किल्लायुक्त सहर बनाएक थिए भन्ने कुराको संकेत गर्दछ । यसबाहेक गोपाल वंशावलीले एक प्रसङ्गमा “सं ३६२ (सन् १२४२) दिराषाढ कृष्ण अष्टमीको दिन गुन्दे क्वाठ (कीर्तिपुर किल्ला.... खुले” भनिएको छ (Vajracarya & Malla, 1985, p. 94) । यहाँ गुँन्देलाई किल्ला भनिएको र किल्ला खुले भन्ने स्पष्ट वाक्य प्रयोग भएको हुँदा पुरानो गुँदे अर्थात् कीर्तिपुर सहरमा सन् १२४२ मा बलियो किल्ला र किल्लामा ढोकाहरू समेत निर्माण भैसकेको देखिन्छ। अभिलेखहरूमा कीर्तिपुरलाई क्वाठ भनिएको र यहाँका प्रशासकहरूलाई क्वाठ नायक भनिएबाट पनि मध्यकालभरि यो एक किल्ला नै रहेको स्पष्ट हुन्छ। यस कीर्तिपुर किल्लाको रक्षा र प्रशासन सञ्चालनका लागि पाटन राज्यका तर्फबाट ने.सं.४९१-१०११(सन् १३७०-१८९०) को बीचमा नियुक्त भएका १७ जना क्वाठनायक (किल्ला प्रमुख)हरूको नामावली शुक्रसागर श्रेष्ठले विभिन्न अभिलेखहरूबाट संकलन गरी प्रकाशित गर्नुभएको छ (श्रेष्ठ, वि.सं. २०५७,पृ.१३) । यसरी सन् १३७० देखि कीर्तिपुर क्षेत्रका प्रशासकहरूलाई निरन्तर क्वाठ नायक अर्थात् किल्ला प्रमुख भनिएको हुँदा चौधौँ शताब्दीमा पनि यो क्षेत्र किल्लाकै रूपमा रहेको स्पष्ट हुन आएको छ ।

सत्रौँ शताब्दीको उत्तरार्धमा पाटनका तात्कालीन राजा श्रीनिवास मल्ल र योगनरेन्द्र मल्लले कीर्तिपुरलाई राजधानी बनाएर केही समय राज्य गरेका थिए । सायद यही समयमा यो सहरको किल्ला तथा किल्लाका ढोकाहरू बढी मजबुत र व्यवस्थित पारिएको अनुमान गर्न सकिन्छ । यो समय कीर्तिपुरको सांस्कृतिक उन्नतिको उत्कर्षकाल पनि थियो । यसै समयमा यहाँका अधिकांश हिन्दु तथा बौद्ध सांस्कृतिक स्मारकहरू निर्माण र व्यवस्थापनका कामहरू भएको देखिन्छ भने  यहाँका अनेकौं अमूर्त सास्कृतिक सम्पदाहरू पनि यही समयमा व्यवस्थित हुन पुगेका थिए ।

नेपाल एकीकरणको समयमा भएको युद्धबाट यहाँको किल्ला, ढोका र सांस्कृतिक वैभवमा क्षति पुग्न गएको थियो । यो कुरा एकीकरणको लगत्तै पछि नेपाल आएका फादर गुसेफ र एच.ए. ओल्डफिल्डको वर्णनले स्पष्ट पार्दछ । फादर गुसेफले *(Cirtipur)* कीर्तिपुर युद्धमा गोर्खालीले किल्ला कब्जा गर्न गरेको प्रयासको वर्णन गर्दै कतैबाट सहायता नपाएपछि लामो समयको प्रतिकारपछि मात्र गोर्खालीहरूले कीर्तिपुरको किल्लाहरू र सबै ढोकाहरू कब्जा गर्न सफल भएको विवरण उल्लेख गरेका छन् (Father,1799, p.318)। अठारौँ शताब्दीको उत्तरार्धदेखि उन्नाइसौँ शताब्दीको आरम्भतिरको कीर्तिपुर किल्लाको वर्णन गर्ने अर्का लेखक H.Ambrose Oldfield ले कीर्तिपुर किल्लाको जीर्ण अवस्थाको वर्णन गरेका छन् । उनले एकीकरणपछि कीर्तिपुर सहर तीव्ररूपले क्षय हुदै गएको, पुराना मन्दिरहरू र सार्वजनिक भवनहरू पुनः निर्माण नगरिएको,  पुराना गढ पर्खालहरू र ढोकाहरू अझै अस्तित्वमा रहेको तर ज्यादै जीर्ण अवस्थामा रहेको बताएका छन् (Oldfield, 1880, p127) । यसरी मध्यकालको अन्त्यसम्म आइपुग्दा कीर्तिपुर सरह पूर्ण विकसित ऐतिहासिक र सांस्कृतिक मानव सभ्यताको रूपमा विकसित हुन पुगेको र एकीकरणको क्रममा त्यहाँको सांस्कृतिक संरचनामा ठूलो क्षति भएको र यो सहरको सांस्कृतिक वैभव राज्यको तर्फबाट उपेक्षित भएको देखिन्छ ।

## ५. कीर्तिपुरका प्रमुख दुई धार्मिक एवं सांस्कृतिक क्षेत्र र ती क्षेत्रका महत्वपूर्ण स्मारकहरू

धार्मिक र सांस्कृतिकरूपले कीर्तिपुर सहर शिवगल र देवगल गरी प्रमुख दुई सांस्कृतिक क्षेत्रमा विभाजित भएको छ । बाघभैरव मन्दिरसम्मको पश्चिमी भाग शिवगल र योभन्दा पूर्वको देवगल क्षेत्र मानिन्छ । उत्तर दक्षिण फैलिएको मूल सडक दथुंलले यी दुई धार्मिक र सांस्कृतिक क्षेत्रलाई छुट्टाएको छ । शिवगल क्षेत्र हिन्दु सांस्कृतिक क्षेत्र र देवगल बौद्ध क्षेत्रको रूपमा रहेका छन् । यस्तो धार्मिक र सांस्कृतिक विभाजन गराउने व्यक्ति जगतपाल वर्मा (.सन् १५१४तिरका) थिए (श्रेष्ठ, वि.सं.२०५७, पृ.२८) । यस्तो विभाजन

पछि लामो समयसम्म देवगल क्षेत्रमा बौद्ध धर्मावलम्बीहरूको बसोबास केन्द्रित भयो र उनीहरूले बौद्ध स्मारकहरूको विकास गर्दै लगे। यो क्षेत्रमा मानव बसोबास सोह्रौं शताब्दीपछि मात्र विस्तार भएको थियो। शिवगल क्षेत्र भने मानव बसोबासको ज्यादै पुरानो इतिहास भएको क्षेत्र हो। यहाँ आरम्भदेखि नै हिन्दुहरूको बसोबास रहेको थियो। यस क्षेत्रको पुरानो बस्तीमा लिच्छविकालदेखिका हिन्दु मूर्ति तथा मन्दिरहरूको निर्माण र विकास हुँदै गयो। प्राचिनता बोकेको शिवगल क्षेत्रमा ने.सं. १०५५ (सन् १९३४) सम्म पनि बौद्ध स्मारकहरू बनाउन वर्जित थियो। यो क्षेत्रमा बौद्ध स्मारक बनाउँदा मरिन्छ भन्ने विश्वास रहेको थियो (श्रेष्ठ, वि.सं.२०५७, पृ.२८)। यस्तो कठोर विश्वासको कारणले कीर्तिपुरको पूर्वीक्षेत्रमा बौद्ध स्मारकहरू मात्र निर्माण भए भने पश्चिमतर्फको क्षेत्रमा लिच्छविकालदेखि नै निरन्तर हिन्दु स्मारकहरू निर्माण भए। हाल यी दुवै क्षेत्रका स्मारकहरूले कीर्तिपुरलाई सम्भावित विश्वसम्पदा स्थलको रूपमा परिचित गराएका छन्। यस प्रसङ्गमा यी दुवै स्थलका महत्वपूर्ण धार्मिक स्मारकहरूको इतिहास र संस्कृतिको संक्षिप्त समीक्षा गरिएको छ।

### ५.१.शिवगल क्षेत्रका धार्मिक एवं सांस्कृतिक स्मारकहरू

हिन्दु नेवारहरूको बसोबास क्षेत्रको रूपमा परिचित शिवगल क्षेत्र बाघभैरव मन्दिर क्षेत्र भएर उत्तर दक्षिण विस्तार भएको मूल सडक दथुंलदेखि पश्चिम उत्तरतर्फ विस्तार भएको छ। शैव र शिवकै स्वरूप मानिने बाघ भैरव तथा शिव पार्वतीकै स्वरूप मानिने उमामहेश्वर मन्दिर रहेको कारणले शिवगल भनिए तापनि यो वास्तवमा हिन्दु धर्म र संस्कृति विकास भएको हिन्दु क्षेत्र नै हो। यहाँ हिन्दु धर्मका अन्य धार्मिक र सांस्कृतिक स्मारकहरू पनि छन्। तर, युनेस्कोको सम्भावित विश्व सम्पदामा सूचिकृत हुनको लागि मुख्य आधार बनेका निम्न स्मारकहरूको इतिहास र संस्कृतिका विविध पक्षहरूको खोजी र विश्लेषण गरिएको छ।

**लायकु (राजदरबार) को भग्नावशेष** : कीर्तिपुरको महत्वपूर्ण पुरातात्विक स्मारकमध्येको यहाँ रहेको राजदरबार (लायकु)को भग्नावशेष पनि एक हो। यो कीर्तिपुरको सर्वोच्च शिखर उमामहेश्वर मन्दिरको पूर्वतर्फको केही तल्लो भागमा रहेको छ। यो दरबार मध्यकालमा पाटनका राजा श्रीनिवास मल्ल र उनका छोरा योगनरेन्द्र मल्लले बनाएका थिए। पछिल्लो मध्यकालमा कीर्तिपुर पाटन राज्यको अधिनमा पर्दथ्यो र यहाँका क्वाठ नायक (किल्ला रक्षक वा किल्ला प्रशासक)हरूले पाटन राज्यको तर्फबाट यहाँ प्रशासनिक जिम्मेवारी निर्वाह गर्दथे। पाटनका राजा सिद्धिनरसिंह मल्लसँग विद्रोह गरी उनैका छोरा श्रीनिवास मल्लले कीर्तिपुरमा आफू राजा भएको घोषणा गरेका थिए। यसै

क्रममा यो राजदरबारको निर्माण भएको हो । पछि बाबुले छोरालाई पाटनको समेत राजगद्दी छाडिदिएपछि श्रीनिवास मल्ल कीर्तिपुर र पाटनको समेत राजा भएका थिए । त्यसवेलाको एक ठ्यासफूमा सिद्धिनरसिंहमल्ल ने.सं. ७८१ पौष महिनामा छोरा (श्रीनिवास)लाई राजगद्दी सुम्पेर देश दर्शन (तिर्थयात्रा) मा गए भन्ने उल्लेख भएको  र ने.सं. ७८१को उनले राजाको रूपमा जारी गरेको सिक्का पनि प्राप्त भएको छ (Regmi,1960, p.282) । त्यसैले उनी सन् १६६१ मा पाटनको राजा भैसकेको देखिन्छ। उनले कीर्तिपुरमा यसअघि नै अर्थात् वि.सं.१७१५ देखि १७१७सम्म (सन् १६५९-६१) करिब दुई वर्ष राज्य गरेका थिए (दाहाल, वि.सं.२०५७, पृ.१८३) । यस आधारमा कीर्तिपुरको यो राजदरबार पनि सन् १६५९ देखि १६६१ को बीचमा बनेको देखिन्छ। श्रीनिवास मल्लका छोरा योगनरेन्द्र मल्लले पनि बाबु श्रीनिवास मल्लसँग विद्रोह गरी सन् १६८४ मा यही राजदरबारमा बसी कीर्तिपुरमा शासन गरेका थिए। तर उनलाई पनि बाबुले पाटनको राजगद्दी छाडिदिएपछि पाटनमा गै कीर्तिपुरसहितको समग्र पाटनको शासन गर्न थालेका थिए। यस आधारमा सन् १६८४ सम्म पनि कीर्तिपुरमा राजदरबार अस्तित्वमा रहेको थियो भन्ने देखिन्छ।

एकीकरण अभियानको क्रममा यो दरबारमा पनि क्षति पुगेको हुनसक्ने सम्भावना देखिन्छ। सन् १७५९को आरम्भमा नेपाल आएका फादर गुसेफले यो युद्धमा किल्लाहरूमाथिको गोरखालीहरूको कब्जा र गोरखाली सैनिकहरूबाट भएको ज्यादतिको वर्णन गरेका छन् (Father,1799, p.318)। यस्तो युद्धको निसानामा राजदरबार पनि पर्‍यो होला । सन् १८८० मा नेपाल भ्रमण गर्ने एच. ए ओल्डफिल्डले आफ्नो पुस्तकमा यो दरबार वास्तविक स्वरूप आँकलन समेत गर्न नसकिने गरी भग्नावशेषमा परिणत भएको बताएका छन्। उक्त समयदेखि हालसम्म यो दरबारको पुनः निर्माण भएको छैन । यहाँ एक ढिस्कोमा भवनका जगहरू र घरका पेटीजस्ता आकृतिहरू मात्र रहेका छन्। कुनै समय यहाँ राजदरबार र तलेजुको मन्दिर समेत रहेको विश्वास गरिन्छ। हाल भने यो ठाँउ एक स्थान नाम (लायकु)को रूपमा मात्र रहेको छ। यस क्षेत्रमा राजदरबारसँग सम्बन्धित धेरै सांस्कृतिक अभ्यासहरूले भने अहिलेसम्म  निरन्तरता पाएको देखिन्छ। त्यसैले यो भग्न स्मारक हालसम्म पनि मध्यकालीन दरबार संस्कृतिको आभाष दिलाउने महत्वपूर्ण पुरातात्विक अवशेषको रूपमा रहेको छ।

**उमामहेश्वर मन्दिर :** प्यागोडा शैलीको, तीनतल्ला अग्लो र तीन तहको छानो भएको भव्य र कलात्मक यो मन्दिर कीर्तिपुरको सर्वोच्च भागमा रहेको छ। एक किल्लाको रूपमा रहेको यो क्षेत्रबाट लिच्छविकालीन मूर्तिसमेत प्राप्त भएको हुँदा यस स्थानको प्राचिनता निकै पुरानो देखिन्छ। यसको गर्भ गृहमा उमामहेश्वरको मूर्ति (भवानी शंकर) स्थापना भएको छ। यहाँकै एक ताम्रपत्र

अभिलेखमा संवत् ७७५ वैशाख महिनाको शुक्लपक्ष एकादशी तिथि हस्त नक्षत्र सुभियाग आदित्यबारमा त्वं वाहारका राउर्त्त विश्वनाथले बनाएको भन्ने व्यहोरा उल्लेख भएको छ (वज्राचार्य, वि.सं.२०५६, पृ ४५९) । यी विश्वनाथ सिद्धिनरसिंह मल्लका ल्याइते पट्टीका छोरा थिए (श्रेष्ठ, वि.सं. २०५७,पृ(४९) । यस आधारमा यो मन्दिर पाटनका विश्वनाथले सन् १६५५ मा बनाएको देखिन्छ । सन् १८३२ को भूकम्पले भत्किएको यो मन्दिर पूर्ववत स्वरूपमा मर्मत हुन नसकेको हुँदा सन् १९८२ को मर्मतपछि वर्तमान स्वरूपमा कायम हुन पुगेको हो (Shrestha,1994,p.94) ।

कलात्मक काष्ठ खम्बाले घेरिएको प्रदक्षिणापथ, कलात्मक झ्यालढोकाहरू, द्वारपालको रूपमा रहेका माहुतेसहितका हात्ती, भिमसेन र कुवेरका मूर्तिहरू, कलात्मक तोरण र टुँडालहरूले यो मन्दिरलाई ज्यादै सुन्दर र भव्य तुल्याएको छ । मन्दिर परिसरमा रहेका लक्ष्मी नारायणको मूर्ति, विशाल घण्ट आदिले पनि मन्दिरको भव्यता बढाएको पाइन्छ । त्यसैले यो मन्दिर शिवगल क्षेत्रको धार्मिक तथा सांस्कृतिक स्मारकहरूमध्ये ज्यादै महत्वपूर्ण मानिन्छ ।

**बाघभैरव मन्दिर :** देवगल र शिवगलक्षेत्रको सीमानामा अर्थात् कीर्तिपुरको मध्यभागमा अवस्थित यो मन्दिर क्षेत्र पनि निकै पुरानो हो। यस क्षेत्रमा चौथो शताब्दीका मूर्तिहरू रहेका छन् । लिच्छविकालीन अन्य कलाकृतिहरू समेत रहेको कारणले यो क्षेत्र पनि लिच्छविकालदेखि नै मानव बसोबास रहेको क्षेत्र हो। यस क्षेत्रमा रहेको प्यागोडा शैलीको चार तल्ले र तीन तहको छानो भएको यो मन्दिर यस क्षेत्रकै महत्वपूर्ण धार्मिक र सांस्कृतिक स्मारक हो। एक फराकिलो आँगनमा दक्षिणतर्फ मुख्य प्रवेशद्धार हुने गरी मन्दिरको निर्माण भएको छ। मन्दिरको निर्माण तिथि सम्बन्धमा वंशावलीमा राजा शिवदेवले कीर्तिपुर सहर निर्माण गरेको अर्को वर्ष बनाइएको उल्लेख गरिए को छ (प्रधान, वि.सं. २०७६, पृ८८) । शिवदेव राजाले यो सहर ने.सं.२१९ मा निर्माण गरेको प्रसङ्ग यसै लेखमा यसअघि नै उल्लेख गरिएको छ। यस आधारमा बाघभैरव मन्दिर ने.सं.२२० (सन् १०९९) मा स्थापना भएको मान्नुपर्ने हुन्छ। स्थापनाको लामो समयसम्म यस मन्दिरको विषयमा वर्णन गरिएको कुनै लिखित प्रमाण प्राप्त भएको छैन। यस मन्दिरबाट पाइएको सबैभन्दा पुरानो अभिलेख भने ने.स.६३५ (सन् १५१४) कार्तिक महिनाको हो जसमा पाटनका जगतपाल वर्माले यस मन्दिरमा यज्ञ, होमका साथमा भव्य जीर्णोद्धारको कार्य गरेको वर्णन गरिएको छ (श्रेष्ठ, वि.सं.२०५७, पृ.३९) । त्यसैले यो मन्दिर कम्तिमा पनि १५ औं शताब्दीमा बनिसकेको पुष्टि भएको छ ।

सम्पूर्ण कीर्तिपुरका बासिन्दाहरूले आफ्नो संरक्षक र अभिभावक देवताको रूपमा मान्दै आएका यी देवता बाघ स्वरूपका भैरव देवता हुन् । जिब्रो

नभएको बाघको मुखौटो र माटाको आकृतिमा बनाइएको मूर्ति स्थापना गरिएको यी देवताको भाद्र १ गते व्यघ्र संक्रान्तिको दिनमा भव्य जात्रा गरिन्छ। कलात्मक तोरण, टुँडाल, झ्याल र ढोकाहरूका कारणले कलात्मक भव्यता रहेको यो मन्दिर परिसरमा मनविनायक, भवानी शंकर, श्रीधर विष्णु, यमलेश्वर महादेव, नारायण, रामचन्द्र, विश्वकर्मा तथा धरतीमाता जस्ता मन्दिर रहेका छन्। यसबाहेक यहाँ केही सत्तल तथा पाटी र अनेकौं मूर्ति रहेका छन्। यस मन्दिर परिसरमा कीर्तिपुरकी संरक्षक मातृका इन्द्रायणीको देवघर पनि रहेको छ। त्यसैले यो मन्दिर अनेकौ हिन्दु देवदेवीहरू रहेको ठूलो धार्मिक केन्द्रकै रूपमा रहेको छ। कीर्तिपुरको सबैभन्दा महत्वपूर्ण जात्रा इन्द्रायणीको खटजात्रा यहीबाट आरम्भ हुने र यही समापन हुने हुँदा पनि यस स्मारकको धेरै महत्व रहेको छ।

**इन्द्रायणी पीठ** : देवगल क्षेत्रको अर्को महत्वपूर्ण धार्मिक र सांस्कृतिक स्मारक इन्द्रायणी पीठ पनि हो। यो कीर्तिपुरको देवढोका बाहिर श्मशान क्षेत्रमा जाने बाटोमा पर्दछ। विगतमा ठूलो मन्दिर रहेको विश्वास गरिने यो स्मार कमा हाल पीपलको बोट उम्रेको हुँदा वास्तुसंरचना भव्य देखिदैन। कीर्तिपुर सहरको संरक्षक देवी सप्तमातृका मध्येकी एक इन्द्रायणी मानिन्छिन्। उनको घर (देवछेँ) बाघभैरव मन्दिर परिसरमा रहेको छ। हरेक वर्ष यी देवीलाई बाघभैरव क्षेत्रको देवघरबाट खटमा राखेर यही इन्द्रायणी पीठमा ल्याइन्छ। रातको समयमा विशेष तान्त्रिक पूजा गरी पुन जात्राका साथमा देवघरमा भित्र् याइन्छ। त्यसैले यो पीठ वर्षमा एकदिन इन्द्रायणीलाई ल्याएर विशेष तान्त्रिक पूजा गर्ने पीठ मात्र हो। तर यस पीठ प्रति कीर्तिपुरका बासिन्दाहरूको विशेष श्रद्धा र आस्था रहेको छ।

यस मन्दिरको काष्ठ तोरणको अभिलेखमा ने.सं. ७९० (सन् १६७०) वैशाख कृष्ण अमावश्यको दिनमा शिवराम भारोले यो चढाएका हुन् भन्ने व्यहोरा उल्लेख भएको छ .(वज्राचार्य, वि.सं.२०५६,पृ.५१६) यस आधारमा यो मन्दिर यसअघि नै बनिसकेको देखिन्छ। मन्दिरको प्रवेशद्वारमा द्वारपालको रूपमा स्थापित दुई सिंहका शालिकहरू पनि सोही वर्ष स्थापना गरिएको कुरा त्यहाँको अभिलेखबाट थाहा हुन आएको छ।

## ५.२ देवगल क्षेत्रका धार्मिक एवं सांस्कृतिक स्मारकहरू

शिवगल क्षेत्रको तुलनामा यो नयाँ मानव बसोबास क्षेत्र हो। पाटनका जगतपाल वर्माले सन् १५१५ मा जगतपाल विहार निर्माण गरेपछि यस क्षेत्रमा बौद्ध धर्मावलम्बीहरूको बसोबास र धार्मिक स्मारकहरूको निर्माण हुने क्रम चलेको देखिन्छ। त्यसैले कीर्तिपुरको पूर्वतर्फको यो क्षेत्र बौद्ध धार्मिक र

सांस्कृतिक क्षेत्रको रूपमा रहेको छ । यस क्षेत्रमा हाल निम्नलिखित महत्वपूर्ण धार्मिक र सांस्कृतिक स्मारकहरू रहेका छन् ।

**जगतपाल महाविहार** : पाटन क्षेत्रका जगतपाल वर्माले ने.सं.६३५ (सन् १५१५) जेष्ठ कृष्ण दशमीका दिन यो विहार निर्माण सम्पन्न गरेको विवरण त्यहाँ रहेको एक अभिलेखमा उल्लेख भएको छ (वज्राचार्य, वि.सं.२०५६,पृ.४७३ ) । जगतपालले निर्माण गरेको र ठूलो भिक्षु संगठन भएको कारणले यसलाई जगतपाल महाविहार भनिएको हो । चिलंचो चैत्यको क्षेत्रमा रहेको कारणले स्थानीयहरू यसलाई चिलंचो वहा भन्ने गर्दछन् । पाटनका बासिन्दाहरूले यस जगतपाल विहारलाई अहिलेसम्म पनि क्यापू विहारको (कीर्तिपुरको पुरानो नाम किपु) को रूपमा चर्चा गर्ने गरिएको पाइन्छ (Shokoohy, 1994, p.135 ) । यस विहारसँग १२८ वज्राचार्यहरू समावेश भएको भिक्षु संघको आवद्धता रहेको छ र कुनै सयम यी सबै सदस्यहरूले द्यःपालको रूपमा पूजा गर्ने गर्दथे । यो विहार परम्परागत नेवारी घरको शैलीमा तीन तल्ला अग्लो हुने गरी बनाइएको छ । त्यसैले काठमाडौं उपत्यकाभित्रका मध्यकालीन अन्य विहारभन्दा यो भिन्न वास्तुशैलीमा बनेको देखिन्छ ।

**अन्य सहायक वहा वहीहरू :** कीर्तिपुरको मुख्य विहार जगतपाल विहार हो । भिक्षु संख्या बढ्दै जाँदा र गृहस्थ भिक्षुहरूको परिवार छुट्टी भिन्न हुने क्रममा यसबाट छुट्टिएर बनेका अन्य केही सहायक वहा वहीहरू बन्ने क्रम बढ्दै गएको देखिन्छ । यीमध्ये **याक वहा** ( नेवारी भाषामा एक्लो विहार) नामको विहार पनि एक हो । यहाँ रहेको ने.सं. ८०२ (सन् १६८२) को एक अभिलेखमा भने यसको औपचारिक संस्कृत नाम जीवधर्म विहार भनिएको छ र यो विहार ने.सं. ७६९ (सन् १६४९) मा पाटनका राजा सिद्धिनरसिंह मल्लको उपस्थितिमा उद्घाटन भएको भनिएको छ (Shokoohy, 1994, p.142)। जगतपाल महाविहारकै एक सदस्य परिवारले यस विहारमा दैनिक पूजाआजा गर्दै आएका छन्। यस विहारसँग पनि केही शाक्य परिवारको सम्बन्ध रहेको देखिन्छ। उनीहरूले आफ्नो चूडाकर्म यही विहारमा गर्ने गरेका छन्। यस विहारमा पनि क्वप द्यःको दैनिक पूजाको अतिरिक्त वार्षिक चाड मनाउने गरिन्छ।

जगतपाल विहारकै अर्को सहायक वहा **कुसि वहाः** पनि हो । कुसिचाः टोलमा रहेको विहारका मुख्य देवताको रूपमा अक्षोभ्यको मूर्ति स्थापना गरिएको यो विहारका सदस्यहरू पनि क्यापुवहा अर्थात् जगतपाल विहारका वज्राचार्यहरू सदस्य नै रहेका छन् । यद्यपि यस विहारमा वज्राचार्यहरूका अनुमतिले हालैका केही पुस्ताअघि मात्र कीर्तिपुरमा बसोबास गर्न आएका शाक्यहरूका परिवारले पनि यहाँ पूजाआजामा सरिक हुने अवसर पाएका छन् (Shokoohy, 1994, p.142)। टोलको नामबाट यसको नाम कुसि वहा रहेको देखिन्छ। जोन

लकका अनुसार यो विहारको नाम महाकीर्ति विहार हो तापनि स्थानीय वज्राचार्यहरूले भने यस विहारलाई महेन्द्र कीर्ति विहार भन्दछन् र यस विहारमा हरेक दिन क्वप द्यःको पूजाआजा गरिने भए तापनि जेष्ठ शुक्ल पूर्णिमाका दिनमा वार्षिक पर्व मनाइन्छ.(Lock,1985, p.182) । यो वार्षिक पर्व पनि वज्रयान बौद्ध परम्पराको पूजासँग सम्बन्धित रहेको छ ।

अर्को एक सहायक वहाः **च्वे वहाः** जगतपाल विहारमा प्रवेश गर्ने बाटोको दक्षिणतर्फ रहेको छ । माथिल्लो विहार भन्ने अर्थमा स्थानीय व्यक्तिहरूले यसलाई च्वे वहा भन्ने गर्दछन् । यो विहारको तल्लो भागमा अर्को एक विहार क्वे विहार रहेको हुँदा यसलाई च्वे वहा भनिएको देखिन्छ । यस विहारको संस्कृत नाम भने हर्ष कीर्ति विहार हो । यसको निर्माण ने.सं. ७६१ अर्थात् सन् १६४१ मा भएको थियो (Shokoohy, 1994, p.142)। एक मण्डलामा भएको अभिलेख अनुसार यसको स्थापना गर्ने व्यक्ति हाकुजा शाक्य थिए जुन मण्डला ने.सं. ९३६ मा बनाइएको थियो । यो वहीलाई सन् १९३४ को भूकम्पले क्षति पुऱ्याएपछि भीमवज्र वज्राचार्यले पुनः निर्माण गरेका थिए । त्रिभुवन विश्वविद्यालयको स्थापनासँगै गुमेको जमिनको क्षतिपूर्ति स्वरूप गुठी संस्थानले दिने केही रकमबाट यहाँको दैनिक पूजाआजा सञ्चालन हुँदै आएको छ । जेष्ठ शुक्ल द्वितीया तिथिमा यस विहारमा हुने पुरानो वार्षिक चाड भने हाल मनाउन छाडिएको छ (Lock,1985, p.184) । यो चाड वज्रयानी बौद्ध पूजासँग सम्बन्धित रहेको छ ।

अर्को एक **क्वे वहाः** कीर्तिपुरको तःजाः फः टोलमा रहेको छ । नेवारी भाषाको क्वे को अर्थ तल्लो भन्ने हुन्छ । यस विहारको केही माथि अर्को एक विहार पनि रहेको हुँदा यसलाई तल्लो विहार भन्ने अर्थमा क्वे वहा भन्ने गरिएको देखिन्छ । यद्यपि यसको पुरानो संस्कृत नाम भने करुणाकर विहार हो । यस विहारको संघमा जगतपाल विहारकै सदस्यहरू मध्येका चार परिवार वज्राचार्यहरू रहेका छन् । उनीहरूको चूडाकर्म यही हुने गरेको र चारै परिवारले यस वहामा पूजा गर्ने गरेका छन् (श्रेष्ठ, वि.सं.२०५७, पृ.७२) ।

यसबाहेक जगतपाल विहारकै सहायक विहारको रूपमा **चिथु वही** पनि रहेको छ । चिथुटोलमा रहेको यो वहीलाई ताडपत्र तथा तमसुकहरूमा भने चुसथुरी त्वाल पेखालषु बाहार र पिंखालषुबाहार भनी उल्लेख भएको पाइन्छ (श्रेष्ठ, वि.सं. २०५७, पृ.७३) । चुसथुरी टोलको नाम अपभ्रंश भै चिथुटोल बन्न पुगेको र यहाँको विहारलाई चिथु भन्न थालिएको अनुमान गर्न सकिन्छ । यो विहारको प्राचीन संस्कृत नाम भने पद्मकीर्तिगिरि महाविहार हो र यस वहीमा ४५ शाक्य परिवारको संलग्नता रहेको देखिन्छ जसमध्ये पाँच परिवार पाटनको पुरानो नायखँ विहारका सदस्य रहेका थिए (Shokoohy, 1994, p.146) ।

**चिलंचो चैत्य** : देवगल क्षेत्रको अर्को महत्वपूर्ण धार्मिक र सांस्कृतिक स्मारक चिलंचो चैत्य (स्तुप) पनि हो । धार्मिक अस्तु राखेर बनाइने युप अर्थात् ढिस्कोलाई बौद्ध धर्मावलम्बीहरू स्तुप भन्दछन् । यो स्मारक चेतना जागृत गराउने चैतन्यको प्रतीक मानिने हुँदा यसलाई चैत्य पनि भनिन्छ । कीर्तिपुर सहरको पूर्वक्षेत्रमा यस्तै महत्वपूर्ण चैत्य रहेको छ । यो चैत्य मौर्य सम्राट अशोकले नेपाल भ्रमणको क्रममा (इसापूर्व तेस्रो शताब्दीमा) पाटन सहरका चार स्तुप बनाउने समयमा नै बनाएको लोक विश्वास रहेको छ । नेपालको इतिहास लेख्ने डि.राइटले अशोक नेपाल आएको समयमा कीर्तिपुरमा पनि एक चैत्य बनाएका थिए भनेका छन् (उधृत : प्रधान, वि.सं. २०७६, पृ.८५) । यो भनाइ सायद यसै लोकविश्वासमा आधारित हुनसक्छ । यद्यपि यो विश्वास तथ्यमा आधारित भएको देखिदैन । यस चैत्यको निमार्ता र निर्माण समय बताउने त्यस्तो पुरानो प्रमाण भने पाइएको छैन । यहाँ पाइएको ने.सं.६३५ (सन् १५१५) को अभिलेख नै सर्वप्राचीन लिखित प्रमाण हो जसमा नजिकैको जगतपाल विहार निर्माणको प्रसङ्ग उल्लेख भएको छ । सायद विहारसँगैको अशोक चैत्य भनिने प्राकृतिक ढिस्कोलाई यही समयमा व्यवस्थित चैत्यको रूप दिइएको हुन सक्दछ । हाल धार्मिक र सांस्कृतिक रूपले यो चैत्य जगतपाल विहारसँग प्रत्यक्ष सम्बन्धित रहेको देखिन्छ ।

यो चैत्य तहतह परेका पेटीहरूमाथि निर्माण गरिएको छ । पेटीमाथि आकर्षक गर्भ रहेको छ । गर्भमा ध्यानीबुद्ध र ताराका मूर्तिहरू स्थापना गरिएका छन् । गर्भमाथि हर्मिका खण्ड बनाइएको छ जसमा चारैतिर त्रिकालदर्शी नेत्रका प्रतीक जोडी आँखा बनाइएको छ । हर्मिकामाथि त्रयोदश भुवनहरू निर्माण गरिएका छन् । भुवनमाथि गजूर र गजूरमाथि त्रिदण्डीले अडाएको छत्र निर्माण गरिएको छ । मुख्य चैत्यको पेटीमा पनि स-साना चैत्यका आकृतिहरू बनाइएका छन् । पूर्वी प्रवेशद्वारमा द्वारपालको रूपमा गणेश र महाकालका मूर्तिहरू राखिएका छन् । यस चैत्यको प्राङ्गणमा रहेका ४९ स-साना चैत्य, देवस्थल तथा मूतिहरूको सूची शुक्रसागर श्रेष्ठले प्रकाशित गर्नुभएको छ (श्रेष्ठ, वि.सं. २०५७, पृ. ६३) । यस आधारमा पनि यो स्मारक एक खुला संग्रहालयकै रूपमा रहेको देखिन्छ ।

**बौद्ध शिखर मन्दिरहरू** : देवगल क्षेत्रमा बौद्ध धर्मसँग सम्बन्धित प्रमुख तीन शिखर मन्दिरहरू पनि रहेका छन् । यी मध्ये एक हो **बुद्ध, धर्म संघ शिखर मन्दिर** । बौद्ध धर्मको त्रिरत्नमा समर्पित रहेको आधारमा यसको नाम बुद्ध धर्म संघ रहे तापनि स्थानीयहरू यसलाई प्रस्तरको मन्दिर भन्ने अर्थमा लोँ देग (ढुंगाको मन्दिर) भन्ने गर्दछन् । यो पूर्णरूपमा कलात्मक प्रस्तरहरूबाट शिखर शैलीमा निर्माण गरिएको छ । अभिलेखमा उल्लेख भए अनुसार यो मन्दिर ने.सं.७८५

पौष महिनामा (सन् १६६४) निर्माण सम्पन्न भएको थियो (श्रेष्ठ, वि.सं. २०५७, पृ. ५६)। कीर्तिपुरका कुनै एक वज्राचार्य परिवारले बनाएको र उद्घाटनमा पाटनका राजा श्रीनिवास मल्लको उपस्थिति समेत रहेको विवरण अभिलेखमा लेखिएको छ । यो मन्दिर कीर्तिपुरको मध्यभागमा गतपौ म्वान टोल र चिथुटोल को बीचमा रहेको छ । शिखर वास्तुकलाको अनुपम नमूनाको रूपमा रहेको यो मन्दिर देवगल क्षेत्रको महत्वपूर्ण सांस्कृतिक सम्पदा मानिन्छ । कीर्तिपुरको अर्को शिखर शैलीको बौद्ध मन्दिर **शाक्यमुनि बुद्ध शिखर मन्दिर** पनि हो । यो मन्दिर सिंहदुवाल टोलमा रहेको छ। शिखर शैलीमा र पूर्णरूपले प्रस्तरबाट बनेको यो मन्दिरको गर्भ गृहमा शाक्यमुनि बुद्धको मूर्ति प्रतिस्थापन गरिएको छ। एक अभिलेखमा उल्लेख भए अनुसार यो मन्दिर र मूर्ति स्थापनाको कार्य ने.सं.७६९ (सन् १६४९) मा भएको थियो (Shrestha, 1994, p.115)। यो मन्दिर कीर्तिपुरका हिन्दु तथा बौद्ध दुवै धर्मावलम्बीहरूको समान आस्थाको केन्द्र बनेको छ। यस बाहेक अर्को एक बौद्ध स्मारक **लोकेश्वर शिखर मन्दिर** पनि हो। भरिया पुखूदेखि उत्तर पश्चिमतर्फ सिंह दुवाल टोलमै एक ठूलो पीपलको वृक्ष रहेको छ। त्यसको जराले चारैतिरबाट ढाकेको एक सानो शिखर मन्दिरलाई लोकेश्वर मन्दिर भनिन्छ। हाल यहाँ मन्दिर देखिँदैन। पीपलको वृक्ष मात्र देखिन्छ। मन्दिरको अवशेषको रूपमा प्रस्तर पेटी र द्वारपाल सिंहको आकृतिमात्र देख्न सकिन्छ। एक अभिलेखमा उल्लेख भए अनुसार यो मन्दिर गुणज्योति शाक्यले सन् १६८३ मा निर्माण गरेका थिए। यो मन्दिर उचित संरक्षण र पुनः निर्माणको पर्खाइमा रहेको छ।

## ६. निष्कर्ष

स्कन्दपुराण अन्तर्गत्को नेपाल महात्म्य पुराणले कीर्तिपुरको दक्षिणतर्फ उपत्यका जलमग्न रहेकै अवस्थामा महेन्द्रदमन असुरले सुप्रभानगर स्थापना गरेको बताएको छ। उक्त नगरमा दानासुर, वाणासुर तथा कच्छपासुर जस्ता असुरहरूको राज्य रहेको हुँदा वाग्मतीको जलको मध्यभागबाट गणेश उत्पन्न भएपछि उनले असुरलाई विस्थापित गरी सुप्रभानगर ध्वस्त पारेपछि यहाँ मानव बसोबास आरम्भ भएको वर्णन गरेको छ। पुराणको यो वर्णनले यस क्षेत्रमा मानव बसोबासको इतिहास निकै पुरानो देखिएको छ। कीर्तिपुर डाँडोमा पनि गोपाल, किराँत र लिच्छविकालमा मानव बसोबास भएको प्रत्यक्ष तथा परोक्ष तथ्यहरू प्राप्त भएका छन्। यस आधारमा कीर्तिपुर ज्यादै प्राचीन बस्ती हो भन्ने देखिन्छ। कीर्तिपुरमा व्यवस्थित सहर निर्माण गर्ने कार्य भने गोपाल वंशावली अनुसार सन् १०९८ तिर शिवदेव नामका राजाले गरेका थिए। मध्यकालमा कीर्तिपुरमा व्यवस्थित किल्लाबन्द सहर निर्माण गरियो। सन् १६५९ देखि ६१ सम्म श्रीनिवास मल्लले र सन् १६८४ तिर योगनरेन्द्र मल्लले

कीर्तिपुरलाई राजधानी बनाएर यहाँ शासन गरेका थिए । त्यसबेला नै यो सहरको सांस्कृतिक वैभव उत्कर्षमा पुगेको थियो । नेपाल एकीकरणको क्रममा ध्वस्त भएको कीर्तिपुरका भौतिक संरचना लामो समयसम्म पुनः निर्माण हुन नसकेको विवरण फादर गुसेफ र ओल्ड् फिल्डको वर्णनमा पाइन्छ । नेपाल एकीकरणको समयदेखि भने कीर्तिपुरको ऐतिहासिकता र सांस्कृतिक वैभवमा क्षय हुँदै गएको देखिन्छ । मध्यकालीन यो सहर आरम्भमा पश्चिम उत्तरतर्फ विशेष केन्द्रित थियो जहाँ हिन्दु संस्कृति विकसित हुँदै गएको थियो । शिवगल भनिने यस क्षेत्रमा हिन्दु अमूर्त सांस्कृतिक अभ्यासको क्रममा उमामहेश्वर मन्दिर, बाघभैरव मन्दिर, राजदरबार परिसरका स्मारकहरू तथा इन्द्रायणी पीठ जस्ता महत्वपूर्ण स्मारकहरूको निर्माण हुन पुग्यो । सन् १५१५ देखि पाटनका जगतपाल वर्माले यहाँ बौद्ध धर्म र संस्कृतिको जग बसाल्ने कार्य गरेपछि यहाँको पूर्वतर्फ बौद्ध धर्मावलम्बीहरूको बसोबास आरम्भ भयो । यसपछिका दिनहरूमा पूर्वीक्षेत्रमा बौद्ध धर्म र सांस्कृतिक स्मारकहरू निर्माण हुँदै गए । फलस्वरूप पूर्वतर्फको देवगल क्षेत्रमा जगतपाल महाविहार र यसका विभिन्न शाखा वहा तथा वही, चिलंचो चैत्य, महत्वपूर्ण बौद्ध शिखर मन्दिहरूको निर्माण भयो । हाल यी दुवै क्षेत्रमा अभ्यासमा ल्याइएका अमूर्त सांस्कृतिक अभ्यासहरूले आ-आफ्ना सांस्कृतिक क्षेत्रमा ज्यादै महत्वपूर्ण धार्मिक र सांस्कृतिक स्मारकहरूको उत्पत्ति र विकास गरायो । यी दुवै शिवगल र देवगल क्षेत्रका स्मारकहरूले कीर्तिपुरलाई विश्व सम्पदाको सम्भावित सूचीमा समावेश गराएका छन् । यी स्मारकहरूको संरक्षण तथा यी स्मारक सम्बद्ध अमूर्त सांस्कृतिक अभ्यासहरूको खोज अनुसन्धान एवं संरक्षण कार्य गरी मध्यकालीन बस्ती कीर्तिपुरलाई विश्व सम्पदा सूचीमा सुचीकृत गर्न पहल गर्नु आजको आवश्यकता बन्न पुगेको छ ।

## सन्दर्भ सामग्री सूची


Bajracharya, D. & Mall, K.P. (1985) *Gopalaraj Bansavali*. Kathmandu: Nepal Research Centre.

Fathar Giuseppe (1799) Acount of the Kingdom of Nepal. *Asiatic Research.* Vol.2 pp.307-322. Retrived form https://www.biodiversitylibrary.org/item/93171#page/328/mode/2up

Lock, J.K S.J. (1985) *Buddhist monastries of Nepal: A survey of the Bahas and Bahis of the Kathmandu Valley.* Kathmandu: Sahayogi Press Pvt. Ltd.

Oldfield, H.A. (1880) *Sketches form Nipal Part I*. London: W.H. Allen and Co.

Regmi, D.R. (1960) *Medieval Nepal : A History of the three kingdoms 1520 A.D. to 1768 A.D. Part II* . Culcutta: Firma K.L. Mukhopadhyay

Shokoohy,N.H. (1994) Buddhist Monasteries. In Shokoohy, M. & Shokoohy, N.H. (Eds.). *Kirtipur : An urban community in Nepal - Its people, town planning , architecture and arts*. London : Araxus Books. pp.131-146

Shrestha, S.S. (1994). Historic public buildings . In Shokoohy, M. & Shokoohy, N.H. (Eds.). *Kirtipur : An urban community in Nepal - Its people, town planning , architecture and arts*. London : Araxus Books. pp.75-130

Slusser, M.S.(1982) *Nepal Mandala : A cultural study of Kathmandu valley. Vol 1*. New jersey: Prinston University press.

World Heritage Centre (2021) *Operational Guidelines for the implementation of the wold heritage Cconvention*. UNESCO.

Wright, D.(1990 Reprint) *History of Nepal : With and introductory sketch of the country and people of Nepal (First Published in 1877)* . New Delhi : Asian educational services .

कीर्ति अध्ययन तथा अनुसन्धान मण्डल (वि.सं.२०७३). कीर्तिपुरको संक्षिप्त चिनारी .कीर्तिपुरः कीर्तिपुर नगरपालिका ।

आचार्य, महेशकुमार (२०२१) कीर्तिपुर क्षेत्रका लिच्छविकालीन मानव बस्तीहरू. नेप्लीज कल्चर : अ पियर रिभ्यू जर्नल *(Nepalese Culture: A Peer Review Journal)* भोलुम १४.पृ.५१-६६. DOI : https://doi.org/10.3126/nc.v14i0.35425

दाहाल, पेशल (वि.सं.२०५७) नेपालको इतिहास. काठमाडौः एम.के. पब्लिशर्स एण्ड डीष्ट्रव्यूटर्स ।

प्रधान, भुवनलाल (वि.सं.२०७६) नेपालको इतिहास र संस्कृतिका केही पक्ष .काठमाडौ : नेपाल प्रज्ञा प्रतिष्ठान ।

वज्राचार्य, धनवज्र (वि.सं. २०५६) मध्यकालका अभिलेख. काठमाडौ : नेपाल तथा एशियाली केन्द्र त्रि.वि. ।

शर्मा, केदारनाथ संम्पा. (१९७६) स्कन्दपुराणान्र्तगत् नेपाल महात्म्यम् .वाराणसिः चौखम्बा अमर भारती प्रकाशन ।

श्रेष्ठ, शुक्रसागर (वि.सं.२०५७) कीर्तिपुरको सांस्कृतिक र पुरातात्विक इतिहास.काठमाडौंः नेपाल तथा एशियाली अनुसन्धान केन्द्र, त्रि.वि. ।

# पूर्वमध्यकालीन सहर पनौतीको ऐतिहासिक तथा सांस्कृतिक महत्व



✍ लोकनाथ दुलाल, पिएचडी*

## १. पृष्ठभूमि

नेपाल प्राकृतिक तथा मानव निर्मित सम्पदाको प्राप्यताका कारण यो विश्वमै अग्रणी मुलुकमा दरिन्छ । यहाँ पाइने हिमाल, पहाड, तराइ, नदीनाला, तालतलैया, वनजङ्गल, भाषा, संस्कृति, धर्म, कला, लोकपरम्परा, जातजाति, जनजाति, पुरातात्विक ऐतिहासिक, ज्ञानभूमि, तपोभूमि तथा मोक्षदायनी स्थलजस्ता प्राकृतिक एवम् मानव निर्मित सम्पदा दुनियाँमा यो मुलुकको विशिष्ठ पहिचान स्थापित गर्ने अधार हुन् (दुलाल, सन् २०२०, पृ. १३२) । प्राचीन कालदेखि निर्माण गरिदैआएका राजप्रसाद, मठ, मन्दिर, बिहार, चैत्य, स्तुपा, पार्टी, पौवा, ढुङ्गेधारा जस्ता कला तथा वास्तुकलायुक्त स्थल नेपालमा प्रशस्त छन् । त्यस्ता स्मारक, ऐतिहासिक, धार्मिक तथा सांस्कृतिक स्थलहरू नेपालको मौलिक पहिचान स्थापित गर्ने महत्वपूर्ण सम्पदा हुन् । यस्तै स्थलहरूमध्ये पनौती पनि एक हो ।

पूर्वमध्यकालीन सहर पनौती काठमाडौँबाट ३२ किमि पूर्वदक्षिण रोशी (रुद्रावती), पुण्यमाता तथा लीलावती नदीको सङ्गममा अवस्थित छ । त्यसैले यस तीर्थलाई त्रिवेणी पनि भनिन्छ । यो वागमति प्रदेशअन्तर्गत काभ्रेपलाञ्चोक जिल्लामा अवस्थित सानो तर पूर्वमध्यकालीन महत्वपूर्ण सहर हो । भौगोलिक बनावटलाई हेर्दा यो सहर २७°३५' ००" उत्तरी अक्षांशदेखि ८५° ३१' ००" पूर्वी देशान्तरमा अवस्थित देखिन्छ । यो एउटा ढुङ्गामाथि बसेको सहर हो । त्यसैले यहाँ भुकम्प जाँदैन भन्ने विश्वास गरिन्छ (Ulak, 2012, p. 66) ।

---

*सह प्राध्यापक, संस्कृति विभाग, पद्मकन्या बहुमुखी क्याम्पस

प्राचीन कालदेखि हिजोआजसम्म पनौतीलाई चिनाउने र बुझाउने नामहरू धेरै छन् । परापूर्व कालमा पनौती पाञ्चाल देश, पानवती, अश्मनगर, पूर्णवती जस्ता नामले चिनिन्थ्यो । इन्द्रेश्वर मन्दिरमा रहेको एउटा सुर्वणपत्रमा अश्मपुर र भाषा वंशावलीमा पनातीग्राम भनिएका सन्दर्भ पाइएका छन् । वि.सं. १७१७ को ब्रह्मायणी मन्दिरको अभिलेखमा पुण्यवती र वि.सं. १७७६ को वंशगोपाल मन्दिरको अभिलेखमा पुण्यवतीपुरी नामद्वारा पनौतीलाई सम्बोधन गरिएको छ । वि.सं. १९०० को ब्रह्मायणी देवघरको एउटा ताम्रपत्रमा पनाती र वि.सं. १९०४ को अर्को ताम्रपत्रमा पलाँती नाम परेका छन् । यस क्षेत्रको धार्मिक तथा सांस्कृतिक महत्वका आधारमा प्रयोग गरिने प्रयाग तीर्थ, मोक्षदायनी स्थल, पुण्यधाम, त्रिवेणी धाम, शचीतीर्थ जस्ता थरीथरीका पदावली हिजोआज पनौतीलाई चिनाउने नाम हुन् ।

युनेस्को संस्कृति र सांस्कृतिक सम्पदाहरूको संरक्षण तथा संम्वर्द्धन गर्ने आधिकारिक संस्था हो । यसको स्थापना १६ नोभेम्बर १९४५ मा भयो । त्यसपछि भने यो संस्थाले विश्वका संस्कृति र सांस्कृतिक सम्पदाहरूको पहिचान, वर्गीकरण, संरक्षण, संम्वर्द्धन तथा सूचीकरण गर्ने कार्यलाई जोड दिदैआएको छ । यो संस्थाले सन् १९७८ बाट नेपालका प्राकृतिक तथा सांस्कृतिक सम्पदाहरूको सर्वेक्षण, सङ्कलन, पहिचान, वर्गीकरण एवं लगत तयार पार्ने कार्य प्रारम्भ गऱ्यो । यस क्रममा चारवटा सम्पदाहरू सूचिकृत भए । पूर्वमध्यकालीन सहर पनौती भने चारवटा सम्पदाको सूचीभित्र पर्न सकेन । पछिल्लो समयमा सम्पदाहरूको सर्वेक्षण, सङ्कलन, पहिचान, वर्गीकरण एवम् सूचिकृत गर्ने कार्यमा युनेस्कोले महत्व दिँदैआएको छ । पनौती पनि प्रारम्भिक सूचीमा परेको पूर्वमध्यकालीन सहर तथा स्मारक क्षेत्र हो । पूर्वमध्यकालीन सहरका रूपमा पनौतीलाई युनेस्कोको विश्वसम्पदा सूचीमा सूचिकृत गर्ने आधारहरू मनग्य छन् । समग्रमा यस लेखमा पनौतीलाई सूचिकृत गर्ने आधार के के हुन सक्दछन् त्यसको पहिचान गरी सङ्कलन, वर्गीकरण, अभिलेखीकरण र विश्लेषण गरिएको छ ।

यो अध्ययन प्राथमिक तथा द्वितीयक तथ्याङ्कमा आधारित छ । प्राथमिक तथ्याङ्क अवलोकन, अन्तर्वार्ता, छलफल जस्ता विधि प्रयोग गरी सङ्कलन गरिएका हुन् । द्वितीयक तथ्याङ्क भने विभिन्न ग्रन्थ, प्रतिवेदन र लेख रचनाको समीक्षाबाट सङ्कलन गरिएको हो । यस लेखमा गुणात्मक प्रकृतिका तथ्याङ्कहरू सङ्कलन तथा विश्लेषण गरिएका छन् । अतः यो गुणात्मक ढाँचामा आधारित लेख हो ।

## २. पनौतीको ऐतिहासिक पक्ष तथा महत्व

पनौती पूर्वमध्यकालीन सहर हो तथापि यहाँबाट प्राप्त ऐतिहासिक तथा पौराणिक स्रोत सामग्रीहरूले भने पनौती क्षेत्रको इतिहास पूर्वमध्यकालभन्दा धेरै पुरानो



पूर्वमध्यकालीन सहर पनौती

रहेको प्रमाणित गर्दछन् । पौराणिक स्रोत सामग्रीहरूका आधारमा पनौती क्षेत्रको इतिहासलाई महाभारत कालसम्म डोऱ्याउन सकिन्छ । महाभारतकालमा पञ्च पाण्डवहरूले १२ वर्षको वनवास र १ वर्ष गुप्तवास यस क्षेत्रमा विताएका थिए । द्रोपदीको मन्दिर खोपासीमा छ । द्रोपदीको अर्को नाम सैरेन्द्री पनि हो । सैरेन्द्री नाम गरेको नदी खोपासीमा छँदैछ (लाकोजू, २०६५, पृ. ६२) ।

यस क्षेत्रलाई पौराणिक कालमा पाञ्चाल देशका रूपमा सम्वोधन गरिन्थ्यो । भगवान् शाक्य मुनी बुद्धको दान पारमिता पुरा गर्न नमोबुद्धका रूपमा जन्म लिएका महासत्व पाञ्चाल देशका राजा महारथ र सत्यवतीका कान्छा छोरा थिए (लाकोजू, २०६५, पृ. ६७) । यस घटनाको सम्झनामा पनौतीमा प्रत्येक वर्ष भाद्रकृष्ण त्रयोदशीका दिन नमोबुद्ध जात्रा सम्पन्न गर्ने चलन छ ।

पनौती नजिकै रहेको खोपासीको जुगु गाउँबाट नवपाषाण कालको पाषाण उपकरण प्राप्त भएको छ (Sharma, 1983, p. 1) । पनौतीबाट धेरै प्रस्तरका मूर्तिहरू पाइएका छन् । ती मूर्तिहरूमध्ये केहीको बनावट ढाँचा, शैली तथा विशेषताका आधारमा लिच्छविकालको मान्ने गरिन्छ (प्रधान, २०५३, पृ. २४४) । वि.सं. २०४२ मा पनौती खोपासी सडक खन्दा अंशुवर्माका मुद्रा प्राप्त भएका थिए (लाकोजू, २०६५, पृ. ६७-६८) । खोपासीबाट शिवदेव प्रथम र अंशुवर्माको सम्वत् ५२० (सन् ५९८) को अभिलेख पनि प्राप्त भएको छ । अभिलेखमा कुर्प्पासी गाउँमा बसोवास गर्ने मुखियालगायत सबै गृहस्थहरूलाई

सम्वोधन गरका छन् (बज्राचार्य, २०३०, पृ. २७४-२७८) । कुर्प्पासी किराँत भाषाको शब्द हो । उक्त स्थानलाई कुर्प्पासी भनेर सम्वोधन गरेको शन्दर्भले पनौतीको इतिहास किँरात कालसम्म जोड्न सकिने आधार दिएको छ ।

भाषा वंशावलीमा भक्तपुरका राजा आनन्द मल्लले वि.सं. ११५३ मा पनौती, वनेपा, साँगा, धुलिखेल, श्रीखण्डपुर र चौकोट जस्ता सात-सात सय घरसहित सात गाउँ मिलाएर राज्य विस्तार गरेको विवरण पाइन्छ । चौधौँ शताब्दीमा पनौतीमा रामवर्द्धन परिवारको हैकम चल्दथ्यो । यस क्रममा ज्योतिरामका छोरा अनेकरामले वि.सं. १३८९ देखि वि.सं. १४१२ सम्म, अनेकरामका छोरा जयसिंह रामवर्द्धनले वि.सं. १४१३ देखि वि.सं. १४५२ सम्म, जयसिंह रामवर्द्धनका भाइका छोरा मदन रामवर्द्धनले वि.सं. १४५२ देखि वि.सं. १४८२ सम्म पनौतीमा शासन सञ्चालन गरेका थिए । शक्तिसिंह रामवर्द्धनपछि भने वर्द्धन परिवारको शक्ति क्षीण भएको देखिन्छ । मल्ल राज्यको विभाजनपछि पनौती भक्तपुर राज्यअन्तर्गत गाभिन पुग्यो । अन्ततः वि.सं. १८२० कार्तिक ११ गते पृथ्वीनारायण शाहको एकीकरण अभियानमा समेटियो (लाकोजू, २०६५, पृ. ६९-७१) ।

यी सम्पूर्ण सन्दर्भहरू महाभारतकाल अर्थात् परापूर्वकाल तथा प्रागऐतिहासिक कालदेखि नै पनौती क्षेत्रमा मानव बसोवास विस्तार भइसकेको, किराँत एवम् लिच्छविकालमा औद्योगिक क्षेत्रका रूपमा विकास भइसकेको, पूर्वमध्यकालमा स्वतन्त्र राज्यका साथै कला तथा वास्तुकलाको केन्द्रका रूपमा रूपान्तरण भएको र उत्तरमध्यकालमा धार्मिक तथा सांस्कतिक दृष्टिले पुण्य तथा मोक्षदायनी तीर्थका रूपमा विकास भइसकेको विषय पुष्टिका आधार हुन् ।

### ३. पनौतीको सांस्कृतिक पक्ष तथा महत्व

पनौती क्षेत्रमा महाभारतकाल अर्थात् परापूर्वकाल तथा प्रागऐतिहासिक कालदेखि नै मानव बसोवास विस्तार भइसकेको, पूर्वमध्यकाल र उत्तरमध्यकालमा धार्मिक तथा सांस्कृतिक स्थलका रूपमा विकास भइसकेको विषयलाई पौराणिक तथा ऐतिहासिक स्रोत सामग्रीहरूले पुष्टि गरेका छन् । यस क्षेत्रमा विभिन्न कालखण्डमा विशेषतः हिन्दू तथा वौद्ध धर्मसँग सम्बन्धित स्मारक र कलाकृति प्रचूर मात्रामा निर्माण भए । साथै अभ्यास प्रणालीमा आधारित जीवित सम्पदा निरन्तर प्रयोग गरिए । अझ १२ औँ देखि १७ औँ शताब्दीसम्म यस क्षेत्रमा मल्ल वंश र वर्द्धन परिवारको अधिपत्य थियो । वर्तमानमा यस क्षेत्रमा जति पनि सांस्कृतिक सम्पदा पाइएका छन् त्यसको निर्माणमा वर्द्धन परिवारको ठूलो योगदान रहेको छ (Khanal, 2010, p. 6) । यहाँ मूर्त तथा अमूर्त दुबै प्रकारका सांस्कृतिक सम्पदा पाइन्छन् । त्यसो हुँदा उक्त सम्पदालाई मूलतः मूर्त तथा अमूर्त सांस्कृतिक सम्पदाका रूपमा वर्गीकरण गरी प्रस्तुत गरिएको छ ।

### ३.१. मूर्त सांस्कृतिक सम्पदा

भौतिक संस्कृतिको अर्को नाम मूर्त संस्कृति हो । मूर्त संस्कृति भौतिक पक्षसँग सम्बन्धित हुन्छ । मूर्त संस्कृति मानिसको सिर्जना शक्तिको भौतिक अभिव्यक्ति हो । यस किसिमका सांस्कृतिक निधिहरूको आकार प्रकार हुन्छ । त्यस्ता वस्तु देख्न, छुन र प्रयोग गर्न सकिन्छन् । परापूर्वकालदेखि प्रचलनमा रहँदै र मान्दै आएका एवम् निर्माण गरिएका त्यस्ता वस्तुहरूलाई भौतिक संस्कृति भनिन्छ (खत्री, २०७०, पृ.७) ।

युनेस्कोले सांस्कृतिक सम्पदाको वर्गीकरण गर्ने क्रममा मानव बसोवासको ढाँचा, स्मारक तथा कलावस्तु गरी मूर्त सांस्कृतिक सम्पदालाई तीनवटा विधामा विभाजन गरेको छ । यस्ता सम्पदाअन्तर्गत तीर्थस्थल, मठ मन्दिर, गुम्बा, स्तूप, बिहार, मस्जिद, गिर्जाघर, भवन, दरबार, किल्ला, कोट्ट, पाटीपौवा, धर्मशाला, धारा, कुवा, इनार, डबली, मूर्तिकला, चित्रकला, गरगहना, पोशाक, सडक, यातायातका साधन, विभिन्न प्रकारका हातहतियार, औजार, भाँडावर्तन, अभिलेख, ताडपत्र, ताम्रपत्र, भोजपत्र, वाद्यवादन आदिजस्ता कला नमुनाहरू पर्दछन् ।

पनौती सहरमा यी सबै नमुनाहरू पाइदैनन् । कला तथा वास्तुकलासँग सम्बन्धित केही मूर्त सांस्कृतिक सम्पदा भने पाइन्छन् । त्यस्ता सम्पदामध्ये लायकु, मठमन्दिर, स्तुप, चैत्य, पाटीपौवा, सत्तल, घर, भवन, पोशाक तथा गरगहना, वाद्यवादन, भाँडावर्तन तथा हातहतियार आदि महत्वपूर्ण मानिन्छन् । उक्त सिद्धान्तका आधारमा यस अध्ययनमा पनौती सहरमा पाइने मूर्त सांस्कृतिक सम्पदाको सङ्कलन, पहिचान, वर्गीकरण, विश्लेषण र सूचीकृत गर्ने कार्य गरिएको छ ।

**इन्द्रेश्वर महादेव**

इन्द्रेश्वर महादेव मन्दिर पनौतीको मात्र नभएर राष्ट्रिय महत्वको सम्पदा हो । यो नेपाली शैलीमा बनेको तीन तलायुक्त छ । उपत्यकाभित्रका काष्ठमण्डपपछिको यो दोस्रो पुरानो स्मारक हो । यो मन्दिरको निर्माण समय स्पष्ट हुन् सकेको छैन । केही विद्वानूहरूले यसको निर्माण काल १३ औँ शताब्दी मानेका छन् (Slusser, 1998, p. 204)। मन्दिरको पश्चिम ढोकामाथि रहेको सम्वत् ७८४ को चाँदीपत्रमा मुक्तिनाथ भारोले सुनको तीन तले छत्र चढाएको उल्लेख छ । दक्षिण ढोका नजिकै रहेको सम्वत् ९७३ को चाँदीपत्रमा माघ कृष्ण द्वितीया तिथिमा भैरवसिंह चन्द्रमणिले देवलको पश्चिमपट्टी सुनको छाना चढाएको विवरण पाइन्छ (लाकोजू, २०६५, पृ. ८२) । उक्त सन्दर्भहरूले यो स्मारकको विद्यमान संरचना लगभग १२औँ/१३औँ शताब्दीमा निर्माण भएको सङ्केत गर्दछन् ।

पौराणिक साहित्यहरूमा भने यो मन्दिरको प्रारम्भिक संरचनाको निर्माण भगवान् इन्द्रले गरेको विवरण पाइन्छ । ऋषि गौतमकी पत्नी अहिल्याप्रति आसक्त

इन्द्रलाई गौतम ऋषिले शरीरभरि सहस्रयोनी हुने श्राप दिएपछि श्रापमोचनका निमित्त सबै तीर्थको भ्रमण गरे । मोक्ष मिलेन । यहाँ आएर तपस्या तथा स्नान गरेपछि श्रापमोचन भयो । त्यसको सम्मान स्वरूप भगवान् इन्द्रले यो देवस्थलको स्थापना गरेका हुन् (भट्टराई, २०६७, पृ.११) ।

बहुछानेदार यो स्मारकमा चार दिशामा चारवटा प्रवेशद्वार छन् । प्रवेशद्वार माथि कलात्मक तोरणको प्रयोग छ । मन्दिरका चारैतर्फ कलात्मक टुँडाल जडान गरिएका छन् । तल्लो तलाको पूर्वतर्फका टुँडालमा यक्ष, यक्षिणी, गोपिनी र दक्षिणमा पाँचपाण्डवका मूर्ति उत्कीर्ण गरिएका छन् । पश्चिमतर्फका टुँडालमा कुँदिएका आकृति राम, सीता, लक्ष्मण, भरत, शत्रुघ्न र हनुमान् र उत्तरतर्फका चामुण्डा, महेश्वरी, भगवती र भैरवका हुन् । समग्रमा मन्दिरको काष्ठकला तथा आङ्गिक विशेषताले यो बहुछानेदार शैलीको अब्बल नमुना हो भन्ने सङ्केत गर्दछन् ।

**ब्रह्मायणी मन्दिर**

ब्रह्मायणी मन्दिर पनौतीको अर्को महत्वपूर्ण सम्पदा हो । यो नेपाली शैलीमा बनेको तीन तलायुक्त छ । मन्दिरभित्र नेपाल सम्वत् ७८९ को एउटा खण्डित अभिलेख छ । त्यसले यो मन्दिरको अस्तित्व देखाउँछ । त्यस्तै मन्दिरको पश्चिमतर्फ रहेको अर्को शिलालेखमा सम्वत् ८३६ असार मास शुक्लपक्ष नवमी तिथिमा श्रीश्री जयभूपतीन्द्र मल्लकी पत्नी श्रीश्री रणजित मल्लकी आमा श्रीश्री विश्वलक्ष्मीदेवीले श्रीश्रीश्री ब्रह्मायणी देवीको व्रतवन्धनादि पञ्चोपचारपूजाका निमित्त गुठी स्थापना गरी  बीस रोपनी भूमिदान गरेको विवरण पाइन्छ (लाकोजू, २०६५, पृ. ८७) । उक्त सन्दर्भहरूले यो स्मारकको विद्यमान संरचना लगभग १७ औं शताब्दी अर्थात् उत्तरमध्यकालमा निर्माण भएको सङ्केत गर्दछन् ।

बहुछानेदार यो स्मारकमा चार दिशामा चारवटा प्रवेशद्वार छन् । मूल प्रवेशद्वार उत्तराभिमुख छ । प्रवेशद्वारमाथि कलात्मक तोरण छन् । मन्दिरका चारैतर्फ अष्टमातृका र अष्टभैरवका आकृति कुँदिएका कलात्मक टुँडाल जडान गरि एको छ । मन्दिरका भित्तामा कलात्मक चित्रहरू कुँदिएका छन् । मन्दिरभित्र उत्तराभिमुख रहेको ब्रह्मायणी भगवतीको  मूर्ति छ ।

**वंशगोपाल मन्दिर**

शचीतीर्थ अर्थात् त्रिवेणीघाटमा रहेको यो स्मारकलाई राधाकृष्ण र कृष्णको मन्दिर पनि भनिन्छ ।   यो नेपाली शैलीमा बनेको तीन तलायुक्त छ । मन्दिरभित्र रहेको नेपाल सम्वत् ७८४ को एउटा अभिलेखमा राम भारो परलोक जानुभएकोमा राम्रो उद्देश्यले बैशाख शुक्लतृतीयाका दिन पुण्यवतीपुरी इन्द्रेश्वर महादेव नजिक नदी सङ्गमनिकटमा मन्दिर बनाई श्रीश्रीश्री दुई गोपिनीसहित वंशगोपालको  मूर्ति

स्थापन गरी सुवर्णकलस ध्वजारोहण गरेको विवरण पाइन्छ (लाकोजू, २०६५, पृ. ८५) । उक्त सन्दर्भहरूले यो स्मारकको विद्यमान संरचना उत्तरमध्यकालमा निर्माण भएको सङ्केत गर्दछन् । प्रत्येक वर्ष भाद्रकृष्ण त्रयोदशीका दिन नमोबुद्धको जात्राका क्रममा यस मन्दिरमा नमोबुद्धको प्रतिमा राख्ने र जात्रा प्रारम्भ गर्ने परम्परा छ (लाकोजू, २०६५, पृ. ६७) ।

**उन्मत्त भैरव मन्दिर**

उन्मत्त भैरव मन्दिर इन्द्रेश्वर महादेव मन्दिरको दक्षिणमा अवस्थित छ । यो मन्दिर १६ औँ शताब्दीमा निर्माण भएको हो (प्रधान, २०५३, पृ. २४९) । एउटा मात्र छानो भएको यो देवस्थल उत्तराभिमुख छ । अन्य दिशामा प्रवेशद्वार छैनन् । उत्तरतर्फ मात्र कलात्मक तीनवटा प्रवेशद्वार छन् । त्यसमध्ये बीचको प्रवेशद्वार मात्र प्रयोगमा आउँछ । अन्य वन्द रहने गर्दछन् । मन्दिरमाथि तीनवटा झ्याल छन् । त्यहाँबाट तीन जना मानवाकृतिले हेरिरहेका छन् । ती मानवाकृतिलाई पनौती, सुन्थान र खोपासीका राजा मानिन्छ (लाकोजू, २०६५, पृ. ८३) । कसैले तिनलाई भक्तको मूर्ति मानेका छन् (कर्माचार्य, २०५४, पृ. १०) । कसैले भने यक्ष समूहका मूर्ति ठानेका छन् (मानन्धर, २०६४, पृ. १११) ।

**लायकु**

राजदरवारलाई मल्लकालमा लायकु पनि भन्ने गरिन्थ्यो । इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा एउटा लायकुको भग्नावशेष छ । यस क्षेत्रमा केही वर्ष अघि पुरातत्व विभागले उत्खनन् गरेको थियो । त्यस क्रममा लगभग चौधौँ-पन्ध्रौँ शताब्दीताका धेरै पुरातत्विक तथा ऐतिहासिक महत्वका सामग्रीहरू प्राप्त भए । उक्त सामग्री हाल त्यहीको सङ्ग्रहालयको सङ्कलन तथा प्रदर्शनमा राखिएका छन् ।

**सङ्ग्रहालय**

इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा एउटा सङ्ग्रहालय छ । त्यहाँ पनौती क्षेत्रबाट प्राप्त भएका प्रस्तर, काठ, धातु, मृण्मयबाट बनाइएका विभिन्न देवीदेवताका मूर्ति, तोरण, काठका कलात्मक टुँडाल  पोशाक तथा गरगहना, वाद्यवादन, भाँडावर्तन तथा हातहतियार जस्ता धार्मिक, सांस्कृतिक तथा ऐतिहासक दृष्टिकोणले महत्वपूर्ण कला सम्पदाहरू सङ्कलन तथा सर्वसाधारणका निमित्त प्रदर्शनमा राखिएका छन् ।

माथि उल्लिखित स्मारकका अतिरिक्त पनौतीको इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा काथनगणेश, विश्वनाथ र पशुपतिनाथ मन्दिर नेपाली शैलीमा बनेको दुई तलायुक्त संरचना हुन् । बद्रिनाथ, केदारनाथ, रामजानकी मन्दिर, तोलानारायण, भैरवनाथ मन्दिर शिखर वास्तुशैलीमा निर्माण गरिएका महत्वपूर्ण स्मारक मानिन्छन् ।

भीमसेन, सङ्कटा, महेश्वरी, इन्द्रायणी, महालक्ष्मी, नाट्यश्वरी मन्दिर जस्ता देवलहरू खुला भूईं सतहमा रहेका इन्द्रेश्वर महादेव स्मारक क्षेत्रका सम्पदा हुन् ।

### ३.२. **अमूर्त सांस्कृतिक सम्पदा**

अभौतिक संस्कृतिलाई अमूर्त संस्कृति भन्ने गरिन्छ। मानिसका क्रियाकलाप पछि उसको सोच, योजना, मान्यता, सीप, व्यवहार जस्ता कुराहरू समष्टिमा अभौतिक वा अमूर्त संस्कृतिका नमुना  हुन् (खत्री, २०७०, पृ.८) । वास्तवमा देख्न र सुन्न सकिने तर कुनै निश्चित भौतिक वा मूर्त आकार नभएका महशुस गरी आनन्द लिन सकिने सामाजिक मूल्यमान्यता, परम्परा, भाषा, संस्कार, विचार, वुद्धि, ज्ञान, सामाजिक संस्था, प्रथा तथा प्रथाजनित कानुन, लोकताल, लोकगीत, लोकनृत्य, लोककथा,  लोकगाथा, उखान, टुक्का, लोकधर्म, तन्त्रमन्त्र, झारफुक, धामीझाँक्रीप्रथा, लोकऔषधोपचार जस्ता सम्पूर्ण सांस्कृतिक निधिहरूलाई अभौतिक संस्कृतिअन्तर्गत राख्न सकिन्छ ।

युनेस्कोले अभौतिक संस्कृतिलाई अमूर्त संस्कृति भनेको छ। युनेस्को अभिसन्धि २००३ ले अमूर्त संस्कृतिलाई मौखिक परम्परा एवम् अभिव्यक्ति; अभिनय तथा प्रदर्शनकारी कला; सामाजिक व्यवहार, अनुष्ठान तथा चाडपर्व उत्सव; प्रकृति र ब्रम्हाण्डसँग सम्बन्धित ज्ञान तथा व्यवहार; र परम्परागत कलाकौशल र शिल्प प्रविधि गरी पाँचवटा विधामा वर्गीकरण गरेको छ (UNESCO, 2003, p. 8)। उक्त सिद्धान्तका आधारमा यस अध्ययनमा पनौती सहरमा पाइने अमूर्त सांस्कृतिक सम्पदाको सङ्कलन, पहिचान, वर्गीकरण, विश्लेषण र सूचीकृत गर्ने कार्य गरिएको हो ।

### **नेवार संस्कृति तथा परम्परा**

पनौतीमा नेवार, ब्राह्मण, क्षेत्री, गिरी, मगर, तामाङ जस्ता समुदायका मानिसहरू बसोवास गर्दछन् । विशेषतः नेवार यहाँ बसोवास गर्ने प्रमुख जाति हुन् । त्यसभित्र पनि आचाजु, अमात्य, बज्राचार्य, वनमाला, वासी, भुजु, द्यौला, जोशी, कर्माचार्य, खड्गी, लाकोज, महाजु, मानन्धर, लापित, राजोपाध्याय, उदास, तुलाधर, सुवाल, उलक, श्रेष्ठ, ताम्राकार जस्ता समुदायको बसोवास पनौती सहरमा पाइन्छ। उक्त समुदायले जातीय संस्कारगत कर्म, चाडपर्व तथा व्रतउपासना र धार्मिक अनुष्ठान सम्पादन गर्दा आफ्नो कुल परम्पराअनुसार मौलिक विधिविधानलाई नै आत्मसाथ गर्दछन् ।

### **ज्यापुन्ही**

ज्यापुन्ही पनौतीको महत्वपूर्ण जात्रा हो । यो जात्रा जेष्ठपूर्णिमाका दिन मनाइन्छ । यद्दपि यसको प्रारम्भ भने जेठको शुक्लपक्षको द्वादशीदेखि नै हुन्छ। पहिलो

दिनलाई *द्यः क्वाहाँ विज्याइगु* भन्दछन् । यस दिन ब्रह्मायणी र भद्रकालीको मूर्ति मूल कोठाबाट बाहिर राखिन्छ । यसै दिनबाट जात्रा प्रारम्भ हुन्छ । त्रयोदशीको दिनलाई *डुइँचा डायकेगु वा कुलक्या* भन्दछन् (लाकोजू, २०६५, पृ. ४१-४५) । यस दिन भद्रकालीको मूर्ति ब्रह्मायणी मन्दिरभित्र रहेको भद्रकालीको शिलासँगै राखिन्छ । ब्रह्मायणी पीठ र इन्द्रेश्वर प्राङ्गणमा राँगाको बलि दिन्छन् । यस दिन भैरव र गणेशको पनि जात्रा चल्दछ । चर्तुदशीका दिन थप विभिन्न कार्यहरू गरिन्छन् । त्यसमध्ये उन्मत्त भैरव र भद्रकालीको रथ लायकुमा लगेर एकअर्कामा जुधाउने चलन छ । यो कार्य उन्मत्त भैरव र भद्रकाली बीचको यौनक्रियाको प्रतीक हो (Ulak, 2012, p. 75-76) । यसपछि भने विधिवत रूपमा जात्रा समापन हुन्छ । यसलाई पनौती जात्रा पनि भन्दछन् । जेठ महिनामा मनाइने हुँदा यसलाई हिले जात्रा पनि भन्ने गर्दछन् । गहुँ काट्ने तथा धान रोप्ने समयमा यो जात्रा मनाउने चलन छ ।

### मकर मेला

मकर मेला पनौतीको निकै महत्वपूर्ण पर्व हो । यो पर्व प्रत्येक १२ वर्षमा मनाउने परम्परा छ । यसलाई भारतको विहार प्रदेशको प्रयागमा लाग्ने कुम्भ मेलाका रूपमा लिने गरिन्छ । सौर्य पात्रोअनुसार सूर्य कुम्भराशिबाट मेषराशिमा प्रवेश गर्दा यो चाड मनाइन्छ । मेलाका दिन टाढाटाढाबाट हिन्दू धर्माबलम्बीहरू मकर स्नान गर्न यस तीर्थमा आउने गर्दछन् । यस दिन रुद्रावती, लीलावती र पुण्यवती नदीको सङ्गममा अवस्थित त्रिवेणी तीर्थमा स्नान गरी इन्द्रेश्वर महादेवको दर्शन गरेमा सबै प्रकारका पापहरूबाट मोक्ष प्राप्त गर्नुका साथै शरीरका चर्मसम्बन्धी सबै रोग नास हुन्छन् भन्ने विश्वास छ । किम्वदन्तीअनुसार भगवान् इन्द्रले गौतम ऋषिद्वारा पाएको श्रापबाट मुक्तिप्राप्त गर्न १२ वर्षसम्म यसै तीर्थमा बसेर भगवान् शिवको तपस्यामा गरेका थिए । यसै दिन स्नान गरी शरीरका हजार योनी हटेका थिए । यसपछि यहाँ प्रत्येक १२ वर्षमा मकर मेला लाग्न थालेको हो (Bhattarai, 2010, p.15) ।

### नमोबुद्ध जात्रा

पनौती प्राचीन समयमा पाञ्चाल देशका रूपमा चिनिन्थ्यो । भगवान् शाक्य मुनि बुद्धको दान पारमिता पुरा गर्न नमोबुद्धका रूपमा जन्म लिएका महासत्व पाञ्चाल देशका राजकुमार थिए । उनको सम्झना र सम्मानमा पनौती सहरमा प्रत्येक वर्ष भाद्रकृष्ण त्रयोदशीका दिन नमोबुद्ध जात्रा सम्पन्न गर्ने चलन छ । जात्रा प्रारम्भ गर्नु अघि भाद्रकृष्ण द्वादशीका दिन नमोबुद्धको प्रतिमा श्रीकृष्ण भगवान् (वंशगोपाल) को मन्दिरमा पश्चिमाभिमुख पारेर राख्दछन् । मूर्तिमा स्थानीयहरूले पूजा गर्दछन् । साँझपख मूर्ति खटमा राखेर लायकुको पाटीमा  राखिन्छ । त्यहाँ

पनि स्थानीयहरूले पूजा चढाउँदछन् । भोलिपल्ट त्रयोदशीका दिन पञ्चदान दिइन्छ । यस दिन अगाडिको खटमा दिपङ्कर बुद्ध र पछाडि नमोबुद्धको प्रतिमा राखी जात्रा चलाउँदछन् (लाकोजू, २०६५, पृ. ३४-३५) ।

## हरिसिद्धि नाच

हरिसिद्धि शक्तिकी देवी हुन् । यिनलाई भारत उज्जैन राज्यका राजा विक्रमादित्यको कुलदेवता मानिन्छ । वंशावलीमा भगवती हरिसिद्धिको आज्ञाअनुसार नै राजा विक्रमादित्यले यिनलाई तान्त्रिक विधिद्वारा नेपालमा ल्याएर स्थापना गरेका हुन् (पौडेल, २०२०, पृ. ६४) । राजा विक्रमादित्यले आजभन्दा २४ सय वर्ष अघिबाट हरिसिद्धिको सम्मानमा नृत्य गर्ने चलन पनि प्रारम्भ गरे । काठमाडौँ उपत्यकामा केही स्थानमा मात्र यो नृत्य प्रदर्शन गरिन्छ । ललितपुरको हरिसिद्धि प्रमुख स्थान हो । यहाँ मार्ग पूर्णिमा र फाल्गुण पूर्णिमा गरी वर्षको दुई पटक नचाइन्छ । विशेष नाच भने प्रत्येक १२ वर्षमा भाद्रकृष्ण प्रतिपदा अर्थात् गाईजात्राको साँझदेखि मार्ग पूर्णिमासम्म नचाउँछन् । यसलाई हरिसिद्धि बाऱ्ह वर्षे नाच भनिन्छ (धौबन्जार, २०७९, पृ. १७९) ।

यो नाचले देवीदेवता र आत्मका बीचमा प्रत्यक्ष सम्बन्ध स्थापित गर्दछ भन्ने विश्वास पाइन्छ । केही वर्ष अघिसम्म पनि यो नृत्य पनौतीमा पनि प्रत्येक १२ वर्षमा भाद्रकृष्ण प्रतिपदा अर्थात् गाईजात्राको साँझदेखि मार्ग पूर्णिमासम्म नचाउने चलन थियो । इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा यो नृत्य प्रदर्शन गरिन्थ्यो (Ulak, 2012, p. 77) । हिजोआज भने यो परम्परा पूर्णरूपमा रोकिएको छ ।

## माधवनारायण मेला

श्री स्वस्थानी व्रत नेपालको महत्वपूर्ण पर्व हो । यो माघ महिनामा पर्दछ । एक महिनासम्म चल्ने श्री स्वस्थानी व्रत र माधवनारायण मेला काठमाडौँको साँखुबाट प्रारम्भ हुन्छ । माधवनारायण व्रत निकै कठोर उपासना विधि हो । यो व्रतका क्रममा व्रतालु भक्तजनहरू काठमाडौँ उपत्यकाबाहिर पनौतीको इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा एक रात बसेर देवीदेवताको पूजाउपासना गर्दछन् । भोलिपल्ट साँखु जान्छन् (Ulak, 2012, p. 77) ।

## नवदुर्गा नाच

नवदुर्गा नाच विशेषतः भक्तपुरमा प्रत्येक वर्ष नवरात्रका अवसरमा प्रदर्शन गरिने महत्वपूर्ण नृत्य मानिन्छ । नवदुर्गा नाचको ऐतिहासिक नाम *इकु प्याखँ* हो (श्रेष्ठ, २०७७, पृ. २८४) । भक्तपुरका मध्यकालका राजा सुवर्ण मल्लले यो नृत्यको प्रारम्भ गराएका हुन् (बज्राचार्य, २०३९, पृ. ६६) । पनौतीमा यस नृत्यलाई देवी नाच (देवी प्याखँ) भन्ने चलन छ । वि.सं. २००५ सम्म यो नृत्य प्रत्येक वर्ष

दशैको घटस्थापनादेखि प्रदर्शन गरिन्थ्यो । वि.सं. २०३८ देखि वि.सं. २०५३ सम्म बन्द भयो । पुनः वि.सं. २०५४ देखि निरन्तर प्रदर्शन गरिदैआएको छ । इन्द्रेश्वर पटाङ्गिनी, ब्रह्मायणी डवली र लाम्पाटी गरी तीनस्थानमा यो नृत्य देखाउँदछन् । भैरव, महाकाली, बाराही, कुमारी, महेश्वरी, ब्रह्मायणी, इन्द्रायणी, गणेशलगायतका देवीदेवता, केही दानव, भुतप्रेत, ख्याकको नृत्य यसमा प्रस्तुत गरिन्छ (लाकोजू, २०६५, पृ. ४७) ।

**योमरी पुन्हि**

योमरी पुन्हि नेवार समुदायको महत्वपूर्ण चाड हो । प्रत्येक वर्ष मंसिर पूर्णिमाका दिन यो पर्व मनाउने गर्दछन् । यो दिनलाई धान्यपूर्णिमा पनि भन्ने चलन छ (श्रेष्ठ, २०७७, पृ. २०४) । यो पर्व मनाउने परम्पराको थालनी पाञ्चाल देशबाट भएको विश्वास गरिन्छ । प्रचलित एक मिथकअनुसार पाञ्चाल देशमा सुचन्द्र र कीर्ति नाम गरेका एक दम्पति थिए । आफ्नो खेतमा फलेको चामलबाट एक प्रकारको अनौठो रोटी बनाए । त्यो निकै स्वादिष्ट भयो । सबैले मन पराए । मन परेको स्वादिस्ट परिकार भएकाले त्यसलाई योमरी भनियो । त्यसैबखत कुवेर आफ्नो भेष बदलेर उक्त ठाउँमा घुम्दै थिए । ती दम्पतिले उनलाई पनि खान दिए । कुवेरले आफ्नो वास्तविक रूप देखाए । दम्पतिलाई धनधान्यले सम्पन्न हुने वरदान दिए । कुवेरले मंसिर पूर्णिमाका दिन जसले देवदेवतालाई योमरी चढाउँदछ त्यो परिवारले गरिवीबाट मुक्ति पाउने छ, धनधान्यले युक्त हुनेछ भन्ने वरदान पनि दिए । त्यस वेलादेखि योमरी बनाउने र देवदेवतालाई चढाउने कार्यले चाडपर्वको रूप लिएको हो (Ulak, 2012, p. 77-78) ।

वास्तवमा योमरी निर्माण गर्ने परम्पराको थालनी पनौतीबाट भयो । यो पछि काठमाडौँ उपत्यकालगायत अन्य नेवार समुदायमा पुग्यो । योमरी बनाउने, देउदेउतालाई चढाउने र पर्वको खाद्यपरिकारका रूपमा खाने परम्परा संसारका कुनै पनि मुलुकमा पाइदैन (Kunwar, 2011, p.77) । नेवार समुदायमा दुईदेखि बाऱ्ह वर्षसम्मका बालवालिकाको जोर वर्ष परेका बखत जन्मदिन मनाउँदा जति वर्ष हो त्यति नै योमरीको माला बनाएर लगाइदिने, गर्भवतीलाई माइतमा ल्याएर योमरी खान दिने, भीमरथारोहणमा योमरी खुवाउने र रातो तथा सेतो मच्छेन्द्रनाथको रथ यात्रा प्रारम्भ गर्नु अघि योमरी छर्ने चलन छ (लाकोजू, २०६५, पृ. ४०) ।

माथि उल्लिखित पर्वका साथै पनौतीमा प्रत्येक शनिबार इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा ब्रह्मायणीको पूजा, अक्षयतृतीयामा बेलविवाह त्रिवेणीघाट, बैशाख नवदुर्गा जात्रा र बुद्ध जात्रा, जेठमा सिठी नखः, पनौती जात्रा र चिलाख जात्रा, असारमा देशपूजा, श्रावणमा गठेमङ्गल र गुँलाबाजा परिक्रमा पर्व,

भाद्रमा गाईजात्रा, क्वाँटी पर्व (जनैपूर्णिमा), तीजपर्व, चोथापर्व, भाद्र देवीनाच, कृष्ण जात्रा, भीमसेन जात्रा, नवबुद्ध जात्रा, असोजमा दशै फूलपाति उत्सव, घटस्थापनादेखि दशमीसम्म स्वांतकी पर्व, दशैको टीकाका दिन तलेजु जात्रा, दशैको द्वादशीका दिन ब्रह्मायणी जात्रा, सिद्धिविनायक (गणेश) जात्रा, खड्ग जात्रा, कार्तिकमा दाफा भजन, ब्रह्मायणी र काठगणेशको पूजा, महालक्ष्मी जात्रा पूजा, सकिमनापूर्णे पर्व, गणेश जात्रा, मंसिरमा धान्यपूर्णे (योमरी), गणेश जात्रा, माघमा माधवनारायणका पूजापर्व, बाऱ्हवर्षे मेला, मानेश्वरी जात्रा, भीमसेन जात्रा, फाल्गुण सङ्कटा जात्रा, चैत्र विस्केट जात्रा र नवदुर्गा जात्रा जस्ता मेला, पर्व, जात्रा तथा नृत्य इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा आयोजना र सम्पन्न गरिन्छन् ।

## ४. निष्कर्ष

वास्तवमा पनौती सांस्कृतिक सम्पदाले सम्पन्न पूर्वमध्यकालीन तथा उत्तरमध्यकालीन नगर हो । तथापि यस क्षेत्रको इतिहास पूर्वमध्यकालभन्दा धेरै पुरानो देखिन्छ । पनौती क्षेत्र विशेषतः हिन्दू तथा बौद्ध धर्मसँग सम्बन्धित स्मारक र कलाकृतिले भरिएको नगर हो । लायकु, डवली, मठमन्दिर, स्तुप, चैत्य, विहार, पाटीपौवा, सत्तल, ढुङ्गेधारा जस्ता सयको सङ्ख्यामा भन्दा धेरै सांस्कृतिक सम्पदा इन्द्रेश्वर महादेव स्मारक क्षेत्रभित्र पाइन्छन् । साथै अभ्यास प्रणालीमा आधारित जीवित सम्पदा पनि छन् । उक्त सम्पदालाई मूर्त तथा अमूर्त दुबै स्वरूपमा वर्गीकरण गर्न सकिन्छ । मठमन्दिर, मूर्ति, घर, भवन, पोशाक तथा गरगहना, वाद्यवादन, भाँडावर्तन तथा हातहतियार यहाँ पाइने महत्वपूर्ण मूर्त सांस्कृतिक सम्पदा हुन् । नेवार संस्कृति तथा परम्परा, ज्यापुन्हि, मकर मेला, नमोबुद्ध जात्रा, हरिसिद्धि नाच, माधवनारायण मेला, नवदुर्गा नाच, योमरी पुन्हिलगायतका मेला, पर्व, जात्रा, उत्सव तथा नृत्य इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा आयोजना र सम्पन्न गरिने उल्लेख्य अमूर्त सांस्कृतिक सम्पदा मानिन्छन् ।

समग्रमा माथि उल्लिखित मूर्त तथा अमूर्त दुबै स्वरूपका सम्पदाको कमी पनौतीको इन्द्रेश्वर महादेव स्मारक क्षेत्रमा छैन । यस क्षेत्रमा लिच्छवि तथा मल्लकालमा निर्माण गरिएका तथा अभ्यासमा ल्याइएका दुबै स्वरूपका सम्पदा मनग्य पाइन्छन् । उक्त सम्पदा पनौतीको विशिष्ठ तथा पृथक पहिचान स्थापित गर्ने आधार हुन् । त्यो यस क्षेत्रको सार्मथ्य हो । युनेस्कोको विश्वसम्पदा सूचीमा सूचीकृत गर्ने आधारहरू मानिन्छन् । यिनै सम्पदाका कारण पनौती पूर्वमध्यकालीन सहर तथा स्मारक क्षेत्रका रूपमा युनेस्कोको विश्वसम्पदा सूचीको प्रारम्भिक सूचीमा परेको हो । यसलाई सार्थक र मूर्त तुल्याउनु पर्दछ । यसका निमित्त सम्पदाको संरक्षण, सम्वर्द्धन र प्रचारप्रसार अनिवार्य सर्त हो ।

तर यहाँबाट धेरै सम्पदाहरू हराइसकेका छन् । त्रिवेणीघाटबाट सन् १९८३ मा १४ औं शताब्दीको लक्ष्मी, गरुड र विष्णु, सूर्य, नवग्रहसहितको सूर्य, १८ औं शताब्दीको स्थानक विष्णुको मूर्ति चोरी भए । सन् १९८६ मा १३ औं शताब्दीको शिवको मूर्ति पनि चोरी भयो । ब्रह्मायणीको मूर्ति पनि चोरी भयो । वि.सं. २०६४ मा वंशगोपाल मन्दिरभित्रको एउटा गोपिनीको मूर्ति पनि चोरी भएको छ । मूर्ति मात्र होइन विश्वेश्वर, ब्रह्मायणी र कृष्ण मन्दिरका कलात्मक टुँडाल पनि चोरी भए । यो क्रम रोकिएको छैन । यो सन्दर्भ सम्पदाको संरक्षण, सम्वर्द्धन, प्रचारप्रसार  प्रर्याप्तरूपमा हुन सकेको छैन भन्ने विषयको सङ्केत हो । त्यसतर्फ सबै सरोकारवालाहरूको ध्यान जानु पर्दछ । त्यसो भयो भने मात्र इन्द्रेश्वर महादेव स्मारक क्षेत्रलाई युनेस्कोको विश्वसम्पदा सूचीमा समावेश गर्न सकिन्छ ।

**सन्दर्भ सामग्री**


कर्माचार्य, विजयराम (२०५४). *पनौती.* पनौती : विजयराम कर्माचार्य ।

खत्री, प्रेमकुमार (२०७०). *संस्कृति र अनुभूतिका आयामहरू,* काठमाडौ : सम्पदा संरक्षण, बिपद व्यवस्थापन तथा सामुदायिक विकास समाज ।

दुलाल, लोकनाथ (सन् २०२०). नेपालमा ऋषिमुनिका आश्रम, NUTA Journal 2020, December DoI:10.3126/nutaj.v7i1-2.40008, 7(1-2):131-145.

धौबन्जार, गोपाल (२०७९). *काठमाडौं उपत्यकाका बस्तीहरू.* काठमाडौ : स्वदेश प्रकाशन प्रा.लि. ।

प्रधान, ऋद्धि (२०५३). *पनौतीको सांस्कृतिक सम्पदाको एक अध्ययन,* बनेपाः बनेपा नगरपालिका ।

पौडेल, नयनाथ (सम्पा.) (२०२०). *भाषा वंशावली.* भाग १. काठमाडौ : नेपाल राष्टिय पुस्तकालय ।

बज्राचार्य, आशाकाजी (२०३९). *मल्लकालीन गँप्याखँ.* ललितपुर : आशाकाजी बज्राचार्य ।

बज्राचार्य, धनबज्र (२०३०). *लिच्छविकालका अभिलेख,* काठमाडौ : नेपाल एशियाली अध्ययन संस्थान ।

भट्टराई, घटराज (२०६७). *नेपालका धार्मिक स्थलहरू (सांस्कृतिक कोष),* काठमाडौ : विद्यार्थी पुस्तक भण्डार ।

मानन्धर, जितबहादुर (२०६४). *मेरा केही सांस्कृतिक निवन्धहरू.*

काठमाडौँ : श्रीमती तारादेवी मानन्धर ।

लाकोजू, सूर्यप्रसाद (२०६५). *पनौती,* पनौती : सविताकुमारी श्रेष्ठ ।

श्रेष्ठ, कल्पना (२०७७). *काठमाडौँ उपत्यकाको सांस्कृतिक परम्परा.* काठमाडौ : पल्लव प्रकाशन प्रालि ।

Bhattarai, S. (2010). Makar Mela. ESC Nepal Magazine, March, p.18.

Khanal, S. (2010). Panauti dig Seeks New Light on Medival Nepal, My Republica, Daily English News Paper, March 14 Kathmandu: Nagarik Publication.

Kunwar, R. R. (2011). Special Interest Tourism: A Study of Growing Significance of Food Tourism, The GAZE Journal of Tourism and Hospitality. 3 (1): 77-97.

Sharma, J.L (1983). Neolithic tools from Nepal. Ancient Nepal. Journal of the Department of Archaeology. (75):1-12.

Slusser, M. (1998). Nepal Mandal. Vol. I. Prinston: Prinston University.

Ulak, B. N. (2012). Heritage Tourism in Panauti, Nepal, Journal of Tourism and Hospitality, Kathmandu: International School of Tourism and Hotel Management. 4 (1): 64-82.

UNESCO (2003). Convention of the Safe Guarding of the Intangible Cultural Heritage 2003, Kathmandu : UNESCO Office Nepal.

# लोमान्थाङः विश्व सम्पदाको सम्भावित सूची रहेको मध्यकालीन वस्ती



✍ देवेन्द्र भट्टराई*

## १. पृष्ठभूमि

विश्व सम्पदा स्थल भन्नाले युनेस्को-अन्तराष्ट्रिय अभिसन्धीद्वारा विश्व सम्पदाको रुपमा कानूनी सुरक्षा प्रदान गरिएको निश्चित सीमानाभित्र अनुवन्धित क्षेत्र भन्ने बुझिन्छ। त्यस्तो क्षेत्र विशेषको ऐतिहासिक, सांस्कृतिक, वैज्ञानिक वा अन्य किसिमका महत्वहरूको आधारमा युनेस्कोद्वारा विशेष प्रकृयामार्फत विश्व सम्पदा क्षेत्रको रुपमा घोषणा गर्ने गरिन्छ। यस्ता विश्व सम्पदाहरू सांस्कृतिक, प्रकृतिक र मिश्रित गरी तीन किसिमबाट सूचिकृत गर्ने गरिन्छ। युनेस्को विश्व सम्पदा समितिको ४४औं वैठकबाट भएको निर्णय समेतलाई समावेश गर्दा हालसम्म १६७ पक्षराष्ट्रका जम्मा १,१५४ स्थललाई विश्व सम्पदा सूचीमा समावेश गरिए को छ जसमध्ये मिश्रित ३९, प्राकृतिक २१८ र सांस्कृतिक विश्व सम्पदा ८९७ वटा रहेका छन्। हालसम्म नेपालका दुईवटा प्राकृतिक र दुईवटा सांस्कृतिक सम्पदाहरूलाई विश्व सम्पदा सूचीमा सूचिकृत गरिएको छ। ती सांस्कृतिक सम्पदाहरूमा काठमाडौ उपत्यका विश्व सम्पदा स्थल र गौतमबुद्धको जन्मस्थल लुम्बिनी रहेका छन्। विश्व सम्पदा सूचीमा सूचीकरणका लागि प्रस्ताव पेश गर्नु भन्दा कम्तिमा एक वर्ष पूर्व नै त्यस्ता सम्पदा वा सम्पदास्थललाई विश्व सम्पदाको संभावित सूचीमा समावेश गर्नु पर्ने प्रावधान रहेको छ (Operational Guideline, 2021)। विश्व सम्पदाको सम्भावित सूचीमा समावेश गर्नका लागि उक्त सम्पदा वा सम्पदा स्थलको भौगोलिक अवस्थिति, सामान्य परिचयात्मक

*पुरातत्व अधिकृत, पुरातत्व विभाग

विवरण, र त्यस सम्पदा स्थलको विश्वव्यापी महत्वका बारेमा औचित्य पुष्ट्याईं सहितको कागजात तोकिएको ढाँचामा पेश गर्नु पर्ने प्रावधान रहेको छ । हालसम्म युनेस्को महासन्धी १९७२ अनुमोदन गर्ने १९४ पक्षराष्ट्रहरू मध्ये १८४ राष्ट्रहरूले आफ्ना देशका सम्पदाहरूलाई सम्भावित सूचीमा राखेका छन् । जसमध्ये नेपाल पनि एक हो । सन् १९९६ मा ६ वटा र सन् २००८ मा ९ वटा गरी नेपालका १५ वटा सम्पदाहरूलाई विश्व सम्पदाको सम्भावित सूचीमा राखिएको छ ।

२. **विश्व सम्पदाको सम्भावित सूचीमा रहेको लोमान्थाङ किल्लावस्ती**



माटोको किल्ला पर्खाल भएको लोमान्थाङ वस्ती

विश्व सम्पदाको सम्भावित सूचीमा राखिएका नेपालका १५ स्थलहरूमध्ये मुस्ताङ जिल्लाको लोमान्थाङ एक हो । इश्वीको १५औं शताब्दीमा निर्माण गरिएको र अद्यापि जीवन्त रहेको माटोको किल्ला पर्खाल र यसबाट परिवेष्टित मध्यकालीन वस्ती एवं सम्पदाहरूलाई महत्व दिई भविष्यमा विश्व सम्पदा सूचीमा सूचिकृत गर्ने उद्देश्यले सन् २००८ मा लोमान्थाङलाई विश्व सम्पदाको सम्भावित सूचीमा समावेश गरिएको छ ।

विश्व सम्पदाको सम्भावित सूचीमा राख्नका लागि पक्षराष्ट्रबाट उक्त स्मारक वा स्मारकहरू रहेको क्षेत्रका लागि स्पष्ट नाम किटान गरी, सम्पदा रहेको स्थानको भौगोलिक अवस्थिति (geographical location) खुलाई, सो सम्पदा वा सम्पदा

क्षेत्रको संक्षिप्त विवरण तथा सम्पदामा कायम विश्वव्यापी महत्व (Outstanding Universal Value-OUV) को पुष्ट्याईं (Justification)सहित पेश गर्नु पर्ने हुन्छ (श्रेष्ठ, २०७९) । यस लेखमा लोमान्थाङको संक्षिप्त ऐतिहासिक पक्षसहित उल्लेखित विवरणहरू समेट्ने प्रयास गरिएको छ ।

## २.१ **भौगोलिक अवस्थिति**

माथिल्लो मुस्ताङ क्षेत्र चीन स्वशासित तिब्बती पठारको दक्षिणी सीमावर्ती भाग हो । मुस्ताङलाई नेपालमा हिमालपारीको जिल्लाको रुपमा चिनिन्छ । मुस्ताङलाई उपल्लो मुस्ताङ र तल्लो मुस्ताङ गरी दुई भागमा विभाजन गरिए को छ । यो विभाजन भौगोलिक भन्दा परम्परागत राजनीतिक विभाजन थियो । घिलिङभन्दा उत्तरतर्फ तिब्बतको सीमाना सम्मको भागलाई उपल्लो मुस्ताङ भन्ने गरेको पाइन्छ । यो समग्र उपल्लो मुस्ताङ क्षेत्र समुद्र सतहबाट ३,३०० मिटरबाट सुरु भई ६,७०० मिटरको उचाइमा रहेको खुम्जुङ हिमालसम्म फैलिएर रहेको छ । उपल्लो मुस्ताङमा पर्ने लोमान्थाङ क्षेत्र २९ डिग्री १२ मिनेट ९७ सेकेन्ड उत्तरी अक्षांश र ८३ डिग्री ५२ मिनेट ६३ सेकेन्ड पूर्वी देशान्तरमा समुद्र सतहबाट ३,८५० मिटरमा अवस्थित छ । लोमान्थाङ सम्पदा वस्ती साविकको लोमान्थाङ गाउँ विकास समिति अन्तर्गतका आठ वटै वडाहरू पर्ने गरी व्यवस्था गरिएको थियो । २०७३ सालमा गरिएको प्रशासनिक व्यवस्था अनुसार लोमान्थाङ गा.वि.स., छोसेर गा.वि.स. र छोनुप गा.वि.स. लाई मिलाएर वर्तमान लोमान्थाङ गाउँपालिका बनाइएको छ । लोमान्थाङ गाउँपालिकाको कुल क्षेत्रफल ७२७ वर्गकिलोमिटर रहेको छ । विश्व सम्पदाको सम्भावित सूचीमा रहेको लोमान्थाङ क्षेत्र भने लोमान्थाङ गाउँपालिकाको वडा नं. ५ मा अवस्थित छ ।

## २.२ **ऐतिहासिक पृष्ठभूमि**

लोमान्थाङको राजनैतिक इतिहास मुस्ताङ राज्यको स्थापना अघि नै सुरु भएको मान्न सकिन्छ । इश्वी १४२५ तिर ग्वाङथाङ राज्यबाट मुस्ताङ क्षेत्र हेर्ने गरी गभर्नर तोकिएका अम पालले  लगभग इश्वी १४४० मा मुस्ताङलाई स्वतन्त्र राज्यको रुपमा घोषणा गरी लोमान्थाङलाई राजधानीको रुपमा स्थापना गरेको बुझिन्छ । तर यस क्षेत्रको ऐतिहासिक पृष्ठभूमि पन्ध्रौं शताब्दीमा मात्र सीमित रहन सक्दैन । लोमान्थाङको इतिहास प्रकारान्तरले समग्र मुस्ताङ क्षेत्रको इतिहाससँग जोडिन पुग्दछ । यस क्षेत्रको प्राचीन नाम  "बूलो" अर्थात "लो" थियो (शर्मा र गुरुङ, २०५६ एवं ढुङ्गेल, २००२) । मुस्ताङ क्षेत्रको ऐतिहासिक अध्ययन भने इश्वी १९५० पछि मात्र प्रारम्भ भएको हो । Giuseppe Tucci यस क्षेत्रको भ्रमण गर्ने पहिलो पश्चिमा विद्वान् थिए । तर यस क्षेत्रको राजनैतिक इतिहासको अध्ययन सुरुवातीको श्रेय भने Michel Peissel लाई जान्छ । Peissel ले सन् १९६४

मा यस क्षेत्रको भ्रमण गरी स्वतन्त्र मुस्ताङ राज्यका राजाहरूको वंशावली (Genealogical History) तयार गरेका थिए । त्यसपछि नारायाण प्रसाद क्षेत्री, डेभिड पी ज्याक्सन, जगमान गुरुङ, प्रयागराज शर्मा, रमेश ढुङ्गेल, रोब र्टो भिटाली, एल्के सेल्टर, जोन ह्यारिसन लगायत थुप्रै विद्वान्हरूले यहाँको वहुआयामिक अध्ययन गरिसकेको अवस्था छ ।

मुस्ताङ्ग क्षेत्रको प्राचीन ऐतिहासिक अध्ययनमा पुरातात्विक अन्वेषण एवं उत्खनन् कार्यहरूको पनि विशेष भूमिका छ । विभिन्न अन्वेषण तथा उत्खनन् बाट प्राप्त हुन आएका मानव अस्थिपञ्जर, गरगहना, माटाका भाँडाकुँडा, लुगाफाटाका अवशेष, गुफाहरूमा प्राप्त तत्कालीन मानवले उपभोग गरेका जनावरका छाला र हाडखोर तथा अन्य सम्बद्ध सामग्री (Associated material) का रुपमा रहेका अन्य विभिन्न जैविक (organic) वस्तुहरू नै यस क्षेत्रको प्रारम्भिक कालको इतिहासको जानकारी लिने स्रोतहरू बनेका छन् । उत्खनन् हरूबाट प्राप्त प्रमाणहरूको अध्ययन गर्दा मुस्ताङ्गको इतिहास इशापूर्व ८०० देखि १००० बीचमा प्रारम्भ भैसकेको देखिन आएको छ । इश्वीको पहिलो-दोस्रो शताब्दीदेखि नै यी मानिसहरूले गुफाको बसाइ छोडेर वाहिरी समतल भूभागमा बस्ती बसाली बसोवास गर्न थालेको भए पनि इश्वीको १५/१६औं शताब्दीसम्म पनि गुफा वस्तीहरूले निरन्तरता पाएको देखिएको छ । अझ भन्ने हो भने छोसेर लगायतका केही स्थानहरूमा वाहिरी सतहको वस्तीसँग-सँगै अझैसम्म पनि गुफाहरूको पनि उपयोगलाई जारी राखेको देख्न सकिन्छ । यस क्षेत्रको व्यापारिक रुपमा प्राचीन कालदेखि नै वाह्य सम्पर्क स्थापना भैसकेको थियो भन्ने कुरा पुरातात्विक उत्खनन्बाट नै संकेत मिलेको छ ।

यस्तै गरी मुस्ताङ क्षेत्र प्राचीनकालदेखि नै तिब्बतसँग जोडिएर रहेको र पछिल्लो कालसम्म पनि तिब्बत अधिनस्थ क्षेत्र भएको कारण विभिन्न तिब्बती ऐतिहासिक तथ्यहरू मुस्ताङ क्षेत्रको इतिहास बोध गराउने महत्वपूर्ण स्रोतको रुपमा रहेका छन् । पुराना स्रोतहरूमा मुस्ताङको इतिहासको उल्लेख गर्दा "त्रि-पुर्खा (स्रोङ चन गम्पो, ठिरोङ दे चन र राल्प चन) का वंशहरूको पाउले कुल्चेको भूमि" भनी गौरवसाथ तिब्बती राजाहरूको नाम उल्लेख गरेका छन् (शर्मा र गुरुङ, २०५६) । राजनैतिक रुपमा यो क्षेत्र पश्चिम खस साम्राज्यसँग पनि प्रत्यक्ष सम्बन्ध राख्ने स्थान भएका कारण खस राज्यसँग सम्बन्धित ऐतिहासिक स्रोतहरूबाट पनि यसको इतिहासको जानकारी हुन्छ ।

विश्व सम्पदा सूचीमा सूचीकरणका सन्दर्भमा सन् १४४० ताका निर्माण गरिएको र अद्यापि संरक्षित अवस्थामा रहेको लोमान्थाङको माटो थुपारेर निर्माण गरिएको किल्ला पर्खालसहितको मध्यकालीन वस्ती (Medieval Earthen Walled City) लाई केन्द्रविन्दूमा राखेको भए पनि मुस्ताङको प्राचीन इतिहास र त्यसको

निरन्तरता पनि त्यसको अन्तरवस्तुको रुपमा रहेको छ । राजनीतिक इतिहासका अतिरिक्त यस क्षेत्रको धार्मिक इतिहास पनि विशेष छ । गुरु पद्मसंभवको आगमन सम्बन्धी किम्बदन्तिबाट यस क्षेत्रको धार्मिक इतिहास प्रारम्भ हुन्छ । यद्यपि यो किम्बदन्ति १२औं शताब्दीमा प्रचारमा ल्याइएको मानिन्छ (शर्मा र गुरुङ, २०५६) । खास गरी ११औं शताब्दीको प्रारम्भदेखि नै माथिल्लो मुस्ताङ क्षेत्रमा धार्मिक चहलपहल सुरु भएको देखिन्छ । कस्मिर, तिब्बत आदि ठाउँमा प्रख्याति पाएका धर्मगुरु देवगुरु ज्ञानप्रभका चेला रिन्छेन साङ्पोको तिब्बती बौद्धधर्मको प्रचार प्रसारमा विशेष योगदान छ । खासगरी संस्कृत ग्रन्थहरूलाई तिब्बती भाषामा अनुबाद गर्नमा उनको योगदानलाई विशेष मानिन्छ । “रिन्छेन साङ्पोको पाउले पवित्र पारेको भूमि” भनी माथिल्लो मुस्ताङको उल्लेख गरिएको पाइन्छ । मिलारेपा जस्ता तिब्बती धर्मगुरु पनि माथिल्लो मुस्ताङ पुगेको बुझिन्छ । अमे पालले मुस्ताङ राज्यलाई स्वतन्त्र गरी पहिलो राजा बने पश्चात उनका वंशका २५ जना राजा भएको देखिन्छ ।

### ३. लोमान्थाङ र यसको विश्वव्यापी महत्व

विश्व सम्पदा सूचीमा सूचीकृत गर्न सम्बन्धित सम्पदा वा सम्पदा क्षेत्रसँग विशेष विश्वव्यापी महत्व कायम रहेको हुनु पर्दछ । विश्वव्यापी महत्व (Outstanding Universal Value) लाई विभिन्न आधारहरू (criteria) बाट पुष्ट्याईं गरिएको हुन्छ । सांस्कृतिक विश्व सम्पदाका लागि त्यस किसिमका छ वटा आधारहरू (criteria) तय गरिएका छन् । ती छ वटा आधारहरू मध्ये कुनै एक आधार मिलेको अवस्थामा त्यस्ता सम्पदालाई विश्व सम्पदाको सूचीमा राख्न सकिने व्यवस्था छ । लोमान्थाङलाई विश्व सम्पदामा सूचीकरण गर्नका लागि तीन वटा आधारसँग मेल खाने व्यहोरा उल्लेख गरी सम्भावित सूचीमा राखिएको छ । पक्षराष्ट्रको आधिकारिक निकायको रुपमा पुरातत्व विभागबाट सन् २००८ जनवरी ३० मा लोमान्थाङलाई विश्व सम्पदाको सम्भावित सूचीमा राख्न प्रस्ताव पेश गरिएको देखिन्छ । यसरी प्रस्ताव गर्दा सांस्कृतिक, प्राकृतिक वा मिश्रित कुन प्रकृतिको सम्पदा हो सो खुलाउनु पर्ने हुन्छ । लोमान्थाङलाई सांस्कृतिक विश्व सम्पदाको रुपमा प्रस्ताव गरिएको छ । यसका आधारहरूका रुपमा Criteria (ii) (v) र (vi) लाई प्रस्ताव गरिएको छ ।

Criteria (ii) त्यस्तो विशिष्टिकृत वास्तुकला वा प्रविधि, स्मारक-कला वा ल्यान्डस्केप डिजाइनसँग सम्बन्धित छ जसले कुनै निश्चित समयावधि वा विश्व सांस्कृतिको क्षेत्रमा विशिष्ट किसिमको मानव मूल्यहरूको प्रतिनिधित्व गरेको होस् ।

लोमान्थाङको प्रकारवेष्टित वस्ती (Fortified Settlement) एक विशिष्टीकृत

भू-परिदृष्य (Landscape) मा विशेष प्रविधिको प्रयोग गरी स्थापना गरिएको अद्वितीय वास्तुकलाको जीवन्त प्रदर्शन हो भन्ने मान्यता राखी विश्व सम्पदाको सम्भावित सूचीमा समावेश गर्दा Criteria (ii) लाई प्रमुख प्राथमिकतासाथ राखिएको बुझ्न सकिन्छ। गिलोमाटोलाई काठको फ्रेमको सहायतामा थुपारेर पर्खालको स्वरुप दिनु भारतको लद्दाख, पश्चिम तिब्बत, मुस्ताङ र मुस्ताङ क्षेत्रको आसपासको तिब्बती भूभागमा अपनाइएको प्राचीन निर्माण पद्धति हो जो हाल नेपालको मुस्ताङ क्षेत्रमा मात्र जीवन्त छ। सोही प्रविधिबाट निर्माण गरिएको किल्लापर्खाल र पर्खाले घेरिएको वस्ती इश्वीको १५औं शताब्दीदेखि अद्यापि संरक्षित छ। यस अद्वितीय पर्खालले घेरिएको घना वस्तीको वस्तीयोजना जस्ताको त्यस्तै १५औं शताब्दीको नमूना हो। यो हरेक दृष्टिले अद्वितीय मानिएको छ।

लोमान्थाङलाई विश्व सम्पदाको सम्भावित सूचीमा राख्दा इग्ख पुष्ट्याईंका लागि Criteria (v) लाई पनि लिइएको छ। सो क्षेत्रको प्राकृतिक वातावरणसँग घुलमिल हुँदै परम्परागत मानव बसोवास एवं विशिष्टीकृत भू-उपयोगको निरन्तरताका माध्यमबाट लोप हुन लागेको संस्कृतिलाई संरक्षण गरेको हुनु पर्ने अवधारण Criteria (v) को रहेको छ। उल्लेखित विश्वव्यापी मूल्यलाई लोमान्थाङको सानो वस्तीले जस्ताको त्यस्तै समेटेको मानिन्छ। इतिहासको लामो कालखण्डमा संसारका अन्य स्थानहरूले प्रविधि र विकासमा लामो फड्को मारिसक्दा पनि विशुद्ध निर्वाहमुखी जीवन पद्धति अपनाउँदै लोमान्थाङले मध्यकालीन संस्कृति र सभ्यतालाई जस्ताको त्यस्तै संरक्षण गर्न सक्षम रहेको मान्न सकिन्छ। तोकिएको स्थानमा खेतीपाती छ, तोकिएको स्थानमा चरिचरन छ, चरिचरनको आफ्नै नियम छ, पानीको मुहान सदियौंदेखि निश्चित छ, तोकिएको स्थानमा दाहासँस्कार गर्ने श्मसान छ र अन्ततः सानो घेराभित्र प्राचीन घना वस्ती छ। सँधै एउटै दिनचर्या छ। सबैले सबैलाई चिनेका छन्। सबैको सबै सांस्कृतिक कृयाकलावमा संलग्नता छ। यी सबैका लागि लोमान्थाङ अद्वितीय नमुना छ।

लोमान्थाङको लागि प्रस्तावित अर्को पुष्ट्याईं Criteria (vi) हो। यस आधारले लोमान्थाङका लागि प्रस्ताव गरिएका Criteria (ii) र (v) लाई साझा रुपमा प्रतिनिधित्व गरेको मान्यता राखेको देखिन्छ। Operational Guideline ले पनि यस आधारलाई अन्य आधारहरूसँग संयोजन गरेर राख्नु पर्ने उल्लेख गरेको छ। यस आधार (Criteria) अनुसार त्यस स्थानको कुनै घटना विशेष वा जीवन्त परम्पराहरू, विचारहरू र विश्वासहरू सो स्थानमा विद्यमान कला-वास्तुकला वा अन्य अमूर्त प्रकृतिका साहित्यहरूले प्रतिनिधित्व गरिरहेको हुनु पर्छ भन्ने हो। लोमान्थाङको सानो मध्यकालीन वस्ती जसरी विशिष्ट किसिमले

निर्माण भएको छ, त्यस विशिष्टतालाई कायम राख्न यहाँ आफ्नै सांस्कृतिक मूल्यमान्यताहरू रहेका छन् । बौद्ध गुम्बा यहाँको विशिष्ट संस्कृतिक पक्ष हो । संपूर्ण सामाजिक-सांस्कृतिक कृयाकलापहरू परम्परागत रुपमा गुम्बाहरूबाट निर्देशित हुन्छ । त्यस्ता परम्पराहरू प्राचीन धार्मिक विश्वासमा आधारित हुन्छन् र ती परम्पराहरू विशुद्ध स्थानीय रुपमा निर्माण भएका हुन्छन् । भौगोलिक अवस्था र त्यसै बमोजिम निर्माण भएको वसोवासलाई अनुकुल हुने गरी खेतीपाती, चरिचरन आदिका नियमहरू बनाइएका छन् र त्यसको नियमनका लागि परम्परागत मुखियाप्रथा अद्यापि कायम रहेको छ । यस्ता पारम्परिक सामाजिक कृयाकलाप र विश्वास एवं विचारहरूलाई यहाँको अद्वितीय महत्वको एक आधारको रुपमा लिइएको छ ।

लोमान्थाङका लागि प्रस्ताव गरिएका उल्लेखित तीन आधारहरूलाई यहाँ अद्यापि विद्यमान निम्न बमोजिमका सांस्कृतिक कला एवं वास्तुकला र परम्पराहरू (Atribuits) ले धानेको मान्न सकिन्छः

## ४. विश्वव्यापी महत्वका सांस्कृति सम्पदाहरू

लोमान्थाङलाई विश्व सम्पदामा राख्नका लागि लक्षित स्थान क्षेत्रगत दृष्टिले निक्कै सानो छ । यस सानो क्षेत्रमा लोमान्थाङको प्रकारवेष्टित वस्ती, सोही वस्ती भित्रका तीनवटा गुम्बाहरू, छ्योर्तेनका दुई समुहहरू र एक दरवार रहेको छ । पर्खाल वाहिर एक ठाउँमा ३ वटा र अर्को स्थानमा २ वटा छ्योर्तेनहरू रहका छन् । नयाँ पुराना गरी २ वटा माने पर्खालहरू छन् । यसै सन्दर्भमा लोमान्थाङवसीले मृतकको दाहसँस्कार गर्ने स्थान विशेषलाई पनि समेट्न सकिन्छ । यस श्मशानसँगै हरेको एक बोन छ्योर्तेन पनि उल्लेख्य छ । अद्वितीय महत्व बोक्ने लोमान्थाङका मुख्य सांस्कृतिक सम्पदाहरू (Atribuits contributing for OUV) यस प्रकार उल्लेख गर्न सकिन्छः

### ४.१ लोमान्थाङ किल्लापर्खाल र वस्ती

लोमान्थाङको किल्ला पर्खाल यहाँको पुरानो वस्तीलाई घेरा गरी निर्माण गरिएको छ । लोमान्थाङलाई विश्व सम्पदाको संभावित सूचीमा राख्दा यसै किल्ला पर्खाललाई पहिलो आधार मानिएको छ र "Medieval Earthern Walled City of Lo Manthang" नामाकरण गरिएको छ । १८० वटा घरहरूलाई भित्र पारेर यो अग्लो पर्खाल निर्माण गरिएको छ । लोमान्थाङको यो मध्यकालीन वस्ती वरिपरिको भाग भन्दा अग्लो स्थानमा वसालिएको छ । यस वस्तीको पूर्वतर्फ बाहेक अन्य भागहरू गहिरोमा पर्दछन् र यसै अग्लो स्थानमा वसालिएको वस्तीलाई भित्र पारी शहरलाई किल्लाको रुपमा निर्माण गरिएको छ । यस किल्ला पर्खालको उत्तरी भाग भने कालीगण्डकी नदीको करिब किनारैमा रहेको छ ।

यो किल्लापर्खालको निर्माण इश्वी १४४० मा गरिएको विवरण ऐतिहासिक प्रमाणहरूबाट पुष्टि हुन्छ । इश्वी १४२५ मा अम पाल गुङ्थाङ राज्यबाट मुस्ताङ क्षेत्रको गभर्नर नियुक्त हुनासाथ किल्ला-दरवारहरूको निर्माणमा तदारुकता देखाएको बुझिन आउँछ। उनी मुस्ताङलाई स्वतन्त्र राज्यको रुपमा स्थापना गर्नु पूर्व हालको किल्ला पर्खालले घेरिएको लोमान्थाङ वस्ती भन्दा उत्तरतर्फको अग्लो डाँडामा रहेको किल्लामा वस्दथे भन्ने स्थानीय विश्वास रहेको पाइन्छ। हाल पनि सो स्थानमा पुरानो किल्ला दरवारको भग्नावशेष रहेको छ। यद्यपि मुस्ताङलाई स्वतन्त्र राज्य घोषणा गरी किल्लावस्तीसहितको लोमान्थाङलाई राजधानी बनाउनु पूर्ण अम पाल चराङको दरवारमा वस्दथे भन्ने कुरा ऐतिहासिक प्रमाणहरूबाट पुष्टि हुन आएको छ (ढुङ्गेल, २००२) । अम पालले जीवनको उत्तरार्धमा आएर लोमान्थाङको हालको वस्ती रहेको स्थानलाई छनोट गरी अग्लो पर्खालले घेरेर वस्तीलाई किल्लाको स्वरुप दिएका थिए ।

संरचनाका दृष्टिले यो पर्खाल २७० मिटर लम्बाई, १५३ मिटर चौडाइको र ८.५५ मिटर उचाइको छ । यो किल्ला पर्खाल दक्षिणतर्फ बढी चौडाइ र उत्तरमा कम चौडाइ रहने गरी निर्माण गरिएको छ । पर्खाल उत्तर-दक्षिण लाम्बाकार छ । पूर्वी पर्खाल दक्षिणबाट उत्तरतर्फ बढ्ने क्रममा किल्लाको मुख्य प्रवेशद्वारको समानान्तरमा पुगेपछि ५९ मिटर जति साँघुरिएको छ। यस पर्खालमा विभिन्न स्थानमा वुर्जाहरू बनाइएका छन र बुर्जासहितको पर्खालको उचाई ३० फिट छ । पाँच कुना भएको यस किल्ला पर्खालमा हरेक कुनामा बनाइएका बुर्जाहरू र बीच-बीचमा बनाइएका अन्य बुर्जाहरूसहित हाल जम्मा १३ वटा रहेका छन् (Dhaulagiri Journal of Sociology and Anthropology Vol.11, 2017) । पश्चिमतर्फको एक बुर्जा सन् १९७० को दशकमा निर्माण गरिएको तथ्य पनि भर्खरैको अध्ययनबाट खुल्न आएको छ। यस किल्ला पर्खालबाट भित्र वस्तीमा प्रवेश गर्नका लागि एक मात्र प्रवेशद्वार रहनु यसको विशेषता हो । किल्लाको प्रवेशद्वार उत्तराभिमुख छ। प्रवेशद्वारको उचाई १५ फिट जति छ भने चौडाई १० फिट रहेको छ। काठबाट बनेको यो प्रवेशद्वारमा स्थानीय स्तरको सामान्य कलाकारिता पनि छ। १९औं शताब्दीको पूर्वार्द्धतिर किल्ला वस्तीको विस्तारसँगै यसको पुरानो स्वरुपमा परिवर्तन हुन आएको र संभवतः पूर्वतर्फ रहेको प्रवेशद्वार हालको स्थानमा सारिएको हुनसक्ने अनुमान गरिएको छ (selter, 2012) ।

अतः लोमान्थाङको यस किल्लाको ऐतिहासिक, वास्तुकलात्मक, सांस्कृतिक, सामरिक जस्ता निजी महत्वहरू कायम छन् । यहाँ भित्रका सबै घर, दरवार, गुम्बा र छ्योर्तेनहरू माटो र काठबाट निर्माण गरिएका vernacular architecture का अद्वितीय नमुना मान्न सकिन्छ। यो वस्तीयोजना "शक्य बौद्ध परम्परा"

बमोजिम निर्माण गरिएको मानिन्छ (selter, 2012) । र्तमान अवस्थामा यस स्मारकको महत्वलाई मध्यनजर गरेर नै विश्व सम्पदा सूचीमा सूचीकरण गर्ने उद्देश्यले सम्भावित सूचीमा राखिएको बुझिन्छ ।

### ४.२ लोमान्थाङ दरवार

लोमान्थाङ दरवार अम पालले इश्वी १४४० मा निर्माण गरेका हुन् । मुख्य प्रवेशद्वारबाट भित्र प्रवेश गर्दा भेटिने पहिलो संरचना नै यहाँको दरवार हो । यद्यपि दरवारको प्रवेशद्वार भने पूर्वाभिमुख छ । दरवारको वास्तुकला यहाँका अन्य घरहरू भन्दा सामान्य रुपमा मात्र फरक छ । अन्य घरहरू दुई र तीन तलाका छन् भने दरवार चाहीँ जमिनको सतहबाट चार तल्ला रहेको छ । यद्यपि जमिनको सतह भन्दा तल पनि एक तल्ला छ भने भुईं तल्ला दुई-तल्ला बराबरको उचाइमा निर्माण गरिएको छ । यसप्रकार दरवार कुल छ तल्ला बराबर रहेको छ । दरवारको प्रवेशद्वार ठूलो र सामान्य रुपले काष्टकलाकारिता सहितको छ । यो दरवारको पर्खाल पनि किल्लापर्खाल जस्तै माटो थुपारेर बनाइएको छ । स्थानीय भाषामा यस्तो पर्खाललाई घ्याङ भनिन्छ । दरबारको लम्बाई ४२ मिटर छ भने चौडाई ३४ मिटर रहेको छ । दरबारका मुख्य कोठाहरूमा भित्तेचित्रहरू पनि रहेका छन् । खास गरी काठका विमहरूमा उत्कृष्ट चित्रहरू देख्न सकिन्छ । यी चित्रहरू लामो समयदेखि कुनै किसिमको संरक्षण कार्य नगरिएकाले दुरुह अवस्थामा रहेका छन् ।

### ४.३ झ्याम्पा गुम्बा

झ्याम्पा गुम्बा लोमान्थाङको प्रकारवेष्टित वस्तीभित्र अवस्थित छ । क्षेत्रफल सानो भए पनि लोमान्थाङको प्रकारवेष्टित वस्तीलाई विभिन्न टोलहरूमा विभाजन गरिएको छ र यहाँ रहेका तीन गुम्बाहरूमध्ये झ्याम्पा गुम्बा ज्याथाङ टोलमा अवस्थित छ । यो टोल वस्तीको पश्चिमी भागमा पर्दछ ।

झ्याम्पा गुम्बा इश्वी १४४७ मा निर्माण गरिएको ऐतिहासिक विवरण प्राप्त छ । यो वस्तीको निर्माण गरे पश्चात वस्तीभित्र निर्माण भएको यो नै पहिलो गुम्बा हो भन्ने देखिन्छ । यस गुम्बाको निर्माण अम पालका छोरा एवं स्वतन्त्र लो राज्यका दोस्रो राजा अ गोएन साङपोले गरेका थिए । यस गुम्बाको इश्वी १६६३ तिर मुस्ताङका आठौं राजा समढुव पलवरले जीर्णोद्धार गरेका थिए भन्ने इतिहास पनि प्राप्त छ (शर्मा र गुरुङ, २०५६) ।

वास्तुकलाको चर्चा गर्दा झ्याम्पा गुम्बा पूर्वाभिमुख छ । यो गुम्बा १३८ फिट लम्बाई र ८२ फिट चौडाईको क्षेत्रफलमा निर्माण गरिएको छ । गुम्बाको बीच भागमा फराकिलो चोक कायम हुने गरी निर्माण गरिएको छ । गुम्बाको “दुखाङ्”

अर्थात गर्भगृह दोस्रो तल्लामा बनाइएको छ । मुख्य प्रवेशद्वारको सामुन्ने हुने गरी भुईंतलामा रहेको कक्ष पूजा प्रयोजनले बनाइएको देखिँदैन । तर यस कक्षमा पनि धेरै राम्रा भित्तेचित्रहरू रहेका छन् । गुम्बाको माथिल्लो तल्लामा महांकालको तान्त्रिक पूजा हुने भएकाले सर्बसाधाराणका लागि खुल्ला छैन । यो गुम्बा दरवारको पश्चिमतर्फको झ्यालबाट सामुन्ने हुने गरी निर्माण गरिएको छ । भनिन्छ गुम्बाको मुख्य देवताको रुपमा रहेको मैत्रेय बुद्धको दर्शन दरबारबाटै गर्न सक्ने गरी बनाइएको हो ।

यो गुम्बा मुस्ताङ क्षेत्रमा पाइने अन्य गुम्बाहरू भन्दा बढी काठमाण्डौ उपत्यकाका विहार वास्तुकलाको झल्को आउने गरी निर्माण गरिएको छ । गुम्बाका मेठ र दलिनहरूमा कलात्मक तरिकाले रञ्जना लिपिमा बौद्ध मन्त्रहरू कुँदिएका छन् । माटो र काठमात्र यस गुम्बाका निर्माण सामग्रीहरू हुन् । यस मन्दिरमा स्थापित यस गुम्बाको महत्वको चर्चा गर्दा यसको स्थापनापश्चात् यसको प्राणप्रतिष्ठा ङोर सम्प्रदायका प्रवर्तक ङोर छेन् कुङ्गा साङपो स्वयंले गरेको विषय उल्लेख्य मान्न सकिन्छ । अर्को महत्वपूर्ण पक्ष यसको निर्माणसँग सम्बन्धित छ । यस गुम्बाको वास्तुकला एवं भित्तेचित्रहरूमा तिब्बत, डोल्पो र काठमाण्डौका कलाकर्मीहरू समेतको प्रत्यक्ष योगदानको उल्लेख पाइएको छ (शर्मा र गुरुङ, २०५६) ।

## ४.४ थुप्चेन गुम्बा

थुप्चेन गुम्बा लोमान्थाङको प्रकारवेष्टित वस्तीभित्र अवस्थित अर्को गुम्बा हो । किल्ला वस्तीको पोतलिङ्ग टोलमा यो गुम्बा अवस्थित छ । यो टोल वस्तीको करिब मध्यभागमा पर्दछ । थुप्चेन गुम्बाको निर्माण कहिले भयो भन्ने ठीक मिति खुलाउने श्रोतहरूको अभाव छ । यद्यपि यसको निर्माण स्वतन्त्र लो राज्यका ते स्रो राजा टाशी गोएनको पालामा भएको थियो भन्ने चाहिं स्पष्ट छ । टाशी गोएन कहिले राजा भए भन्ने यकीन नभए पनि यिनको अन्तिम काल इश्वी १५१२ थियो भन्ने चाहीं ऐतिहासिक प्रमाणहरूबाट पुष्टि भैसकेको छ (शर्मा र गुरुङ, २०५६, ढुङ्गेल २००२) । टाशी गोएनको पालामा लो राज्यको विस्तार र आर्थिक, सामाजिक एवं धार्मिक सांस्कृतिक विकास चरम उत्कर्षमा पुगेको थियो । यसै उत्कर्षको अवस्थामा यस गुम्बाको स्थापना भएको थियो । टाशी गोएनले यस गुम्बाको प्राणप्रतिष्ठा आफ्ना धर्म गुरु सेर-दोग-चन् मठका लामा शाक्य-छोग्-ल्दनबाट गराएका थिए भन्ने व्यहोरा ऐहितासिक प्रमाणका आधारमा प्रयागराज शर्मा र जगमान गुरुङले उल्लेख गरेका छन् (२०५६:४४) । एक मुस्ताङ मोल्लामा यो गुम्बाको निर्माण  काललाई संकेत गर्ने केही भनाइहरू परेका छन् । David P Jackson ले राजाका धर्म गुरु (शाक्य-छोग्-ल्दन) इश्वी १४७२ देखि १४७४ को बीचमा लोमान्थाङ आएको मानेका हुँदा यो थुप्चेन गुम्बा त्यसै ताका बनेको अनुमान गर्न सकिन्छ । यस गुम्बामा हाल रहेका

माटाका मूर्तिहरू १७औं शताब्दीको उत्तरार्द्धमा राजा सबद्धव पर्वरले स्थापना गरेका थिए। पछिल्लो पटक १९ औं शताब्दीमा राजमाता पद्मबुठीले यस गुम्बाको जीर्णोद्धार गरेको उल्लेख छ।

थुप्चेन गुम्बा पूर्वाभिमुख छ। यस गुम्बाको अगाडि साँगुरो गल्ली रहेको छ। गुम्बाको परम्परागत वास्तुकला बमोजिम थुप्चेन गुम्बामा गो-छोग् (वाहिरी कक्ष) र दुखङ (गर्भगृह) छुट्याएर बनाइएको छ। साँगुरो गल्लीको सामुन्ने गुम्बाको अग्लो ढोका छ। ९ फिट अग्लो र करिब ७ फिट चौडा ढोकाको चौकोश विभिन्न ६ तहहरूमा बनाइएको छ र काठहरूमा विभिन्न बौद्धधर्मसँग सम्बन्धित चिन्ह र मन्त्रहरू कुँदिएका छन्। गोछोग कक्षमा दायाँ बायाँ अग्ला चौका उठाई चतुरमहाराजका मूर्तिहरू राखिएका छन् र भित्ताहरू भित्तेचित्रहरूले भरिएका छन्। गोछोगबाट दुखङमा प्रवेश गर्ने ढोका पनि ६ तहमा नै निर्माण गरिएको छ। करिब ९ फिट अग्लो र करिब ६ फिट जति चौडाई भएको ढोकाबाट पुगिने दुखङ गुम्बाको मुख्य भाग हो। विशाल काठका खम्बाहरूले यस कक्षलाई निक्कै भव्य देखाइएको छ। मूर्तिहरू र चित्रकलाले भित्ता भरिएका छन्। थुप्चेन गुम्बाको दुखङ कक्ष निक्कै ठूलो छ। यस कक्षमा थुप्रै पुराना भित्तेचित्रहरू र मूर्तिहरू राखिएका छन्। यहाँका माटाका मूर्तिहरू १७औं शताब्दीमा राखिएका हुन् भन्ने ऐतिहासिक प्रमाण प्राप्त छ (शर्मा र गुरुङ, २०५६)। दुखाङ कक्षभित्र नै एक चैत्य पनि निर्माण गरिएको छ।

### ४.५ छ्योदे गुम्बा

लोमान्थाङको प्रकारवेष्टित वस्तीको सबैभन्दा उत्तरको भाग केही साँगुरो गरी बनाइएको छ र यो संपूर्ण साँगुरर्‍याइएको भाग छ्योदे गुम्बाले ओगटेको छ। छ्योदे गुम्बा यस किल्ला वस्तीभित्रका तीन गुम्बाहरूमध्ये सबै भन्दापछि बनेको गुम्बा हो। छ्योदे गुम्बाको स्थापना १७१० मा राजा छेवाङ फुन्चोकका पालामा भएको थियो। तर यस गुम्बाको पहिलो स्थापना हालको स्थानमा नभई यहाँबाट उत्तरमा अवस्थित छोसेर भन्ने गाउँ नजिकै भएको थियो। पछि कुनै कारणवस यो गुम्बा सो स्थानबाट स्थानान्तरण गरी लोमान्थाङको उत्तरपूर्व तर्फ खोलापारी निर्माण गरिएको थियो भन्ने स्थानीयहरू विश्वास गर्दछन्। १९ औं शताब्दीको पूर्वार्द्धमा गुम्बामा आगलागी भएर नष्ट भएपछि इश्वी १८२२ मा यो गुम्बा लोमान्थाङ किल्लावस्तीको क्षेत्र विस्तार गरी उत्तरी कुनामा स्थानान्तरण गरिएको थियो। छ्योदे गुम्बाका दुबै भग्नावशेषहरू अद्यापि देख्न सकिन्छ।

छ्योदे गुम्बाको वास्तविक स्वरुपमा हाल परिवर्तन आइसकेको छ। यो गुम्बा अधिकांशतः आधुनिकीकरण भैसकेको छ। यद्यपि गुम्बाको सर्वप्राचीन मानिएको महांकाल रहेको एक कक्षसहितको एक पुरानो संरचना भने अद्यापि संरक्षित छ।

पूर्वाभिमुख यस संरचनामा पुराना मूर्तिहरू र भित्तेचित्रहरू पनि रहेका छन् । यो सानो संरचना संपूर्ण रुपमा माटो र काठबाट बनेको छ ।

यस गुम्बाको महत्वपूर्ण पक्ष लोमान्थाङको महत्वपूर्ण अमूर्त सांस्कृतिक सम्पदाको रुपमा चिनिने तिजी पर्वसँग यस गुम्बाको सम्बन्ध हो । यसै गुम्बाका लामाहरूद्वारा यहीँका लामा विद्यार्थीहरूलाई समेत प्रशिक्षण गरी यो जात्रा सम्पन्न गरिन्छ। स्मरणीय छः तिजी पर्व लामाहरूको विशेष नृत्यसहित सम्पन्न गरिने पर्व हो । यस गुम्बामा धेरै संख्यामा प्रचीन बौद्धग्रन्थहरू सुरक्षित राखिएको पनि विश्वास गरिन्छ ।

## ४.६ आठ छ्योर्तेन

आठ छ्योर्तेन किल्ला वस्तीको पोतलिङ टोलमा थुब्छेन गुम्बाको ठीक दक्षिणमा अवस्थित छन् । यी आठवटा छ्योर्तेनहरू कहिले बनेका हुन् भन्ने अभिलेख्य प्रमाण छैन । यिनको साधारण शैलीबाट यस किल्ला वस्तीको स्थापनासँगै निर्माण गरिएको अनुमान लगाउन सकिन्छ। अर्को कुरा यी छ्योर्तेनहरू कुनै बाँकी रहेको खाली स्थानमा निर्माण गरिएको नभएर वस्ती स्थापनाको योजनामा मिलाएर नै स्थापना गरिएको हो भन्ने कुरा यिनको अवस्थितिले स्पष्ट हुन्छ । अतः यी छ्योर्तेनहरू १५औं शताब्दी तिरकै हुन सक्ने अनुमान गर्न सकिन्छ ।

आठवटाको समूहमा निर्माण गरिएका यी छ्योर्तेनहरू विशेष किसिमको वास्तुकलायुक्त नभएर सामान्य किसिमका छन् । मुस्ताङ क्षेत्रमा सामान्यतः दुई किसिमका छ्योर्तेन पाइन्छन्ः डोम (बुम्ब) को माथि छानो भएका र छानो नभएका । सानो आकारका र डोम नभएका छ्योर्तेनहरूमा त्यस्तो छानो राखिएको हुँदैन र डोम (बुम्ब) भएकाहरूमा छानो राखिएको हुन्छ । पानी तथा हिउँबाट बचाउन यस्तो छानो राख्ने परम्पराले यो वास्तुकलाको विकास भएको सहज अनुमान गर्न सकिन्छ। यहाँका आठवटै छ्योर्तेनहरू यस्तै सामान्य किसिमको छानो राखिएका छन् । एक अर्काको छानो जोडेर एउटै बनाइएको छ । सूक्ष्म गरी अध्ययन गर्दा यहाँ छ्योर्तेनका आठ वटा प्रकारहरूमा देखिने भिन्नता पनि देख्न सकिन्छ । यहाँ रहेका आठ छ्योर्तेनहरू पूर्व-पश्चिम लस्करै निर्माण गरिएका छन् र तिनको अवस्थिति पूर्ववाट क्रमश बोधिचैत्य, पद्मकुटचैत्य, मंगलबहुद्वारचैत्य, ऋद्धिचैत्य, देवावत्तीर्णचैत्य, अन्तरसन्धिचैत्य, वीजयचैत्य, निर्वाणचैत्य रहेको छ ।

## ४.७ चार छ्योर्तेन

चार छ्योर्तेनहरूको समुह थुब्छेन गुम्बाको पछाडि (पश्चिममा) अवस्थित छ । यी चारवटा छ्योर्तेनहरू कहिले र कसले स्थापना गरेका हुन् भन्ने अभिलेख्य प्रमाण छैन । यी छ्योर्तेनहरू भब्य किसिमले निर्माण गरिएका छन् । छ्योर्तेनका

विभिन्न प्रकारहरूमध्ये यहाँ चारवटा प्रकारहरू बनाइएका छन् ।

वास्तुकलाका दृष्टिले मुस्ताङ क्षेत्रमा सामान्यतः पाइने छ्योर्तेनका दुई किसिममध्ये यो समूहका छ्योर्तेनहरू डोम (बुम्ब) को माथि छानो भएका वर्गमा पर्दछन् । किल्ला पर्खालभित्र रहेका आठ छ्योर्तेनको समूहमा रहेका छ्योर्तेनहरू भन्दा यी विशेष महत्वका साथ, बढी लगानीमा र सावधानीसाथ बनाइएका छन् । पछिल्लो जीर्णोद्धारमा यिनको छानामा काठका फल्याकहरूको प्रयोग गरिएको छ । यहाँ रहेका चार छ्योर्तेनहरू उत्तर-दक्षिण लस्करै निर्माण गरिएका छन् र यहाँ दुई विजयचैत्यको विचमा मंगलबहुद्वारचैत्य र बोधिचैत्य रहेका छन् ।

## ४.८ कङ्नी छ्योर्तेन

कङ्नी छ्योर्तेन लोमान्थाङ किल्ला वस्तीको मुख्य प्रवेशद्वारभन्दा बाहिर करिब ३० मिटर जति सीधा उत्तरमा अवस्थित छ । यिनलाई दुईछ्योर्तेन वा जोडीछ्योर्तेन भनेर नै चिनिने गरिन्छ । यद्यपि यी दुबै छ्योर्तेनहरू एकै समयमा निर्माण भएका नहुन पनि सक्छन् । यिनको निर्माणकाल एकीन छैन । दुई छ्योर्तेन उस्तै अकारका छन् तर एउटा भने प्रवेशद्वारको स्वरुपमा निर्माण गरिएको छैन । प्रवेशद्वारको रुपमा निर्माण गरिएको कङ्नी छ्योर्तेनको वास्तुकला निक्कै उल्लेख्य छ । यसको सिलिङमा निक्कै आकर्षक मण्डलको भित्तेचित्र पनि रहेको छ । यो छ्योर्तेन लोमान्थाङको एकमात्र कङ्नी छ्योर्तेन हो । वाह्य चित्रहरूमा भने दुबै छ्योर्तेनमा सादृश्यता पाइन्छ । कङ्नी छ्योर्तेनको वास्तुकलाले यसलाई १५औं शताब्दीतिरको हुन सक्ने संकेत गरेकाले पनि यसको विशेष महत्व छ ।

## ४.९ जीव छ्योर्तेन

जीव छ्योर्तेन लोमान्थाङको किल्ला वस्ती वाहिर, उत्तर पूर्व कुनामा अवस्थित छ । लोमान्थाङका गुम्बाहरू १५औं-१६औं शताब्दीतिर बनेका र सो निर्माणमा काठमाण्डौबाट समेत दक्ष वास्तुकर्मीहरू भिकाइएको प्रसङ्ग माथि परिसकेको छ । यहाँका तीनवटा जीवा छ्योर्तेन समूहमध्ये दुई छ्योर्तेनहरूमा रहेका रञ्जना लिपिका मन्त्रहरूको सूक्ष्म अध्ययन गर्दा यिनीहरू पनि निक्कै पुरानो भएको प्रतित् हुन्छ । यद्यपि यी स्तुपहरूको निर्माणकाल खुलाउने ऐतिहासिक लेख्य श्रोतहरू हालसम्म प्राप्त भएका छैनन् । भर्खरै जीवा छ्योर्तेनको जीर्णोद्धारको क्रममा फेला परेको प्रस्तर अभिलेख पढ्न बाँकी छ ।

छ्योर्तेनभित्र हजारौं वा लाखौंको संख्यामा बुद्धका ससाना मूर्ति, माटाका ससाना चैत्यहरू राखेर पनि बनाइएका हुन्छन् । यी छ्योर्तेनहरू पनि एककरोढ बुद्ध राखेर बनाएइएकाले यिनलाई जीवा छ्योर्तेन भनिएको हो । आकार प्रकारमा एकै भएका कारण यहाँका दुई छ्योर्तेनहरूलाई जोडी छ्योर्तेन, जुम्ल्याहा छ्योर्तेन वा ट्वीन छ्योर्तेन भनेर पनि स्थानीय रुपमा बुझिँदै आएको पाइन्छ ।

यहाँका जोडी छ्योर्तेन समान आकार प्रकारका छन् भने तेस्रो छ्योर्तेन वास्तुकलाका दृष्टिले सामान्य कलाकारिता मात्र प्रदर्शन गरिएको तर आकारमा ठूलो छ। जोडी छ्योर्तेनमा देखिने वास्तुकला आकर्षक र छ्योर्तेन भन्ने वित्तिकै आमरुपमा सम्झिने विभिन्न तहहरू भएको स्वरुपमा निर्माण गरिएको छ, जसमा तलबाट क्रमशः मेधी (Base), आसन (Throne), चार आर्यसत्यका प्रतिक स्वरुपका चार तहहरू (Four Steps), बुम्ब (dome), तेह्रभूवन (Thirteen steps), छत्र (Parasol) र सबैभन्दा माथि चन्द्र सुर्य सहितको गजुर (Pinnacal) रहेको छ। तर तेस्रो स्तुप भने चतुष्कोणाकार रुपमा एकै तह हुने गरी उठाइएको छ।

जोडी छ्योर्तेनहरूमा आसन (Throne) को भागमा अष्टमंगलका चिन्हहरूसहित विभिन्न बुट्टाहरू कुँदिएका छन् भने सो माथिका चार तहहरूमा बुद्धधर्म सम्बन्धी मन्त्रहरू लेखिएका छन्। यहाँ माटोले लिपिएका भित्तामा कुँदेर यी मन्त्रहरू उत्किर्ण गरिएका छन्।

## ५. सम्पदा संरक्षणको अवस्था

इश्वीको १५औं शताब्दीको पूर्वार्द्धमा स्थापित भई सन् २००८ मा विश्व सम्पदाको सम्भावित सूचीमा राख्दाको अवस्थासम्म पनि यस प्रकारवेष्ठित वस्तीभित्रको संरक्षणको अवस्थामा खासै परिवर्तन आएको थिएन भन्ने थाहा हुन्छ। तर त्यसपछिका दिनहरूमा भने यसको परम्परागत स्वरुपमा खलल ल्याउने सामान्य कार्यहरू भैरहेको देख्न सकिन्छ। हाल देखिने सम्पदा संरक्षणका प्रतिकूल पक्षहरूलाई सारांशमा निम्नानुसार उल्लेख गर्न सकिन्छः

### ५.१ किल्लापर्खालको संरक्षणको अवस्था

लोमान्थाङको किल्ला पर्खालमा प्राकृतिक वा समयक्रमले र मानवीय कारण ाले गरी दुई तरिकाबाट क्षति पुगेको देखिन्छ। पर्खालको माथिल्लो भागमा रहेका बुर्जाहरूमध्ये थुप्रै बुर्जाहरू कालक्रमले क्षति भइसकेका छन्। कतिपयको नामोनिशान मेटिइसकेको छ भने कतिपय भग्न अवस्थामा छन्। किल्ला पर्खालको परम्परागत मौलिक स्वरुपमा समेत खलल आउने गरी पर्खालको धेरै स्थानमा नयाँ प्रवेशद्वारहरू खोलिएका छन्। इश्वी १९९० को दशकसम्म यस क्षेत्रको यात्रा गर्नेहरूले पनि यहाँ एक मात्र प्रवेशद्वार देखेका थिए। पछि आवत जावत गर्न र वस्तु-बाख्राहरू ल्याउने-लैजाने कार्यमा सहजताका लागि दक्षिणतर्फ दोस्रो प्रवेशद्वार खोलियो। किल्ला पर्खालको बाहिर पर्खालसँगै जोडेर घरहरू निर्माण गर्ने क्रम बढेपछि भित्र-भित्रैबाट अरु पनि थुप्रै प्वालहरू बनाइए। हालसम्म यहाँ २६ वट यस्ता साना-ठूला प्रवेशद्वार बनाइएको पाइएको छ (OCHSPA, 2018:11)। लोमान्थाङ पर्खालमा सबैभन्दा ठूलो अतिक्रमण छ्योदे गुम्बाका

लागि छुट्टै प्रवेशद्वार निर्माण गर्ने क्रममा भएको छ। यो द्वार सिमेन्ट-कंक्रिट र फलामका रडहरूको प्रयोग गरी आधुनिक किसिमले बनाइएको छ। यसको निर्माण सन् २०१५ मा गरिएको हो।

### ५.२ किल्लापर्खालभित्रका सम्पदाहरूको संरक्षणको अवस्था

किल्लापर्खालभित्रका सम्पदाहरूमा हालसम्म पनि धेरै क्षय एवं अतिक्रमण हुन पाएको छैन। तर पनि पछिल्ला केही दशकहरूमा यस प्राचीन वस्तीको मौलिकतामा असर पार्ने केही विशेष प्रकृतिका कार्यहरू गरिएका छन्। किल्ला पर्खालभित्र रहेका सार्वजनिक स्मारकहरूको चर्चा गर्दा तीन वटा गुम्बा, आठ र चार वटा समूहमा निर्माण गरिएका दुई समुहका छ्योर्तेनहरू, एक मानेपर्खाल र राजाको दरवारमात्र छन्। यद्यपि यो प्रकारवेष्ठित वस्ती स्वयम् नै एक स्मारकको रुपमा रहेको तथ्यलाई नकार्न सकिन्न। इश्वी १५औँ शताब्दीको यस वस्तीको मौलिकतामा असर पुग्नेगरी छ्योदे गुम्बा करिब संपूर्ण रुपमा नवीकरण भइसकेको छ। छ्योदे गुम्बाको मूल प्रवेशद्वारको अगाडि रहेको मानेपर्खाल पनि आधुनिकीकरण भैसकेको छ। यहाँ पहिले घुमाउने चक्का Prayer Wheel विहिन यस क्षेत्रमा पाइने परम्परागत ढाँचाको स्थुल मानेपर्खाल मात्र थियो। हाल सिमेन्ट कंक्रिटको पर्खाल बनाई prayer wheel पनि राखिएको छ। स्थानीयवासीको भनाइ अनुसार यो कार्य सन् २०१० तिर गरिएको हो। हालै मूल प्रवेशद्वारको दक्षिणतर्फको एक निजीघर सिमेन्ट-कंक्रिट लगायत आधुनिक निर्माण सामग्री प्रयोग गरी निर्माण गरिएको छ। यस बाहेक भने प्रकारवेष्ठित वस्तीमा हाल सम्म कुनै खलल आएको छैन।

### ५.३ किल्लापर्खालसँग जोडेर संरचना निर्माण

किल्ला पर्खालभित्र मात्र घरहरू अट्न नसकेपछि पर्खालबाहिर तर पर्खालसँगै जोडेर घरहरू निर्माण गर्ने चलन चलेको दुई दशक बढी भैसकेको देखिन्छ। पर्खाल बाहिरको पर्खालसँग जोडिएको भागलाई स्थानीय भाषामा डाम्ड्राङ भनिन्छ। यो यसलाई कुनै संरचना निर्माण गर्न निषेधित र कोरा (प्रदक्षिणा) का लागि खाली छाडिएको पवित्र स्थान मानिन्छ (कितामुरा, २०१३)। सन् २००८ मा यस क्षेत्रलाई विश्व सम्पदाको सम्भावित सूचीमा राख्दाको बखत पर्खालसँग जोडेर बनाइएका ठूला घरहरू (अस्थायी टहरा बाहेक) चारवटा मात्र थिए। सन् २०१३ मा पर्खालसँगै जोडेर पहिलो कंक्रिटको घर निर्माण गरिएको थियो। हाल किल्लापर्खाल बाहिरको डाम्ड्राङ क्षेत्रमा कंक्रिटका घरहरू चारवटा भएका छन्। त्यसमध्ये पनि वस्तीको दक्षिणतर्फ रहेका चार तल्ला हुने गरी निर्माण गरिएका दुई घरहरू र पूर्वतर्फको एकतले एक घर भने यस क्षेत्रको वास्तुकलासँग विल्कुलै नमिल्ने गरी बनाइएका छन्।

## ५.४ किल्लापर्खाल बाहिर सम्पदा क्षेत्रमा नयाँ निर्माण

लोमान्थाङको प्रकारवेष्टित वस्तीको बाहिर वरिपरि निश्चित क्षेत्रमा यस पुरानो वस्तीसँग प्रत्यक्ष सम्बन्ध राख्ने केही पुरातात्विक महत्वका स्मारकहरू पनि छन् । लोमान्थाङको किल्लापर्खाल बाहिरबाट समग्र वस्तीलाई नै कोरा (प्रदक्षिणा) गर्ने धार्मिक सांस्कृतिक परम्परा रहिआएको छ । किल्लापर्खाल बाहिरको "डाम्ड्राङ" क्षेत्रभन्दा बाहिर विभिन्न स्थानमा मानेपर्खाल (माडङ्) रहनु यहाँको प्राचीन परम्परा हो । यसै किल्लापर्खाल बाहिरका सार्वजनिक स्थानमा धार्मिक भावनाले पछिल्ला दिनहरूमा नयाँ संरचनाहरू पनि थपिएका छन् । कतिपय संरचना पुराना मौलिक स्मारक जीर्ण भएपछि त्यसलाई आधुनिक सामग्री प्रयोग गरी पुनःनिर्माण गरिएका छन् भने कतिपय विलकुल नयाँ संरचना बनाइएका छन् । यसरी आधुनिक तरिकाले पुनःनिर्माण गरिएका वा नयाँ थपिएका संरचनाहरूले लोमान्थाङको मौलिक परम्परामा भने प्रत्यक्ष असर पारेको छ । यसरी निर्माण गरिएका नयाँ संरचनाहरूमा लोमान्थाङ किल्ला वस्तीभित्र प्रवेश गर्ने मुख्यद्वारको ठीक बाहिर पूर्व-पश्चिम लम्बाकार गरी निर्माण गरिएको माने पर्खाल एक हो । यहाँको परम्परागत संरचना हटाई करिब १५ बर्षअघि यो नयाँ संरचना निर्माण गरिएको बुझिन्छ । यस्तै गरी जीव छ्योर्तेनको अगाडि (दक्षिणतर्फ) रहेको पूर्व-पश्चिम लम्बाकार गरी निर्माण गरिएको माने पर्खाल पनि नवीकरण भएको छ । किल्लापर्खाल वाहिर पूर्वतर्फको भागमा २० फिट लम्बाई भएको उत्तर-दक्षिण लम्बाकार माने पर्खाल पनि पुरानो विस्थापित गरी नयाँ बनाइएको छ । यो कार्य यस क्षेत्रलाई विश्व सम्पदाको सम्भावित सूचीमा राखेपश्चात सन् २०१० तिर गरेको बुझिन्छ । यस्तै गरी जीव छ्योर्तेनसँगै उत्तरतर्फ एक नयाँ मानेघर निर्माण गरी ठूलो माने राखिएको छ । यसको निर्माण सन् २०१७ मा गरिएको हो । उत्तरतर्फको भागमा नयाँ मानेपर्खाल थप्ने कार्य जारी रहेको देखिन्छ ।

## ५.५ किल्लापर्खाल बाहिर निजी घरभवनहरूको निर्माण

किल्लापर्खाल बाहिर निर्माण गर्ने प्रकृया इश्वीको १९६० को दशकबाट सुरु भएको देखिन्छ । नेपाली सेनाको क्याम्प, स्वास्थ्य चौकी, सरकारी प्रयोजनका भवन तथा विद्यालय भवन जस्ता संरचनाहरूबाट किल्लापर्खाल बाहिर संरचना निर्माण प्रारम्भ भएको पाइन्छ (OCHSPA, 2019) । पछिल्ला दिनहरूमा निजी स्वामित्वको बसोवास प्रयोजन र होटल प्रयोजनले थुप्रै घरभवनहरू निर्माण भैसकेका छन् । यसरी किल्लापर्खाल बाहिर निर्माण भएका संरचनाहरूलाई पनि मुख्य गरी दुई वर्गमा उल्लेख गर्न सकिन्छः

(क) माटो र काठले निर्माण गरिएका परम्परागत ढाँचाका संरचना

(ख) सिमेन्ट-कंक्रिटको प्रयोग गरी निर्माण गरिएका आधुनिक भवनः सिमेन्ट-

कंक्रिटको प्रयोग गरी बनाइएका घरभवनहरूलाई पनि दुई भागमा बाँड्न सकिन्छः

(अ) स्थानीय परम्परागत स्वरुपलाई अवलम्बन गरी निर्माण गरिएका संरचना

(आ) स्थानीय परंपरागत स्वरुपसँग नमिल्ने गरी बनाइएका संरचना

निजी निवास वा होटल प्रयोजनका लागि सिमेन्ट-कंक्रिटको प्रयोग गरी घरभवन निर्माण गर्ने चलन सन् २०११ तिर सुरु भएको देखिन्छ। यस प्रकार सन् २०२१ मार्चसम्मको आँकडा अनुसार लोमान्थाङमा किल्लापर्खालको बाहिर साना-ठूला गरी जम्मा ११२ वटा घर निर्माण भैसकेका छन् भने थप ३ वटा निर्माणाधीन अवस्थामा रहेका छन्। तीमध्ये २० वटा संरचनाहरू किल्लापर्खालसँगै अर्थात कोरा मार्ग (परिक्रमा मार्ग) भित्र निर्माण गरिएका छन्। यी २० संरचनामध्ये ४ वटा सिमेन्ट-कंक्रिटबाट बनाइएका छन्।

## ६. निष्कर्ष

लोमान्थाङलाई विश्व सम्पदा सूचीमा सूचीकृत गर्ने उद्देश्यले यस सम्पदा स्थललाई विश्व सम्पदाको सम्भावित सूचीमा राखिएको छ। त्यसको अन्तरङ्ग उद्देश्य यहाँको सम्पदाको संरक्षण हो। यहाँ अद्यापि संरक्षित माटोबाट निर्माण गरिएको किल्ला वस्ती नै यस क्षेत्रलाई विश्व सम्पदाको सूचीमा राख्ने OUV को प्रमुख attribute को रुपमा रहेको देखिन्छ। लोमान्थाङको विश्वव्यापी महत्व (Outstanding Universal Value) को Justification स्वरुप सूचीकरणका तीन आधारहरू (Criteria) प्रस्ताव गरिएको देखिन्छ। यद्यापि विश्व सम्पदा सूचीमा सूचीकरणका लागि Nomination दर्ता गर्दा पक्षराष्ट्र (State Party) ले हुवहु यिनै आधारहरू प्रस्तुत गर्नु पर्छ भन्ने बाध्यकारी व्यवस्था छैन। पक्षराष्ट्रबाट प्रस्ताव गरिएका Justification माथि World Heritage Committee अझ अर्को निष्कर्षमा समेत पुग्न सक्ने व्यवस्था रहेको छ (श्रेष्ठ, २०७७)। तर लोमान्थाङमा विद्यमान सम्पदाहरूको भौतिक अवस्थाको अध्ययन, यहाँको भू-परिदृश्य र त्यससँग सम्बद्ध सांस्कृतिक आयामहरूको अध्ययन गर्दा प्रस्तुत गरिएका Criteria (ii) (v) र (vi) उपयुक्त देखिन्छन्।

मध्यकालीन प्रकारवेष्टित शहर (Medieval Earthen Walled City of Lo Manthang) को रुपमा त्यही बमोजिमका पुष्ट्याईंसहित भविष्यमा विश्व सम्पदा सूचीमा सूचीकरण गर्ने उद्देश्यले विश्व सम्पदाको सम्भावित सूचीमा राखिएको भए पनि सम्पदा स्थलको संरक्षण र व्यवस्थापनमा दिनदिनै समस्या र चुनौतिहरू थपिँदै गएको देखिन्छ। "लोमान्थाङ सम्पदा वस्ती"को संरक्षणमा देखिएका मुख्य समस्या तीनवटा छन्ः

(१) किल्लापर्खालको वास्तुकलामा अन्तरनिहित मुख्य महत्व विपरित अनेकौंको सङ्ख्यामा प्रवेशद्वारहरू निर्माण र किल्लापर्खालको क्षय,

(२) किल्लापर्खालको बाहिर 'डामूड्राङ' क्षेत्रमा घरभवनहरूको निर्माण,

(३) घरभवन तथा अन्य संरचना निर्माणमा आधुनिक निर्माण सामग्रीको प्रयोग ।

उल्लेखित परिणाम र परिस्थिति आउनमा निम्नलिखित कारणहरू देखिन्छन्ः

(क) प्रशासनिक व्यवस्था र भौगोलिक दुरीका कारण यहाँको सम्पदा संरक्षणमा राज्यको पर्याप्त ध्यान नपुग्नु,

(ख) दीर्घकालीन सोच र योजना विना निर्माण गरिएका सरकारी कार्यालय प्रयोजनका भवनहरू सम्पदा मैत्री नहुनु,

(ग) सम्पदाको संरक्षणमा जनचेतनाको कमी हुनु र स्थानीयवासीहरूमा आधुनिक निर्माण सामग्री प्रति आकर्षण बढ्दैजानु,

(घ) सम्पदाको संरक्षणमा स्थानीयवासीहरूलाई अभिप्रेरित गर्ने खालका योजना राज्यबाट पर्याप्त रुपमा अघि नसारिनु,

अतः लोमान्थाङको पुरातात्विक, ऐतिहासिक एवं सांस्कृतिक महत्वमा प्रतिकूल प्रभाव पार्ने खालका गतिविधिहरू दिनानुदिन बढ्दै गएको भए पनि हालसम्म यो अवस्था काबु बाहिर पुगिसकेको छैन । सम्पदा संरक्षणलाई केन्द्रविन्दूमा राखेर राज्यले ठोस योजनासहित कार्यक्रम ल्याउन सकेको खण्डमा लोमान्थाङको संरक्षण संभव छ र विश्व सम्पदा सूचीमा पनि सूचीकरण हुन सक्छ । तर यहाँको सम्पदा संरक्षणमा चालिने प्रत्येक कदमहरूमा यहाँका सम्पदाका वाहक र संरक्षक शदियौंदेखि यस विषम भौगोलिक र प्राकृतिक पर्यावरणको सामना गर्दै रहेका स्थानीयवासीहरू नै हुन् भन्ने तथ्यलाई पटक्कै भुल्नु हुँदैन । विश्व सम्पदा सूचीमा सूचीकरण गर्ने प्रकृयाहरूमा स्थानीयवासीको सक्रय सहभागिता र स्पष्ट सहमति रहनु पर्ने प्रावधान Operational Guideline ले स्पष्ट उल्लेख गरेको छ । स्थानीयवासीको सक्रिय सहभागितामा स्थानीय सरकारबाट निर्माण भई लागू हुने निर्माण सम्बन्धी मापदण्ड सम्पदा स्थलको संरक्षणका लागि अपरिहार्य छ ।

**सन्दर्भ सामग्रीहरूः**

Chapagain, N. (2068). Rethinking participatory process in heritage conservation: Situating professionals in

the Process. *JScE* Vol. 1. pp 43-51

Darnal, P. (2017). Significant monuments of Upper Mustang and issue of conservation. Dhaulagiri Journal of Sociology and Anthropology. Vol 11.

Darnal, Prakash (2008). Reconnaissance of caves in Upper Mustang. Ancient Nepal. Vol 166.

Dhungel, Ramesh, (2002). Kingdom of Lo Mustang, Kathmandu: Tashi Gephel Foundation.

Jackson, P David (1978). Note on the history of serib and nearby in the upper kaligandaki. Kailash a Journal aof Himalayan Study. Vol 6(3) pp 195-228.

Jackson, P David (1984). The Mollas of Mustang: Historical, religious and oratorical traditions of the Nepalese-Tibetan borderland. Library of Tibetan Works and Archives.

Bhatta S., Richon M., Pommaret F., He J (2019). Mission report. Documentation and recommendation for the protection of the medieval earthern walled city of lo manthang. *Oriontal Cultural Heritage and Site Protection Alliance, France.*

Richon, M. (2012). Conciliating tradition and modernity in Upper Mustang.*Terra Lyon*. p. 1-12

UNESCO, (2018). Convention Concerning the Protection of the World Cultural and Natural Heritage 1972.

UNESCO, (2021). Operational guidelines for the implementation of the world heritage convention. UNESCO, World Heritage Centre. https://whc.unesco.org/en/guidelines/

शर्मा, प्रयागराज, गुरुङ, जगमान, (२०५६), ब्लो (मुस्ताङ) का सांस्कृतिक सम्पदा, नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय,

कीर्तिपुर, काठमाडौं ।

श्रेष्ठ, सुरेश सुरस (२०७७). सम्पदाः विश्व सम्पदा सूची (सूचीकरणका लागि मनोनयनको तयारी), युनेस्कोका निमित्त नेपाल राष्ट्रिय आयोगको सचिवालय सिंहदरवार, काठमाडौं ।

# मध्यकालीन सहर तानसेनको ऐतिहासिक तथा सांस्कृतिक महत्व



✍ अरुणकुमार काफ्ले*

## १. परिचय

नेपालमा प्राचीन कालदेखि नै राजप्रसाद, मठ, मन्दिर, बिहार, चैत्य, स्तुप, पाटी, पौवा, ढुङ्गेधारा जस्ता विभिन्न किसिमका कला तथा वास्तुकलाका संरचनाहरू निर्माण हुँदैआएका छन् । त्यस्ता कला तथा वास्तुकलासँग सम्बन्धित स्मारक, ऐतिहासिक, धार्मिक तथा सांस्कृतिक स्थलहरू नेपालको मौलिक पहिचान स्थापित गर्ने महत्वपूर्ण सम्पदा मानिन्छन् । उक्त सम्पदाहरूका कारण विश्वमा नेपालको छुट्टै तथा विशिष्ठ चिनारी कायम भएको छ । काठमाडौ उपत्यकाभित्र मात्र होइन, बाहिर पनि यस्ता वास्तु संरचनाहरू निर्माण गरिए । त्यस्ता सम्पदा भएका क्षेत्रहरू ऐतिहासिक, धार्मिक तथा सांस्कृतिक दृष्टिकोणले उल्लेख्य मानिए । यस्तै स्थलहरूको पङ्क्तिमा पाल्पा जिल्लाको तानसेन बजार पनि पर्दछ ।

तानसेन नाम मगर भाषाबाट रहन गएको हो । एक सल्लाको प्रजातिलाई मगर भाषामा 'टानसिङ' भन्दछन् । यस क्षेत्रमा प्रशस्त मात्रामा टानसिङ नाम गरेको एक प्रकारको सल्लाको प्रजाति पाइने भएकाले यस ठाउँको नाम 'टानसिङ' रह्यो । पछि अपभ्रश हुदै जाने क्रममा तानसिङ र तानसेन भएको हो (श्रेष्ठ, २०७७), पृ.३०) । पाल्पाका सेन राजाहरूले जारी गरेका कतिपय स्यामोहरहरूमा तानसिंघ भन्ने उल्लेख पाइन्छ । यो सन्दर्भले तानसेनको एतिहासिक महत्व उजागर पारेको छ ।

दोस्रो विश्वयुद्धले संसारमा जनधन तथा प्राकृतिक एवम् मानव निर्मित सांस्कृतिक सम्पदाहरूमा ठूलो विनास पुऱ्यायो । यस परिस्थितिबाट प्राकृतिक एवम् सांस्कृतिक सम्पदाहरू जोगाउने, जीर्ण तथा पूर्णरूपले नासिएका सम्पदाहरूको संरक्षण सम्वर्द्धन

* सह प्राध्यापक, संस्कृति विभाग, पद्मकन्या बहुमुखी क्याम्पस



मध्यकालीन सहर पाल्पा

गर्ने संस्थाका रूपमा १६ नोभेम्बर १९४५ मा युनेस्कोको स्थापना भएको हो। प्राकृतिक एवम् सांस्कृतिक सम्पदाहरूको संरक्षण तथा संम्वर्द्धन गर्ने आधिकारिक संस्थाको हैसियतले यो संस्थाले विश्वका विभिन्न मुलुकहरूलाई क्रमशः आफ्नो सदस्य राष्ट्र बनाउँदै लग्यो । यसपछि यो संस्थाले आफ्ना सदस्य राष्ट्रहरूमा पाइने प्राकृतिक एवम् सांस्कृतिक सम्पदाहरूको पहिचान, वर्गीकरण, संरक्षण, संम्वर्द्धन तथा सूचीकरण गर्ने कार्यलाई जोड दिदैआएको हो। नेपाल सन् १९७८ मा युनेस्कोको सदस्यभई पक्ष राष्ट्र बन्यो । यसपछि नेपालका प्राकृतिक तथा सांस्कृतिक सम्पदाहरूको सर्वेक्षण, सङ्कलन, पहिचान, वर्गीकरण एवम् लगत तयार पार्ने कार्य प्रारम्भ गऱ्यो । यस क्रममा हालसम्म नेपालका चार सम्पदाहरू सूचीकृत भइसकेका छन् । उक्त सूचीमा मध्यकालीन सहर पाल्पाको तानसेन भने पर्न सकेन ।

विगत केही वर्षबाट युनेस्कोले पुनः पक्ष राष्ट्रहरूमा पाइने सम्पदाहरूको सर्वेक्षण, सङ्कलन, पहिचान, वर्गीकरण एवम् सूचीकृत गर्ने कार्य अगाडि बढाएको हो । यस क्रममा मध्यकालीन सहरका रूपमा पाल्पा जिल्लाको तानसेन बजारलाई प्रारम्भिक सूचीमा मनोनयन गरिएको छ। मध्यकालीन सहर तानसेनको युनेस्कोको विश्वसम्पदा सूचीमा सूचिकृत हुने ऐतिहासिक तथा सांस्कतिक पृष्ठभूमि तथा महत्व केकस्तो छ भन्ने विषयको विश्लेषण गर्ने उद्देश्यले यो लेख तयार पारिएको हो ।

यो लेख विश्लेषणात्मक र विवरणात्मक अनुसन्धानको ढाँचामा आधारित छ। यसमा गुणात्मक सूचना एवम् तथ्याङ्क प्रयोग गरिएका छन् । त्यसो हुँदा यो

गुणात्मक लेख हो । यस अध्ययनमा प्राथमिक तथा द्वितीयक दुवै प्रकृतिका तथ्याङ्कहरू सङ्कलन तथा विश्लेषण गरिएका छन् । प्राथमिक तथ्याङ्क अवलोकन, अन्तर्वार्ता, छलफल जस्ता विधि प्रयोग गरी सङ्कलन गरिएका हुन् । द्वितीयक तथ्याङ्क भने विभिन्न ग्रन्थ, प्रतिवेदन र लेख रचनाको समीक्षाबाट सङ्कलन गरिएको हो ।

२. **तानसेनको ऐतिहासिक पक्ष तथा महत्व**

लिच्छविकालमा नेपाल ठूलो भूभागमा फैलिएको स्वतन्त्र राष्ट्र थियो । त्यसबखतका अभिलेखहरूले यो सन्दर्भलाई पुष्टि गरिदिएका छन् । पछि मध्यकालमा कर्णाली प्रदेशमा खस साम्राज्य स्थापना भयो । खस साम्राज्य पूर्वमा गण्डकी प्रदेशसम्म फैलिएको र पाल्पा यसै क्षेत्रमा पर्ने हुँदा मध्यकालमा पाल्पा भेग खस साम्राज्यअन्तर्गत नै पर्दथ्यो । खस राज्यको विघटनपछि गण्डकी प्रदेशमा चौबीसी राज्य र कर्णाली प्रदेशमा बाइसी राज्यहरू स्थापना भए । लमजुङ, तनहुँ, गलकोट, भलीवम, सतहुँ, गरहुँ, पोखरा, भीरकोट, रिसिङ घिरिङ, ढोर, पाल्पा, बुटवल, तानसेन, गुल्मी, पश्चिम नुवाकोट, खाँची, इस्मा, धुर्कोट, मुसिकोट, पिल्ली, सलिना, विगा पैसा, कास्की, दाङ आदि यी राज्यहरू चौबीसे राज्यअन्तर्गत पर्दछन् (Oldfield , 1974, P. 37) ।

यिनै राज्यहरूमध्ये पाल्पा पनि एक थियो । पाल्पा पश्चिम नेपालको प्रसिद्ध स्थल हो । मध्यकालमा पाल्पा चौबीसे राज्यअन्तर्गत सबैभन्दा पुरानो र बलियो राज्य थियो (खतिवडा, २०७४, पृ. ६८३-६८४) । रिब्दीकोटको सामन्त शासक रुद्र सेनले वि.स. १५५० मा पाल्पा राज्यको स्थापना गरेका थिए (घिमिरे, २०५६, पृ. २९) । रुद्रसेनलाई कसैले चितौडगढका सेनवंशी राजा मानेका छन् । राज्य स्थापना भने वि.स. १५७० मा गरेको हुन सक्ने उल्लेख गरेको पाइन्छ (रेग्मी, २०३४, पृ. ८६) । प्रभास भन्ने ठाउँमा रहेको शिवालयको वि.स. १५४९ को एउटा अभिलेखमा रुद्रसेन राजाको बारेमा उल्लेख छ (बानियाँ, २०६३, पृ. १४-१५) । यो शिलालेख नै रुद्रसेनले पाल्पा राज्य स्थापना गरेका थिए भन्ने विषयलाई पुष्टि गर्ने आधार हो ।

पाल्पा एकीकरण अभियानमा समेटिनुभन्दा अघिसम्म सेनवंशका शासकहरूले शासन सञ्चालन गरे। कालान्तरमा मुकन्द सेनको समयमा पाल्पा राज्य विस्तार भयो । पछि उनका सन्तानहरूले यसलाई मकवानपुर, तनहुँ र बुटवल गरी ३ वटा राज्यमा विभाजन गरे । रिसिङ, घिरिङ र जाजरकोट पनि पाल्पाबाट अलग भएका स्थान थिए । वास्तवमा मुकुन्दसेन राजा हुनासाथ मगर र खस लगायतका भारदारहरूलाई मिलाएर बलियो राज्य बनाएका थिए । त्यसबेला पाल्पा राज्यको सीमाना उत्तरमा मुक्तिनाथ, दक्षिणमा गङ्गानदी, पूर्वमा जलपाईगुडी र पश्चिममा कुमाउसम्म फैलिएको थियो (खतिवडा, २०७४, पृ. ६८३-६८४) । वि.सं. १८६१

तिर पाल्पा राज्य नेपाल एकीकरणको अभियानमा समाहित भयो । यसपछि भने यसको स्वतन्त्र राज्यको हैसियत समाप्त भएको हो । पाल्पा गौँडा पछिल्लो समयसम्म पनि प्रशासनिक अखडा थियो । राणाकालमा समेत यसै गौँडाबाट यस क्षेत्रको प्रशासन सञ्चालन गरिन्थ्यो ।

## ३. तानसेनको सांस्कृतिक पक्ष तथा महत्व

पाल्पा जिल्लाको तानसेन बजार मूलतः मध्यकालीन सहर हो । तानसेनमा विशेषतः मध्यकालदेखि नै नेवार, ब्राह्मण, क्षेत्री, मगर, गुरुङ, थकाली जस्ता समुदायका मानिसहरू बसोवास गर्दैआएका छन् । विशेषतः नेवार यहाँ बसोवास गर्ने प्रमुख समुदाय हो । मगर समुदाय यहाँ बसोवास गर्ने अर्को उल्लेख्य जनजाति मानिन्छ । त्यस्तै धार्मिक दृष्टिकोणले तानसेन सहरमा विशेषतः हिन्दू तथा वौद्ध धर्मसँग सम्बन्धित समुदायको बसोवास छ । तानसेन सहरको संस्कृति र सांस्कृतिक सम्पदा भन्नासाथ मूलतः उक्त समुदायका साथै हिन्दू तथा वौद्ध धर्मसँग सम्बन्धित भौतिक संरचना एवम् अभौतिक परम्पराहरू बुझ्ने गरिन्छ । अतः हिन्दू तथा वौद्ध धर्म र उक्त समुदायसँग सम्बन्धित भौतिक संरचना एवम् आफ्नो जातीय कुल परम्पराअनुसार संस्कारगत कर्म, चाडपर्व, व्रतउपासना र धार्मिक अनुष्ठान जस्ता अभौतिक परम्परालाई मूलतः मूर्त तथा अमूर्त सांस्कृतिक सम्पदाका रूपमा वर्गीकरण गरी प्रस्तुत गरिएको छ ।

### ३.१. मूर्त सांस्कृतिक सम्पदा

युनेस्कोले सांस्कृतिक सम्पदाको वर्गीकरण गर्ने क्रममा मानव बसोवासको ढाँचा, स्मारक तथा कलावस्तु गरी मूर्त सांस्कृतिक सम्पदालाई तीनवटा विधामा विभाजन गरेको छ । उक्त सिद्धान्तका आधारमा यस अध्ययनमा अमरनारायण मन्दिर, बालगोपाल मन्दिर, भगवती मन्दिर, वटुक भैरवको मन्दिर, टुँडिखेलको पश्चिम कुनामा ढुङ्गाको चैत्य, आनन्द बिहार चैत्य, टक्सारटोलको महाचैत्य, पाल्पा दरबार जस्ता तानसेन सहरमा पाइने मूर्त सांस्कृतिक सम्पदाको सङ्कलन, पहिचान, वर्गीकरण, विश्लेषण र सूचीकृत गर्ने कार्य गरिएको हो ।

**अमरनारायण मन्दिर**

अमरनारायण मन्दिर तानसेन नगरपालिका नारायण टोलमा पर्दछ । पाल्पा राज्यमा सेन वंशको पतनपछि पहिलो मुख्तियार (गर्भनर) काजी अमर सिंह थापा (प्र.म. भीमसेन थापाको बुवा) बने । मन्दिरमा रहेको अभिलेखमा वर्णन गरिएको सन्दर्भले यो मन्दिर वीरभद्र थापाका छोरा काजी अमरसिंह थापाले वि.स. १८६३ मा निर्माण गरेका हुन् भन्ने सङ्केत गर्दछ (भट्टराई, २०६७, पृ.४) । काठमाडौबाट पाल्पा आएका सुन्दर बाँडाले यो मन्दिर निर्माण गरेका हुन् (शाक्य, २०४४, पृ. ९०) ।

अमरनारायण मन्दिर सम्भवत काठमाडौ उपत्यकाबाहिर निर्मित बहुछानादार शैलीका मन्दिरमध्ये सुन्दरतम नमुना हो । यो मन्दिरको गर्भगृहमा लक्ष्मीसहितको भगवान् नारायणको चर्तुभुज मुद्रामा कमलमाथि उभिएको सुनौलो धातुको मूर्ति छ । भुइँमा भगवान् विष्णुका बाहन गरुड आसनरत छन् । दायाँ बायाँ गणेश, बाल गोपाल र हनुमान्का मूर्तिहरू छन् । नारायणको मूर्ति अगाडि शालिग्रामहरूको थुप्रो राखिएको छ । तीन तले यो मन्दिरको माथिल्लो छाना पित्तलको छ । बाँकी अन्य छानाहरूमा भने झिँगटीको प्रयोग छ ।

तेलिया, इटामा बज्र सुकीको जोडाई र सालका काठहरूको प्रयोग गरी बनाइएको यस मन्दिरको विशेषता अनेक टुँडालहरूमा कुँदिएका उत्कृष्ठ काष्ठकलाका आकृतिहरू र तिनमा व्यक्त गरिएका कामकलाका विभिन्न मुद्राहरू हुन् । काठको अत्यधिक प्रयोग, कलात्मक टुँडाल, तोरणका साथै विम, दलिन, चौखोट, प्रवेशद्वार, प्रदक्षिणा पथ, तह तह परेको छानो आदि यो स्मारकका महत्वपूर्ण विशेषता हुन् । यी आङ्गिक विशेषताका अतिरिक्त देउदेउताको पूजा उपासना परम्परा, फलफुल अर्पण तथा वितरण प्रणाली, पुजारी नियुक्ति परम्परा तथा व्यवस्थापन, मन्दिरमा चढाउने भाकल, भोग, दान दक्षिणा र भेटी परम्परा, वार्षिक रूपमा चल्ने मेला, जात्रा, चाडवाड, परम्परालाई यो मन्दिरसँग सम्बन्धित अन्य विशेषता मान्न सकिन्छ ।

**बालगोपाल मन्दिर**

तानसेन बजार नारायण टोलमा एउटा बालगोपालको सानो मन्दिर छ । स्थानीय बुढापाकाहरू यो मन्दिर सेनकालमा बनेको बताउँदछन् (काफ्ले, २०७९,पृ. ४३) । यो मन्दिर अमरसिंह थापाले निर्माण गरेको अमरनारायण मन्दिरसँगै छ । अतः आकारमा सानो भए तापनि ऐतिहासिक दृष्टिकोणले यो मन्दिर तानसेन क्षेत्रको उल्लेख्य सम्पदा हो ।

**भगवती पीठ**

पाल्पाको अर्को उल्लेख्य सांस्कृतिक सम्पदा तानसेन बजारको मध्य खण्डमा अवस्थित भगवती मन्दिर हो । यो देवस्थल तानसेन नगरपालिका भगवती टोलमा पर्दछ । यो मन्दिरको निर्माण वि.सं. १८७१ मा पाल्पा गौडाका प्रमुख कर्नेल उजिर सिंह थापाले गरेका हुन् ।  भारतको गोरखपुर नेपालमाथि आक्रमण गर्न अघि वढेको अङ्ग्रेज फौजबाट बुटवल र स्युराजको सुरक्षाका निमित्त त्यसतर्फ जाने क्रममा कर्नेल उजिरसिंह थापाले तानसेन बजारमा रहेकी अष्टदश भुजायुक्त भगवतीको प्रार्थना गरेका थिए । त्यसबेला उनले अङ्ग्रेज फौजसँगको युद्धमा विजय प्राप्त गरी बुटवल र स्युराजको सुरक्षा गर्न सकेमा भगवतीको ठूलो मन्दिर बनाई सिन्दूर जात्रा गर्ने भाकल गरेका थिए । अङ्ग्रेज फौजसँग बुटवल

नजिकको जितगढीमा युद्ध भयो। कर्नेल उजिर सिंह थापाले विजय प्राप्त गरे। भाकलअनुसार नै अष्टदशभुजायुक्त भगवतीको ठूलो मन्दिर बनाई सिन्दूर जात्राको चलन चलाए (बानियाँ, २०५३, पृ. २६)।

### वटुक भैरव थान

वटुक भैरवको मन्दिर तानसेन नगरपालिका ६ मा अवस्थित छ। यो मन्दिर सेनवंशी राजा महादत्त सेनले वि.सं. १८४४ मा निर्माण गरेका हुन् (श्रेष्ठ, २०७७, पृ.५४)। तले शैलीमा निर्माण गरिएको यो मन्दिर पनि काष्ठकलाको सुन्दरतम नमुना मानिन्छ। यसमा प्रयोग गरिएका ढोका तथा झ्याल जस्ता अङ्ग निकै कलात्मक छन्। यो मन्दिरको गर्भगृहमा भैरवको मूर्ति छ। झिँगटीको छाना भएको यो मन्दिरको अर्को आकर्षण गजूर हो। सुनौलो गजूर निकै ठूलो छ। यो मल्लकालको हो। यहाँ दैनिक तथा पर्व विशेषमा पूजाउपासना गरिन्छ।

### बौद्ध धर्मसँग सम्बन्धित सम्पदा

पाल्पा गौंडाको प्रशासनिक क्षेत्रमा पर्ने थाकखोलामा प्राचीन कालमा बोन धर्मको प्रभाव थियो। तिब्बतमा बौद्ध धर्म र बोन धर्मको सम्मिश्रणबाट लामावादमा विश्वास राख्ने बौद्ध धर्मको प्रादुर्भाव भयो। त्यसपछि भिक्षु पद्मसम्भवले थाकखोलामा पनि सो धर्मको प्रचार गरेका हुन् (क्षेत्री, २०४४, पृ. १३३-१३६)। थाकखोलाका कोवाङ, टुकुचे, मार्फा र ठिनी क्षेत्रमा निर्माण गरिएका बौद्ध धर्मका छ्योरतेनहरू र सो क्षेत्रका विभिन्न ठाउँका बाटोको आसपासमा "ॐ मणि पद्मे हुँ" भन्ने मन्त्र लेखी ठड्याइएका ढुङ्गाका मानेहरूले उक्त विषयलाई पुष्टि गर्दछन्।

पाल्पा वरिपरिका क्षेत्र खासगरी रूपन्देही, कपिलवस्तु, नवलपरासी, मुस्ताङ जस्ता जिल्लाहरूबाट बौद्ध धर्मसँग सम्बन्धित चैत्य, स्तुप, बिहार मन्दिर, बुद्धका मूर्ति आदि प्राप्त भएका छन् (शर्मा, २०६०, पृ. ७०-७६)। पाल्पाको श्रीचैत्य धर्मधातुमा सक सम्बत् ७९९ अर्थात् वि.स. १९३४ को एउटा अभिलेख छ। उक्त अभिलेखमा नेपाल देश कीर्तिपुर नगरका विक्रमसेन महाविरका बौद्धमार्गीले सत्तल निर्माण गर्नुका साथै त्यसको व्यवस्थापनका लागि चिख्खिरदारलाई जिम्मा दिएको प्रसङ्ग पाइन्छ (Sharma, 1987, p.13)। यो सन्दर्भले पाल्पा क्षेत्रमा निकै अघिदेखि नै बौद्ध धर्म र दर्शनको विकास भएको सङ्केत गर्दछ।

पाल्पाको तानसेन सहरमा आधुनिककालमा मात्र बौद्ध धर्मको प्रभाव बढ्दै गएको देखिन्छ। पाल्पा राज्य नेपालमा गाभिएपछि पाल्पामा पनि काठमाडौ उपत्यकाबाट कालिगढहरू झिकाएर कलात्मक मठ, मन्दिर, निर्माण गराउन थालिएको पाइन्छ। काठमाडौबाट कालिगढको रूपमा पाल्पा आएका सुन्दर बाँडाले तानेसेन टुँडिखेलको पश्चिम कुनामा ढुङ्गाको चैत्य स्थापना गरी यहाँ

बज्रयानी बौद्ध धर्मको सुरुवात गराएका थिए (शाक्य, २०४४, पृ. ९०)। तानसेनको आनन्द बिहारमा रहेको एक घण्टमा चैत्य भगवान्‌लाई वि.स. १८९४ मा चढाएको भन्ने अभिलेख अङ्कित गरिएकाले पाल्पामा बिक्रमको उन्नाइसौँ शताब्दीको उत्तरार्धमा बौद्ध धर्मको प्रभाव परेको देखिन्छ (बानियाँ, २०५६, पृ. १३४-१३५)।

पाल्पाको तानसेनमा वि.स. २०२२ सम्म जम्मा दुईवटा चैत्य तथा बिहार निर्माण गरिएका थिए। यसमध्ये पहिलो वि.स. १८६३ मा सुन्दर बाँडाले स्थापना गरेको आनन्द बिहार चैत्य हो। चैत्य भएको ठाउँमा धन बाँडा, थकु र हेमलक्ष्मीले वि.स. १९११ मा एउटा पाटी बनाएको कुरा आनन्द बिहारको बाहिरपट्टिको भित्तामा रहेको अभिलेखबाट थाहा हुन्छ (शाक्य, २०४४, पृ.७)। तानसेनको टक्सारटोलमा वि.स. १९८८ मा महाचैत्य निर्माण गरिएको थियो (बज्राचार्य, २०४५, पृ. २५)।

पाल्पाको तानसेनमा निर्मित आनन्द बिहार र महाचैत्य बिहार बौद्ध बिहार र चैत्यको वास्तुकलाअनुसार निर्माण गरिएका छन्। आनन्द बिहार ईटा, काठ, माटो, प्रयोग गरी तले शैलीमा निर्माण गरिएको छ। भुँइतला भजन र धर्मदेशना गर्ने सभा कक्ष हो। त्यहाँ शाक्यमुनि बुद्धको कलात्मक मूर्ति राखिएको छ। भक्तजनहरू वस्दछन्। उपल्लो तला भिक्षुहरूको निवास स्थान हो। महाचैत्य बिहार तीन तले छ। यसको भुँइतल्लामा शाक्यमुनि बुद्धका मूर्तिहरू राखी भक्तजनहरूले धर्मदेशना गर्दछन्। यो बिहारको पहिलो तला कार्यालय र बैठकको रूपमा प्रयोग गरिएको छ। शिरानको तलाको प्रयाग भने भिक्षुहरूको आवासका निमित्त गर्दछन्। यी दुवै बिहारका प्राङ्गणमा भक्तजनहरूले पूजा उपासना गर्नका लागि चैत्य निर्माण गरिएको छ (काफ्ले, २०७५, पृ.९०-९३ )।

### पाल्पा दरबार

पाल्पा दरबार तानसेन नगरपालिकाको मध्यभागमा अवस्थित अर्को उल्लेख्य सांस्कृतिक सम्पदा हो। यो दरबारको निर्माण प्रताप शमशेरका समयमा भएको थियो (घिमिरे, २०५६, पृ. १२२)। यस दरबारमा धेरै वर्षसम्म जिल्लाका विभिन्न सरकारी अड्डाहरू रहेका थिए। वि.सं. २०६२ को माओवादी आक्रमणका क्रममा यो दरबार ध्वस्त भएपछि पुनः निर्माण गरिएको हो। वि.सं. २०७४ देखि यो दरबारलाई सङ्ग्रहालयका रूपमा विकास गरिएको छ। यहाँ सेनकालीन विभिन्न हातहतियार तथा मगर संस्कृतिसँग सम्बन्धित विभिन्न सामग्री सङ्कलन एवम् प्रदर्शनमा राखिएका छन्।

### ३.२. अमूर्त सांस्कृतिक सम्पदा

युनेस्कोले अभौतिक संस्कृतिलाई अमूर्त संस्कृति भनेको छ। युनेस्कोले अमूर्त

सांस्कृतिक सम्पदाको वर्गीकरण गर्ने क्रममा मौखिक परम्परा एवम् अभिव्यक्ति; अभिनय तथा प्रदर्शनकारी कला; सामाजिक व्यवहार, अनुष्ठान तथा चाडपर्व उत्सव; प्रकृति र ब्रम्हाण्डसँग सम्बन्धित ज्ञान तथा व्यवहार; र परम्परागत कलाकौशल र शिल्प प्रविधि गरी पाँच वटा विधामा विभाजन गरेको छ। उक्त सिद्धान्तका आधारमा यस अध्ययनमा स्थानीय जातीय संस्कृति, अमर नारायणको रथयात्रा, भगवती जात्रा, गाईजात्रा, वटुक भैरव जात्रा, गणेश जात्रा, भीमसेन जात्रा, भगवान् बुद्ध रथयात्रा जस्ता तानसेन सहरमा पाइने अमूर्त सांस्कृतिक सम्पदाहरूको सङ्कलन, पहिचान, वर्गीकरण, विश्लेषण र सूचीकृत गर्ने कार्य गरिएको हो ।

**स्थानीय जातीय संस्कृति**

पाल्पाको तानसेनमा हिजोआज नेवार, ब्राह्मण, क्षेत्री, मगर, गुरुङ, थकाली जस्ता समुदायका मानिसहरू बसोवास गर्दछन् । विशेषतः नेवार यहाँ बसोवास गर्ने प्रमुख समुदाय हो। यस नगरमा पूर्वमध्यकाल र उत्तरमध्यकालदेखि नेवार समुदायका मानिसहरूले बसोवास विस्तार गरेका हुन्। नेपालमा काठमाडौँ उपत्यका नेवार समुदायको उद्गम स्थल हो। मूलतः व्यापारका सिलसिलामा त्यहीबाट नेवारहरू पाल्पाको तानसेनलगायत अन्यत्र बसाईं सरेका हुन् । यहाँ नेवार समुदायको अमात्य, बज्राचार्य, जोशी, कर्माचार्य, मानन्धर, नापित, राजोपाध्याय, उदास, तुलाधर, सुवाल, उलक, श्रेष्ठ, ताम्राकार, प्रधान, महर्जन जस्ता थरको बसोवास पाइन्छ । उक्त समुदायले आफ्नो जातीय कुल परम्पराअनुसार संस्कारगत कर्म, चाडपर्व, व्रतउपासना र धार्मिक अनुष्ठान सम्पादन गर्ने गर्दछन् । उक्त  मौलिक विधिविधान तथा अभ्यास प्रणाली नेवार समुदायको अमूर्त संस्कृतिअन्तर्गत पर्ने महत्वपूर्ण सम्पदा हुन् ।

पाल्पाको तानसेन बजारमा मगर समुदायको पनि बसोवास तथा उनीहरूका मौलिक सांस्कृतिक सम्पदाहरू पाइन्छन् । यस नगरमा परापूर्व कालदेखि नै मगर समुदायका मानिसहरूले बसोवास विस्तार गरे । उक्त समुदायले आफ्नो जातीय कुलायन परम्पराअनुसार संस्कारगत कर्म, चाडपर्व, व्रतउपासना र धार्मिक अनुष्ठान सम्पादन गर्ने गर्दछन् । विशेषतः कुल पूजा, मण्डलीपूजा, बाजेबराजु पूजा, चण्डीपूर्णिमा, रोका सङ्क्रान्ति, पन्ध्र पौष, माघे सङ्क्रान्ति, यौनाट पूर्णिमा जस्ता पर्व तथा पूजाउपासना यो समुदायमा प्रचलनमा छन् । ती मौलिक विधिविधान तथा अभ्यास प्रणाली मगर समुदायको अमूर्त संस्कृतिअन्तर्गत पर्ने महत्वपूर्ण सम्पदा हुन् ।

**अमर नारायणको रथयात्रा**

अमर नारायणको रथयात्रा कर्णेल उजीर सिंह थापाले मन्दिर स्थापना भएको करिब १५ वर्ष पछि वि.स.१८७८ मा प्रारम्भ गराएका थिए (काफ्ले, २०७९,पृ.

४८) । प्रत्येक वर्ष कृष्ण जन्माष्टमीको भोलिपल्ट सुनौलो रथमा भगवान्को मूर्ति प्रतिस्ठापन गरी काँधमा बोकेर सहरभरि परिक्रमा गराइन्छ । यो जात्रा निकै आकर्षक अमूर्त साँस्कृतिक सम्पदा हो । यसका साथै बडा दशैं र कार्तिक पूर्णिमामा लगाइने भण्डारा, एकादशी, अक्षय तृतीया, रामनवमी, चर्तुदशीमा लाग्ने मेला यस देवस्थलसँग सम्बन्धित अन्य अमूर्त साँस्कृतिक विशेषता हुन् ।

### भगवती जात्रा

अङ्ग्रेज फौजसँग युद्धमा विजय प्राप्त गरेपछि कर्नेल उजिर सिंह थापोल भाकलअनुसार अष्टदशभुजायुक्त भगवतीको ठूलो मन्दिर बनाई सिन्दूर जात्राको चलन चलाएका हुन् । यो जात्रा भाद्रकृष्ण अष्टमीको भोलिलपल्ट चलाइन्छ (पौड्याल, २०७५, पृ ९८-९९) । भाद्रकृष्ण अष्टमीको अर्धरात्रीमा प्रारम्भमा भक्तजनहरू भेलाभई भरतात भजन कीर्तन गर्दछन् । उज्यालो भएपछि भगवतीको मूर्ति रथमा विराजमान गराई राजकीय सम्मानका साथ नगर परिक्रमा गराउने चलन छ । रथयात्राका क्रममा पञ्चेवाजा, भजनमण्डली, नेपाली सेना, नेपाल प्रहरी, निजामती कर्मचारी, नगरवासी, भक्तजनलगायतका मानिसहरू सहभागी हुन्छन् ।

### गाईजात्रा

गाईजात्रा नेवार समुदायसँग सम्बन्धित उल्लेख्य पर्व मानिन्छ। गाईजात्रा देवीदेवतासँग सम्बन्धित पर्व होइन । यसको सम्बन्ध पितृसँग छ । अतः नेवार समुदायमा प्रत्येक वर्ष भाद्रकृष्णपक्ष प्रतिपदाको दिन पितृ उद्दारका निमित्त यो पर्व मनाउने गर्दछन् (श्रेष्ठ, २०७७, पृ. २२६) । पाल्पाको तानसेनमा पूर्वमध्यकाल र उत्तरमध्यकालदेखि नै नेवार समुदायका मानिसहरूको घना बसोवास रहेकाले गाईजात्रा पर्व मनाउने परम्परा विकास भयो । यो स्वभाविक र सान्दर्भिक छ । सोहीअनुसार यो पर्व मनाउदै आएका हुन् । यो तानसेन नगरको अमूर्त संस्कृतिअन्तर्गत पर्ने महत्वपूर्ण सम्पदा हो ।

### वटुक भैरव जात्रा

वटुक भैरव जात्रा तानसेन बजारको अर्को महत्वपूर्ण अमूर्त सांस्कृतिक सम्पदा हो । तानसेन नगरपालिका-६ मा अवस्थित यो मन्दिरमा दैनिक तथा पर्व विशेषमा पूजाउपासना गरिन्छ। दैनिक पूजाआजामा धूप, दीप, नैवेद्य, अक्षता, फलफूल अपर्ण गरिन्छ। प्रत्येक शनिबार, मङ्गलबार र सङ्क्रान्तिमा भने रोट चढाउने गर्दछन् । दशै पर्वमा ध्वजापताका, घ्यू, तेल लेपनगरी वोका बलिदिने चलन छ । यस देवस्थलमा पार्विक पूजाका रूपमा प्रत्येक वर्ष बैशाख १ गते भैरवको मूर्ति खटमा राखी खटजात्रा गर्ने गर्दछन् । अमरगञ्जबाट प्रारम्भ भएको खटजात्रा टुँडिखेल, भीमसेनटोल, नारायणटोल, असनटोल, मखनटोल हुँदै दरबार नजिक रहेको हुलाक घरको गणेश मन्दिरसम्म पुऱ्याइन्छ। यसपछि गणेश मन्दिरबाट

क्रमशः खटजात्रा शीतलपाटी, ठाडोगल्ली, भगवती टोल, गोपीटोल र बसन्तपुर को भीमसेन मन्दिर लैजान्छन् । त्यहाँबाट पुनः विस्तारै टक्सारटोल, सिकेखानटोल, बडिज्ञानटोल, टुँडिखेल हुँदै वटुक भैरव मन्दिर पुगेपछि खटजात्रा विर्सजन गर्ने परम्परा छ ।

**गणेश जात्रा**

तानसेन बजारका श्रीनगर डाँडामा अवस्थित सिद्धिविनायक, अमरगञ्जमा रहेको अमर गणेश, रणउजीरेश्वरी भगवती पीठको प्राङ्गणको तहविल गणेश, मखनटोल हुलाक घर अगाडिको गणेश, टक्सारटोलको सूर्यविनायक, गोर्खेकोटमा रहेको गोर्खेकोट गणेश, सापाकोमा रहेको सापाकोट गणेश र प्रत्येक भीमसेन थानमा गणेशका मन्दिर छन् (श्रेष्ठ, २०७७, पृ. १६७) । उक्त सबै गणेश स्थानमा दैनिक पूजाउपासना गरिन्छ । तर पार्विक रूपमा जात्रा सबैमा हुँदैन । केहीमा मात्र चल्दछ । जात्रा चल्ने गणेशस्थानमध्ये श्रीनगर डाँडामा अवस्थित सिद्धिविनायकमा भाद्र कृष्ण द्वितीया, सापाकोमा रहेको सापाकोट गणेशमा भाद्र चौथी र भाद्र कृष्ण चर्तुदशीका दिन टक्सारटोलमा रहेको सूर्यविनायक गणेश हुन् । खटजात्रामा नगर परिक्रमा गरी विर्सजन गर्दछन् ।

**भीमसेन जात्रा**

सेनवंशी राजा महादत्तसेनले तानसेन बजारलाई समेटेर श्रीनगर सहर बसाली राजधानी सारेपछि तानसेनमा नेवार समुदायको बसोवास विस्तार भएको हो । भीमसेन नेवारहरूका ईष्टदेवता हुन् । त्यसो हुँदा तानसेन बजारको पुरानो बस्ती टुँडिखेलदेखि चुत्र्याभञ्ज्याङ (कैलासनगर) र मेहलधारादेखि गोर्खेकोटसम्म धेरैको सङ्ख्यामा भीमसेनका थानहरू निर्माण गरिए । टुँडिखेलको भीमसेन थान, शीतलपाटीको भीमसेन मन्दिर, गोपीटोल बसन्तपुरको भीमसेन थान, चुत्र् याभञ्ज्याङ (कैलासनगर) को भीमसेन थान, मेहलधाराको भीमसेन मन्दिर र गोर्खेकोटको भीमसेन थान निकै उल्लेख्य मानिन्छन् (श्रेष्ठ, २०७७, पृ. १७८) । उक्त भीमसेन स्थानमा दैनिक पूजाउपासना भए तापनि पार्विक रूपमा जात्रा सबैमा हुँदैन । भीमसेन स्थानमध्ये भीमसेन टोलमा अवस्थित भीमसेन थानमा भाद्र कृष्ण पञ्चमी र शीतलपाटीको भीमसेन मन्दिरमा माघ शुक्ल द्वादशीका दिन जात्रा चल्दछ । भीमसेनको खटजात्राका क्रममा नगर परिक्रमा गर्दछन् ।

**बौद्ध धर्मसँग सम्बन्धित अमूर्त सांस्कृतिक सम्पदा**

पाल्पामा बौद्ध धर्मको अर्थबोध गराउनमा भिक्षु अमृतानन्द महास्थवीरको महत्वपूर्ण योगदान छ । उहाँको जन्म तानसेनको भीमसेन टोलमा वि.स. १९७५ मा भएको हो । उनी भारतको कुशीनगरमा चन्द्रमणि महास्थवीरको सम्पर्कमा पुगे । भारतमा बस्दा उनले बौद्ध धर्मको उत्थानमा महत्वपूर्ण योगदान गरे (ज्ञानमाला, २०५४,

पृ २५-२६) । पछि श्रीलङ्का र वर्मामा बुद्ध धर्मसम्बन्धी अध्ययन गरेर सन् १९४२ मा काठमाडौ फर्के । त्यसपछि आफ्नो जन्मभूमि तानसेनमा आई पाल्पाको होलङ्दी भन्ने स्थानमा एउटा बौद्ध बिहार निर्माण गरे ।

पाल्पामा बौद्ध धर्मको उत्थान गर्न र मर्दा पर्दा सहयोग पुऱ्याउन बौद्ध धर्मावलम्बीहरूले भगवान् सना गुठी, आनन्द बिहार (वि.स. १९५५), भगवान् बुद्ध रथयात्रा गुठी, महाचैत्य बिहार (वि.स. २००२), ज्ञानमाला सङ्घ, ज्ञानमाला सभा, चुडाकर्म सङ्घ (वि.स. २०११) जस्ता सङ्घसंस्थाहरू स्थापना गरेका थिए (चित्रकार, २०५७, पृ. १६-१८) । उक्त सङ्घसंस्थाहरू बौद्ध धर्मसँग सम्बन्धित बुद्ध जयन्तिलगायत बौद्ध धर्माबलम्बीहरूका संस्कारगत कर्मसँग जोडिएका अमूर्त सांस्कृतिक क्रियाकलापहरू सञ्चालन गर्दैआएका छन् ।

## ४. **निष्कर्ष**

दोस्रो विश्वयुद्धले संसारमा जनधन तथा प्राकृतिक एवम् मानव निर्मित सांस्कृतिक सम्पदाहरूमा ठूलो विनास पुऱ्याएपछि उक्त परिस्थितिबाट सम्पदाहरूको संरक्षण सम्वर्द्धन गर्ने संस्थाका रूपमा युनेस्कोको स्थापना भएको हो । यो प्राकृतिक एवम् सांस्कृतिक सम्पदाहरूको संरक्षण तथा संम्वर्द्धन गर्ने आधिकारिक संस्था हो । आफ्ना सदस्य राष्ट्रहरूमा पाइने प्राकृतिक एवम् सांस्कृतिक सम्पदाहरूको पहिचान, वर्गीकरण, संरक्षण, संम्वर्द्धन तथा सूचीकरण गर्ने कार्यलाई जोड दिने क्रममा यो संस्थाले पक्ष राष्ट्र भएको नाताले सन् १९७८ देखि नेपालका प्राकृतिक तथा सांस्कृतिक सम्पदाहरूको सर्वेक्षण, सङ्कलन, पहिचान, वर्गीकरण एवम् लगत तयार पार्ने कार्य प्रारम्भ गऱ्यो । यस क्रममा हालसम्म नेपालका दशवटा सम्पदाहरू सूचीकृत भइसकेका छन् । तर मध्यकालीन सहर पाल्पाको तानसेन भने उक्त सूचीमा पर्न सकेन । युनेस्कोले विगत केही वर्षबाट पुनः सम्पदाहरूको सर्वेक्षण, सङ्कलन, पहिचान, वर्गीकरण एवम् सूचीकृत गर्ने कार्य अगाडि बढाएको हो । यस क्रममा मध्यकालीन सहरका रूपमा पाल्पा जिल्लाको तानसेन सहर पनि प्रारम्भिक सूचीमा मनोनयन भएको छ ।

तानसेन सहरमा विशेषतः हिन्दू तथा वौद्ध धर्मसँग सम्बन्धित स्मारक, कलाकृतिका साथै अभ्यास प्रणालीमा आधारित जीवित सम्पदा पाइन्छन् । यहाँ मूलतः मूर्त तथा अमूर्त सांस्कृतिक सम्पदा पाइन्छन् । अमरनारायण मन्दिर, बालगोपाल मन्दिर, भैरव थान, भगवती मन्दिर, श्री चैत्य धर्मधातु, तानसेन टुँडिखेलको पश्चिम कुनाको ढुङ्गाको चैत्य, टक्सारटोलको महाचैत्य, पाल्पा दरबार यहाँका महत्वपूर्ण मूर्त सांस्कृतिक सम्पदा हुन् । त्यस्तै अमर नारायणको रथयात्रा, भैरवको पूजा तथा रोट अर्पण परम्परा, भगवती जात्रा, बुद्ध जयन्तिलगायत बौद्ध धर्माबलम्बीहरूका संस्कारगत कर्मादि अमूर्त सांस्कृतिक सम्पदा मानिन्छन् ।

तानसेनमा मूर्त तथा अमूर्त दुबै स्वरूपका सम्पदा पाइन्छन् । त्यसलाई तानसेन नगरको शक्ति र सार्मथ्य मान्नु एवम् ठान्नु पर्दछ । यो नै मध्यकालीन सहरका रूपमा तानसेन नगरलाई युनेस्कोको विश्वसम्पदा सूचीमा सूचीकृत गर्ने मापदण्ड तथा प्रमुख आधार हो । यथोचित रूपमा सम्पदाको संरक्षण, सम्वर्द्धन र प्रचारप्रसार गर्न सकेमा मात्र युनेस्कोको विश्वसम्पदा सूचीमा समावेश हुन पाउने अवसर मिल्दछ । अतः सबै सरोकारवालाहरूको ध्यान त्यसतर्फ जानु पर्ने देखिन्छ ।

**सन्दर्भसामग्री**

काफ्ले, अरुणकुमार (२०७५). पाल्पामा बौद्ध धर्मको प्रभाव र बौद्ध वास्तुकला. Voice of Culture. काठमाडौः संस्कृति विभाग, पद्मकन्या बहुमुखी क्याम्पस (८)ः ८९-९७ ।

काफ्ले, अरुणकुमार (२०७९).अमरनारायण मन्दिरको कला तथा वास्तुकला. Voice of Culture. काठमाडौः संस्कृति विभाग, पद्मकन्या बहुमुखी क्याम्पस (९)ः ३९-५० ।

खतिवडा, सोमप्रसाद (२०७४). *नेपाली संस्कृति विश्वकोष,* काठमाडौ : जनता प्रसारण तथा प्रकाशन ।

खनाल, मोहनप्रसाद (२०५५). *पश्चिम नेपालका मूर्ति र स्थापत्य,* कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र त्रि.वि.।

घिमिरे, विष्णुप्रसाद (२०५६). *पाल्पा राज्यको इतिहास* भाग १, चितवन : पद्मा घिमिरे ।

चित्रकार, सुलोचना (२०५७). *तानसेनका बौद्ध धर्मावलम्बी नेवारहरूको संस्कृति,* कीर्तिपुर : त्रिभुवन विश्वविद्यालय मानविकी तथा सामाजिकशास्त्र सङ्काय, डीनको कार्यालयमा प्रस्तुत शोधपत्र ।

पौड्याल, दुर्गादेवी (२०७५). पाल्पामा पर्यटन विकासको सम्भावनाः एक अध्ययन, Voice of Culture (Vol. VIII) A Peer Reviewed Journal, काठमाडौः सस्कृति विभाग,पद्मकन्या बहुमुखी क्याम्पस, पृ. ९८-१०९ ।

बानियाँ, कर्णबहादुर (२०५३). *पाल्पाको भगवती जात्रा,* तानसेन : श्रेष्ठ पुस्तक भण्डार ।

बानियाँ, कर्णबहादुर (२०५६). *तानसेनका मठ, मन्दिर, चैत्य तथा बिहारहरूको कलाकौशल र गुठी व्यवस्था,* काठमाडौ : शिक्षाध्यक्षको कार्यालय, अनुसन्धान महाशाखा, प्रस्तुत लघु शोधपत्र ।

बानियाँ, कर्णबहादुर (२०६३). *पाल्पा गौँडा एक ऐतिहासिक अध्ययन,* काठमाडौः फूलचोकी पब्लिकेसन एण्ड डिस्ट्रीब्युसन ।

भट्टराई, घटराज (२०६७).*नेपालका धार्मिक स्थलहरू (सांस्कृतिक कोश),* काठमाडौः विद्यार्थी पुस्तक भण्डार ।

रेग्मी, जगदीशचन्द्र (२०३४). *नेपालको बैधानिक परम्परा,* कीर्तिपुर : पाठ्यक्रम विकास केन्द्र ।

वज्राचार्य, अमृत (२०४५). पाल्पा तानसेनमा बुद्ध धर्मको सूत्रपात, *उपसंहनायक भिक्षु शाक्यनन्द महास्तभिर अभिनन्दन समारोह स्मारिका :* पाल्पा : ज्ञानमाला संघ ।

शर्मा, डिल्लीराज, (२०६०). *गण्डकी प्रस्रवण क्षेत्रको सांस्कृतिक सम्पदा; कला र वास्तुकला,* काठमाडौ, ने.ए.अ.के.त्रि.वि. ।

शाक्य, छत्रराज (२०४४). पाल्पामा बुद्ध धर्म, *सत्य,* तानसेन : वर्ष ७, अङ्क ३४ ।

शाक्य, छत्रराज (२०४८). पाल्पाका बौद्ध गतिविधिमा भिक्षु अमृतानन्द, *महाबोधी,* वर्ष २, अङ्क २ ।

*श्रेष्ठ, कल्पना (२०७७). काठमाडौँ उपत्यकाको सांस्कृतिक परम्परा.* काठमाडौ : पल्लव प्रकाशन प्रालि ।

श्रेष्ठ, निर्मल (२०७५). *सेनकालीन इतिहास, कला र संस्कृति,* पाल्पा : केशलक्ष्मी श्रेष्ठ ।

श्रेष्ठ, निर्मल (२०७७). *सांस्कृतिक नगर तानसेन.* तानसेन पाल्पा : केशलक्ष्मी श्रेष्ठ

ज्ञानमाला संघ, (२०५४). *ज्ञानमाला संघ आनन्द बिहारको स्वर्ण शुभ जन्मोत्सव स्मारिका.* पाल्पाः ज्ञानमाला संघ ।

Oldfield, H.A. (1974). Sketches from Nepal. Delhi : Cosmo Publications.

Sharma. D.R. (1987). The Rishikeshavara of Ridi, Rolamba. 7 (4): 8-13.

✦✦✦

# खोकना : सम्भावित सांस्कृतिक विश्व सम्पदा



✍ काजी प्याकुरेल*

## १. विषय प्रवेश

नेपाल मूर्त र अमूर्त संस्कृतिको संगम भूमि हो । हाम्रा पूर्खाहरूले सिर्जना गरेका सांस्कृतिक सम्पदाहरू मूलुकका विभिन्न भागमा फैलिएर रहेका छन् । यी विश्वव्यापी महत्व भएका जिवित सम्पदाहरूको दिगो जगेर्ना गरी भावी पूस्तालाई हस्तान्तरण गर्नु हामी सबैको कर्तव्य हो । इतिहासको विभिन्न कालखण्डमा निर्माण भएका मठ, मन्दिर, देवालय, चैत्य, विहार, मस्जिद, दरवार लगायत अन्य सम्पदाहरू राष्ट्रिय गौरवका धरोहरहरू हुन् । यी सम्पदाहरू ऐतिहासिक, सांस्कृतिक, धार्मिक र पुरातात्विक दृष्टिकोणले ज्यादै महत्वपूर्ण रहेका छन् । नेपाल सांस्कृतिक विविधता र एकता भएको धरातल हो । मूर्त एवं अमूर्त संस्कृतिहरूले नेपाललाई समृद्ध बनाएको छ । हाम्रो सांस्कृतिक विविधता र एकताले विश्वमान चित्रमा विशिष्टताको रुपमा परिचित गराएको छ । प्राचीनकालदेखि नै हाम्रो समाजले विभिन्न मूल्य-मान्यता, रितिरिवाज, परम्परा, संस्कार, कला, दर्शन, धर्म आदि विकास गरी परिष्कृत संस्कृतिको रुपमा स्थापना भएको छ । यसर्थ नेपाली संस्कृतिलाई बहुलबादी दृष्टिकोणले बुझ्न र व्याख्या विश्लेषण गर्न सकिन्छ । नेपालका मूर्त सांस्कृतिक धरोहरहरू पनि अमूर्त र मूर्त संस्कृतिको समन्वयात्मक रुप हुन् । यिनै सम्पदाहरूले भाइचारा, समझदारी, एकता, शान्ति र सहिष्णुता कायम गर्नका लागि प्रेरणा दिएका छन् ।

ऐतिहासिक, पुरातात्विक र सांस्कृतिक सम्पदाहरूको अद्वितीय महत्व रहेका हुन्छ । मौलिक बिशेषता भएका सांस्कृतिक सम्पदाहरूले कुनै पनि राष्ट्र वा भूगोलको पहिचान गराउन महत्वपूर्ण भूमिका खेलेको हुन्छ । नेपालमा

---

* संग्रहालय अधिकृत, राष्ट्रिय संग्रहालय छाउनी

पनि प्रागऐतिहासिक काल र इतिहासका बिभिन्न कालखण्डमा हाम्रा पुर्खाले सिर्जना गरेका सांस्कृतिक सम्पदाहरू रहेका छन् । बिबिधताले भरिपूर्ण रहेका यस्ता सम्पदाहरूमध्ये प्रागऐतिहासिक समयमा निर्माण गरेका ढुंगेऔजारहरू, आद्यइतिहासिक समयका माटाका भाँडाकुडाहरू देशका बिभिन्न भू-भागहरूबाट प्राप्त भएका छन् । नेपालको इतिहासमा काठमाडौ उपत्यकामा प्रारम्भिक समयमा बनेका मूर्तिहरू लिच्छवी समयमा बनेका मूर्ति तथा अभिलेखहरू, र प्राप्त बस्तु अवशेषहरू हाम्रा सम्पदाका ऐतिहासिक धरोहरहरू हुन् । मध्यकालमा बिशेषगरी मल्ल राजाहरूले बनाएका सम्पदाका बिबिध स्वरुपहरू जस्तै मन्दिर, दरवार, मूर्ति, स्तुप, बिहार, किल्ला, अभिलेख, ग्रन्थ, चित्र, ढुंगेधारा, चोक, डवली, पाटी, परपम्परागत बस्ती र  आदि हाम्रा सम्पदाका मौलिक आयामहरू हुन् ।

## २. **खोकनाको ऐतिहासिक पृष्ठभूमि**

शहर स्थापनाको सुरुवातदेखि हालसम्म पनि अस्तित्वमा रहँदै आएका विश्वमा थुप्रै प्राचीन शहरहरू छन् । लामो इतिहास भएका काशी, उज्जैन, मथुरा आदि भारतका शहरहरू प्राचीन समयमा स्थापना भई हालसम्म जिवित रहेका मध्येका उदाहरण हुन् । काठमाँडौ उपत्यका पनि करिव इस्विको सुरुवात देखि नै सुरुवात भई लिच्छवीकालमा सभ्यताको चरमोर्त्कषमा पुगेको, त्यसपछि केही कालखण्ड आफ्रेलमा परेको बाहेक निरन्तर अस्तित्वमा रही आएको छ। मध्यकालमा काठमाडौ उपत्यका र वरिपरि अन्य थुप्रै स-साना शहर तथा वस्तीहरू स्थापना भई हालसम्म अस्तित्वमा रहेका छन्। काठमाडौ उपत्यकाको मध्यकालीन बृहत पाटन शहरको दक्षिण भागमा अवस्थित खोकना पनि एक मध्यकालीन परम्परागत बस्ती भएको सुन्दर शहर हो ।

## २.१ **खोकनाको परिचय**

संघीय गणतान्त्रिक नेपालको बाग्मती प्रदेशको ललितपुर जिल्लाको साविक खोकना गा.बि.स. हाल ललितपुर महानगरपालिका वडा न २१ मा अवस्थित खोकना काठमाडौं उपत्यकादेखि दक्षिण दिशामा पाटन शहरदेखि करिव ७ किलोमिटर टाढा रहेको छ। प्राचीन सहर खोकना समुद्र सतहदेखि १३६८ मिटरको उचाइमा अवस्थित छ। यो बस्ती २७° ३८' ११.८" उत्तरी अक्षांश र ८५° १८' १५.४" पूर्वी देशान्तरमा रहेको छ। २०६८ सालको जनगणना अनुसार खोकनामा ४९२७ जनसंख्या र १०५६ निजी घरहरू रहेका छन् । मध्यकालीन परम्परागत सानो शहर एवं वस्तीको रुपमा खोकना सांस्कृतिक, पुरातात्विक, ऐतिहासिक, धार्मिक र जातिय महत्वको सानो परम्परागत बस्ती हो । प्राचीनकालदेखि नै तेल उत्पादनमा अत्यन्तै प्रख्यात रहेको खोकना गाउँ नेपालको एउटा यस्तो पहिलो गाउँ पनि हो, जहाँ वि. स. १९६८ मा तत्कालीन राणा प्रधानमन्त्री चन्द्रशम्शेरले बिजुली बत्ती बालेका थिए (पुरातत्व बिभाग,

२०७७) । यो परम्परागत खोकना बस्ती पूर्व-उत्तरमा भैँसेपाटी र बुङमती र दक्षिण-पश्चिममा वागमती नदी र बिसाल खेती योग्य फाँट रहेको छ । मध्यकालिन यो शहरमा नेवार मूलका महर्जन लगायत बिभिन्न उपजातीहरू परम्परागत रुपमा परस्पर सहिष्णुता कायम गरी वसोवास गर्दै आएका छन् ।

## २.२ खोकनाको इतिहास

काठमाडौं उपत्यकाका विभिन्न स्थानहरूमा लिच्छवीकालीन समयदेखि नै बस्तीहरूको विकास भएको पाइन्छ । खोकनासँगै जोडिएको प्राचीन सम्पदा स्थल बुङमतीमा बि.स. ५०६ मा लिच्छवी राजा अशुवर्माले अभिलेख राखी तत्कालीन समयको कृषि व्यावस्थालगायतका विभिन्न पक्षहरूको उजागर गरिएको पाइन्छ । खोकनाको तल्लो फाँटमा केही बर्ष अगाडि स्थानीयहरूले खन्दा इनार र इट्टा बिछ्याइएको संरचनाहरू प्राप्त भएको थियो जसले लिच्छवीकालीन वस्तीलाई नै संकेत गर्दछ । यहाँका स्थानीय वासिन्दा तथा वडाध्यक्ष रविन्द्र महर्जनको भनाइ अनुसार पनि हालको खोकना भन्दाको पुरानो स्वरुपको वस्ती यही स्थानमा थियो र कालक्रममा कुनै बपत वा अन्य कारणले हालको खोकनामा वस्ती सरेको हो भन्ने जनबिश्वास रही आएको छ । उक्त पुरानो खोकनामा हालसम्म पनि स्तुप, इनार र सिकाली मन्दिर जाने ढुंगाा बिछ्याइएको सिकाली मन्दिर जाने वाटो देख्न सकिन्छ । खोकनाको नामकरण 'खोना' शब्दबाट सुरुवात भएको हो जसको अर्थ रुँदै कराउने (telling while weeping) सँग सम्बन्धित छ । जनबिश्वास अनुसार पचली भैरवका महर्जन थरका पुजारी ज्वरो आई मृत्यु भयो । उनलाई जलाउन बाग्मती नदीमा लगेको बेला आँधिबेहेरीले जलाउन अवरोध भएपछि उनको श्रीमति कराउदै रुदै फर्किने क्रममा उनलाई घरमा फर्कन नदिएपछि यही स्थानमा वस्न सिकाली देवीले आशीर्वाद दिई खोकनाको वस्ती सुरुवात भएको भन्ने भनाइ रहेको छ (CLPIU, 2019) । खोकना र यहाँका बासिन्दाको मुख्य धार्मिक आस्थाको केन्द्र रुद्रायणी मन्दिर निर्माणसँगै मौलिक स्वरुपको खोकना शहरको सन् १५१२ मा अमर मल्लले स्थापना गरेका थिए (Pruscha, C. et.al. 2015) । काठमाडौँ उपत्यकामा अवस्थित विभिन्न परम्परागत बस्तीहरूमध्ये खोकना एक प्राचीन नेवारी समुदायका वासिन्दाहरू वस्दै आएको जिवित बस्ती मानिन्छ ।

## ३. सम्भावित विश्व सम्पदा क्षेत्र

सन् १९७२ मा युनेस्कोले कुनै पनि सांस्कृतिक र प्राकृतिक सम्पदाहरूहरूलाई विश्वसम्पदामा सूचिकृत गर्ने कानुनी व्यावस्थाको रुपमा अभिसन्धी जारी गरेपछि नेपालले पनि उक्त अभिसन्धीलाई सन् १९७८ मा अनुमोदन गऱ्यो । मौलिक पहिचान र ऐतिहासिक महत्व भएका हाम्रा स्मारकहरूलाई विश्वसम्पदा प्रणालीमा समावेस गर्ने उद्देश्य अनुसार काठमाडौं उपत्यकामा रहेका ऐतिहासिक एवं

सांस्कृतिक महत्व भएका क्षेत्रहरूलाई संरक्षित स्मारक क्षेत्रको रुपमा व्यवस्थापन गऱ्यो । हनुमानढोका दरवार, पाटन दरवार, भक्तपर दरवार, स्वयम्भूनाथ स्तुप, बौद्धनाथ स्तुप, पशुपतिनाथ मन्दिर  र चाँगुनारायण मन्दिर जस्ता स्मारकहरूका आधारभूत दस्तावेजहरू तयार गरी नेपाल सरकारले युनेस्कोमा अनुमोदनको प्रस्ताव गरेको थियो । अभिसन्धी अनोमोदन गरेको एकबर्ष पछाडि नै उल्लेखित स्मारक क्षेत्रहरूलाई  सामूहिक रुपमा 'काठमाडौं उपत्यका विश्वसम्पदा' क्षेत्रको रुपमा सन् १९७९ मा सूचिकृत गऱ्यो । As explained in the nomination form, seven outstanding monuments and groups of building scattered through the valley were seen together, 'the Kathmandu Valley' (Amatya, 2007)। सम्पदाको महत्व र आकर्षणलाई ध्यानमा राखी केही बर्ष पछाडि नै देशका महत्वपूर्ण दुई प्राकृतिक सम्पदाहरू क्रमशः चितवन राष्ट्रिय निकुन्ज र सगरमाथा राष्ट्रिय निकुन्जलाई पनि विश्वसम्पदा सूचिमा सूचिकृत गऱ्यो । विश्वसम्पदा सूचिमा सूचिकृत गर्ने क्रमलाई जारी राख्दै भगवान बुद्धको जन्मस्थलमा प्राप्त पुरातात्विक सम्पदाहरूलाई विश्वव्यापी अद्वितीय मूल्यमान्यताको मानेर 'लुम्बिनी विश्वसम्पदा' को रुपमा देशकै दोश्रो सांस्कृतिक विश्व सम्पदा सन् १९९७ मा सूचिकृत भयो ।

**नेपालमा हालसम्म भएका दुईवटा सास्कृतिक सम्पदाहरू काठमाडौँ उपत्यका विश्वसम्पदा र लुम्विनी**

विश्वसम्पदा क्षेत्र वाहेक सन १९९६ मा र सन् २००८ मा विश्वसम्पदाको संभावित सूचीमा समावेस गरिएका सास्कृतिक सम्पदा तथा स्मारकहरूलाई पनि विश्वसम्पदा सूचीमा सूचीकृत हुन आवश्यक छ। सम्पदाहरूको संरक्षण गर्ने उद्देश्यले विश्वसम्पदा प्रणालीमा समावेसगरी सम्पदाहरूको व्यवस्था गर्ने उपकरणको रुपमा विश्वसम्पदा सूचीकृत गरिन्छ । यस क्षेत्रमा रहेका महत्वपूर्ण विशेषता तथा लक्षणहरूलाई ध्यानमा राखी एतिहासिक एंव पुरातात्विक महत्व भएका सांस्कृतिक सम्पदा स्थलहरूलाई युनेस्केको समन्वयमा नेपाल सरकार पुरातत्व विभागबाट संम्भावित सूचीमा सूचिकरण गरिएको हो ।

## ३.१ परम्परागत तोरीको तेलको औद्योगिक शहर

मौलिक सस्कृतिको धनि खोकना वस्ती नेवारी संस्कृति र सभ्यताको सर्वोष्कृत नमूना हो । यहाँ रुद्रायणी मन्दिरलगायत यस क्षेत्रमा अन्य थुप्रै संरचाहरू भए पनि यहाँको परम्परागत रुपमा प्रचलनमा रहेको तोरीको तेल बनाउने कोल ज्यादै नै महत्वपूर्ण रहेकोछ। काठमाडौँ उपत्यकामा मध्यकालमा यसै सम्पदा वस्तीहरू विकास भएका थिए। आ-आफ्नो विशेषता भएका वस्तिहरूमध्ये खोकनामा परम्परागत मालिक पेशाको रुपमा तोरीको तेल पेल्ने प्रचलन विकास भएको थियो । सम्भवत यस क्षेत्रमा प्रयाप्त मात्रामा ठूलो फाँट भएका खेतहरू

वरिपरि हालसम्म पनि विश्वमान छन् । वागमती नदीले सञ्चित फाँटमा प्रयाप्त मात्राका तोरीको उत्पादन हुने र उक्त तोरीलाई स्थानीय प्रविधिको पेल्ने कोल बनाएर तेल उत्पादन गर्ने परम्परा हालसम्म कायम छ। प्रभावकारी रुपमा केही उच्च स्थानमा रहेको र वरिपरि खुल्ला खेतीयोग्य जमिन रहेको छ। यही खेतीयोग्य जमिनमा नै सुरुवातदेखि नै तोरी उत्पादन गरिन्थ्यो । तोरी उत्पादनमा र तेल प्रसोधन गर्ने मौलिक सिप यहाँका बासिन्दाहरूको परम्परागत पेशा हो । यही पेशालाई उनीहरूले व्यवसायिकरण गरी काठमाडौँ उपत्यका अन्य शहरसम्म निर्यात गर्ने गर्दथे । यसर्थ, तोरीको तेल उत्पादन गर्ने व्यवसाय यहाँका वासिन्दाहरूको आर्थिक उपार्जनको श्रोत थियो । परम्परागत रुपमा सञ्चालन भैरहेको तोरीको तेल मिल भवन नै वास्तवमा यहाँको महत्वपुर्ण स्मारक पनि हो । खोकना वस्तीको मुख्य सडक को केन्द्रमा स्थापना गरी सुरुवात भएको र तोरी कोलले निरन्तरता पाइरहेको अवस्थामा थियो । तोरीको तेल उत्पादन गर्ने परम्परा सीप प्रविधि सामग्री र परम्परागत शैलीको घरलाई नै सम्पदाको मुख्य अँâतीय विश्वव्यापी मूल्यमान्यता (outstanding universal value) ठानेर युनेस्कोमा संम्भावित सूचिमा समावेस गरिएको हो । हाल विनासकारी भुकम्प २०७२ ले यस कोलघरलाई क्षति पुऱ्याएपछि यस भवनको युनेस्को काठमाडौँ कार्यालयबाट संरक्षण कार्य सम्पन्न भएको छ। यहाँको मौलिक परम्परालाई निरन्तरता प्रदान गर्ने उद्देश्यले यहाँका वासिन्दाले हाल पनि सहकारीमार्फत तोरी को अन्य केही तेल मिलहरू (कोल) सञ्चालन गरी आफ्नो मौलिक परम्परागत पेशालाई जर्गेना गर्ने प्रयास गरिएको छ ।

## ३.२ अद्वितीय कला र वास्तुकला

काठमाडौं उपत्यकामा करिव इस्वीको प्रारम्भदेखि नै मानव सम्भयताको सुरुवात भैसकेको सन्दर्भमा पुरातात्विक प्रमाणहरूले पुष्टि गरिसकेका छन् । केही कलाविदहरूले नेपालका प्रारम्भिक समयका केही मूर्तिहरूलाई किराँतकालिन समयका भनेर पनि दावी गरेका छन् । इस्वीको तेश्रो शताब्दी अथवा लिच्छवीवंशको शासनदेखि तिथीमितिसहितका र पाँचौ शताब्दीदेखिका दरवार एवं मन्दिरहरू बनेका उल्लेखहरू अभिलेखहरूमा पाइन्छ । मध्यकालीन नेपाल बिशेषगरी मल्लशासनकालमा नेपालको इतिहाससममा संस्कृति र सभ्यता चरमोत्कर्षमा विकास भएको पाइन्छ । मध्यकालिन काठमाडौं उपत्यकामा कला, वास्तुकला र परम्परागत वस्तीको व्यापकरुपमा विकास भएको पाइन्छ । यहाँका तीनवटा सहरमा दरवारसहितका कला एवं वास्तुकलाका कलात्मक नमूनाहरू मल्ल राजाहरूले निर्माण गरे । उपत्यकाभित्रैका अन्य स्थानहरूमा पनि परम्परागत सम्पदा वस्तीहरू विकास भई मौलिक शैलीका कला र वास्तुकलाका नमूनाहरू सिर्जना भएका थिए ।

परम्परागत सम्पदा वस्तीको रुपमा प्रसिद्ध खोकनामा पनि बिभिन्न किसिमका कला र वास्तुकलाका  नमूनाहरू बिकास भएको पाइन्छ । खोकनाको सांस्कृतिक भू-दृश्यको रुपमा रहेको हालको वस्ती पूर्वको पुरानो खोकना भनिएको केही तलको फाँटमा लिच्छवीकालीन समयको संकेत गर्ने केही कला र वास्तुकलाका नमूनाहरू पाइएका छन् ।  खोकनाको प्रसिद्ध रुद्रायणी मन्दिर निर्माणसँगै मौलिक स्वरुपको खोकना शहरको सन् १५१२ मा अमर मल्लले स्थापना गरेका थिए (Pruscha, C. et.al. 2015)। यो मन्दिरल यहाँका वासिन्दाहरूको मुख्य आस्था र सदभावको केन्द्रको रुपमा समाहित गर्न महत्वपूर्ण भूमिका खेलेको छ । देख्दा यो मन्दिर तीनतलाको देखिएता पनि आन्तरिकरुपमा पाँचतला भएको भब्य र कलात्मक मन्दिरको रुपमा रहेको छ । धार्मिक कला र वास्तुकलाजन्य सम्पदाहरूमा शैवधर्म, वैष्णवधर्म, शाक्त धर्म, गाणपत्य र बौद्धधर्म सम्बद्ध कलाकृतिहरू यस सहरको सबै टोल, ढुंगेधारा, साँघुरा गल्लीहरू, खुला स्थल, चोक, मठमन्दिर, चैत्य, विहारलगायतका स्थानहरूमा देख्न सकिन्छ ।  त्यस्तै गरी सहरको विभिन्न चोक, खुलास्थलहरूमा शैवधर्म, वैष्णवधर्म, शाक्त धर्म, गाणपत्य सम्प्रदाय र बौद्धधर्म सम्बद्ध वास्तुकलाका नमूनाहरू यत्रतत्र छरिएर रहेको देख्न सकिन्छ। यस्ता धार्मिक वास्तुकलाका उत्कृष्ट नमूनाहरूमध्ये इन्द्रायणी मन्दिर, श्रीकाली मन्दिर, लुकमहादेव मन्दिर, नारायण मन्दिर, चैत्यहरू, गणेश मन्दिर, सिँह, राधाकृष्ण मन्दिर, रुद्रेश्वर महादेव, चैत्य, गन्धकुटी विहार प्रमुख छन् ।  खोकना गाउँमा धार्मिक कला र वास्तुकलाका नमूनाहरूका अतिरिक्त लौकिक वा सार्वजनिक कला र वास्तुकलाका नमूनाहरू पनि सहरको विभिन्न चोक, साँघुरा गल्ली र चोकहरूमा छरिएर रहेको देख्न सकिन्छ। यहाँ अवस्थित महत्वपूर्ण र उत्कृष्ट लौकिक वास्तुकलाका नमूनाहरूमा ढुंगेधारा, पाटीपौवा, धर्मशाला, मण्डली, इनार, परम्परागत नेवारी घरहरू पर्दछन् (पुरातत्व बिभाग, २०७७) । यस प्राचीन सहर काष्ठकला र मूर्तिकलाको लागि पनि प्रसिद्ध रहेको छ ।

## ३.३ विश्व सम्पदाको लागि आधारभूत लक्षणहरू

सम्भावित विश्व सम्पदा सूचीमा समावेस गर्नको लागि खास किसिमका बिशेषता र सम्पदाका लागि चाहिने आधारभूत लक्षण हुनु अत्यावश्यक छ। मौलिक किसिमका बिशेषता, तिनीहरूको संरक्षण र व्यवस्थापन पक्षलाई मूल्यांकनको आधारमा विश्व सम्पदा सूचीमा युनेस्कोले समावेस गर्दछ। यर्सथ, संम्भावित सूचीमा समावेस गर्दाको समयमा पहिचान भई अध्ययन गरिएका दस्तावेजहरू र अभिलेखिकरण भएका दस्तावेजहरू ज्यादै नै महत्वपूर्ण सामग्रीहरू हुन् । सामान्यतया विश्व सम्पदा महासन्धीको पक्ष राष्ट्र भैसकेपछि त्यस्ता राष्ट्रहरूले महत्वपूर्ण सांस्कृतिक तथा प्राकृतिक सम्पदाहरूको पहिचान गरी तीनको समुचित

संरक्षण एवं व्यावस्थापन गर्नै पर्दछ र सोको शिलशिलामा सम्बन्धित सरोकारवाला वा स्थानीयवासी, समुदायलाई संलग्न गराई तिनको राय सुझाव एवं सहमति अनुसार व्यवस्थापन एवं संरक्षण कार्य गर्नुपर्दछ (श्रेष्ठ, २०७७) ।

खोकना विश्वसम्पदाको संम्भावित सूचीमा समावेस गर्दाको वखतमा उल्लेख गरिएको यहाँको परम्परागत पेशाको रुपमा पुस्तान्तरण हुँदै आइरहेको स्थानीय स्तरमा उत्पादन हुने तोरीको तेल पेल्ने मौलिक शैलीका कोल (मील) लाई आधारभूत लक्षण तथा बिशेषता मानिएको छ। साथै यस सम्पदा स्थललाई सम्भावित विश्वसम्पदा वा विश्वसम्पदामा मनोनयन गर्नको लागि यहाँको सांस्कृतिक भू-दृश्य, सम्पदा वस्ती, परम्परागत घरहरू, कला र वास्तुकलाका अद्वितीय नमूनाहरू, धार्मिक मूल्यमान्यता, संस्कार, परम्परा, रितीरिवाज जस्ता सम्पूर्ण मूर्त एवं अमूर्त सांस्कृतिक सम्पदाहरू नै पुरक एवं सहायक लक्षण तथा बिशेषताहरू हुन सक्छन् ।

## ४. निष्कर्ष एवं सुझाब

सांस्कृतिक, पुरातात्विक, ऐतिहासिक, धार्मिक र पर्यटकीय दृष्टिकोणले महत्वपूर्ण रहेको खोकना क्षेत्र मूर्त र अमूर्त सांस्कृतिक सम्पदाहरूको लागि प्रसिद्ध रहेको छ। यो मध्यकालीन सहर हिन्दु र बौद्ध विश्वासको संगम स्थल हुनुको साथै धार्मिक र लौकिक कलाकृतिहरूले भरिपूर्ण छ। ऐतिहासिक खोकना शहरमा परम्परागत बस्ती मौलिक शैलीको तोरीको तेल बनाउने कोल (मिल) र मौलिक ज्ञान, सीप र प्रविधिका लागि विशिष्ट बिषेशताले ओतप्रोत छ। अद्वितीय मौलिक र परम्परागत औद्योगिक सम्पदा केन्द्रका रुपमा राष्ट्रिय र अन्तर्राष्ट्रिय स्तरमा प्रसिद्ध छ।  काष्ठकलाको परम्परागत शिप र प्रबिधिको लागि खोकना शहर जिवित सम्पदा स्थल मानिन्छ। कला र वास्तुकलाका असंख्य नमूनाहरू, सुन्दर र मनमोहक उर्वर खेतीयोग्य फाँट, प्राचीन स्मारक, साँगुरा गल्ली र खुला चोकहरू, ढुंगेधारा, मण्डली, हिन्दू र बौद्ध कलासम्बद्ध अमूल्य कलाकृतिहरूको संयोजन रहेको यस सहरमा अवस्थित मध्यकालमा निर्मित रुद्रायणी मन्दिर, सिकाली मन्दिर, चैत्यहरू, अनेकन पोखरीलगायतका सम्पदाहरू ज्यादै उल्लेख्य मानिन्छन् (पुरातत्व विभाग, २०७७)। यस मध्यकालीन शहरमा रहेका यावत किसिमका विविधताले भरिपूर्ण भएका सांस्कृतिक सम्पदाहरूको मौलिक रुपमा संरक्षण एवं व्यावस्थापन हुनको लागि तल उल्लेखित सुझावहरू महत्वपूर्ण संम्भावित विश्वसम्पदाको मनोनयन गर्ने आधार हुन सक्नेछन् :

(१) यस मध्यकालीन शहरको मौलक स्वरुपमा नै सम्पदा, संस्कृति र सभ्यताको संरक्षण ।

(२) बढदो शहरीकरण र आधुनिकीकरणको प्रभावलाई न्यूनीकरण ।

(३) निजी घर र परम्परागत वस्तीको यथास्थिति र मौलिक स्वरुपमा जर्गेना ।

(४) मठ, मन्दिर, सत्तल, स्तुप, पोखरी, गल्ली, चोक, पाटी, मिलघर आदि जस्ता स्मारकहरूको मौलिक शैली, स्वरुप र आकारमा परम्परागत निर्माणा सामग्रीहरू प्रयोग गरी संरक्षण र पुनर्निर्माण ।

(५) परम्परादेखि संञ्चालनमा रहेका जात्रा, पर्व, संस्कार, नाच आदिको संरक्षण,

(६) मौलिक र परम्परागतरुपमा प्रयोग हुने घरायासी सामग्रीहरू, दैनिक जीवनसँग सम्बन्धित सामग्रीहरू, खानपान परिकारहरू, गरगहना र भेषभूषाहरूको संरक्षण ।

(७) हाल सक्रिय रुपमा संञ्चालन हुन नसकेको संग्रहालयलाई अझ व्यवस्थित, समयसापेक्ष प्रबिधि मैत्री बनाई जिवित सम्पदाको रुपमा सञ्चालन ।

(८) यस स्थलको बारेमा स्थानीय वासिन्दा तथा सरोकारवालाहरूलाई सम्पदा, संम्भावित विश्व सम्पदा र विश्व सम्पदाको महत्व र उपदेयता बारेमा चेतना, शिक्षा, तालिम र प्रशिक्षण कार्यक्रम ।

नेपाल सरकारबाट विश्व सम्पदाको संम्भावित सूचीको लागि मनोनयन गरेको यस लामो अवधि (२५ बर्षभन्दा बढी) पूरा भैसकेको यर्थार्थपूर्ण अवस्थामा पक्ष राष्ट्रबाट गर्नुपर्ने थुप्रै कामहरू छन् । सम्भावित सूचीमा मनोनयन भैसकेपछि एक वर्ष पछाडि नै यो स्थल विश्वसम्पदाको लागि सक्षम भए पनि आन्तरिक रुपमा गरिनुपर्ने गृहकार्य घनिभूत रुपमा हुनु आवश्यक छ । समन्वयात्मक रुपमा सम्पूर्ण सरोकारवाला निकायहरूसँग छलफल र अन्तर्क्रिया हुनु आवश्यक छ । परम्परागत सम्पदा बस्तीको कलाकारिता, संवेदनशीलता र प्रामाणिकता, ऐतिहासिकता, मौलिकता आदिलाई अक्षुण्ण राखी बर्तमान पुस्ताले न्यायोचित र सन्तुलित उपयोग र भावी सन्ततिसमक्ष हस्तान्तरण गर्नु सरोकारवाला सबैको दायित्व हो ।

**छाँयाचित्र तथा नक्साहरू**



खोकनाको नक्सा



खोकनाका परम्परागत शैलीका घरहरू



खोकनास्थित प्रसिद्ध रुद्रायणी मन्दिर



खोकनास्थित प्रसिद्ध रुद्रायणी मन्दिर

**References**

Amatya, S. (2007). Monument conservation in Nepal: My experience with the world heritage sites of Kathmandu valley. Vajra Publication.

CLPIU. (2019). Final report: Reconstruction program of heritage settlement of Khokana of Lalitpur district. Central Level Project Implementation Unit (Building).

Government of Nepal. (1996). Khokana, the vernacular village and its mustard-oil seed industrial heritage. Department of Archaeology of the Ministry of Youth, Sports and Culture of the Government of Nepal, https://whc.unesco.org/en/tentativelists/844/

Pruscha, C. et.al. (2015). Kathmandu valley: The preservation of physical environment and cultural heritage, a protective inventory (2nd Eds). Vajra Publication.

Slusser, M. S. (2015). Nepal mandala: A cultural study of Kathmandu valley. Princeton University Press.

UNESCO et.al. (2021). Operational Guidelines for the Implementation of the World Heritage Convention. UNESCO World Heritage Centre, Paris France. https://whc.unesco.org/en/guidelines/

UNESCO et.al. (2011). Preparing World Heritage Nominations: World heritage resource manual. (2nd Eds). UNESCO. https://whc.unesco.

org/en/preparing-world-heritage-nominations/

पुरातत्व बिभाग, (२०७७), विश्व सम्पदाको संम्भावित सूचीमा रहेका पन्ध्रवटा स्थलहरूमध्ये पाँचवटा सम्पदा स्थलहरूको भौतिक अवस्थाको अपडेट गर्ने खोकनाको प्रतिवेदन ।

बज्राचार्य, धनबज्र (२०५६), मध्यकालका अभिलेख, नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय कीर्तिपुर ।

श्रेष्ठ, सुरेस सरेस (२०७७), सम्पदा विश्व सम्पदा सूची : सूचीकरणको लागि मनोनयन तयारी, युनेस्कोका निमित्त नेपाल राष्ट्रिय आयोगको सचिवालय ।

श्रेष्ठ, सुरेस सुरेस (२०७७), विश्व सम्पदा सूचीमा सूचीकृत नेपालका सांस्कृतिक सम्पदा र संरक्षणको चुनौतीहरू, *नेपाल बर्ष ५० अङ्क ५ पूर्णाङ्क २३२,* सूचना तथा प्रसारण बिभाग ।

✦✦✦

# वज्रयोगिनी मन्दिर तथा साँखु प्रारम्भिक बस्तीको ऐतिहासिक एवं सांस्कृतिक महत्व



✍ भीष्म बाँस्कोटा*

**लेखसार :**

काठमाडौँदेखि उत्तरपूर्वमा अवस्थित साँखु एक ऐतिहासिक, धार्मिक, सांस्कृतिक एवं पुरातात्विक महत्वको परम्परागत बस्ती हो । यो सहरको व्यवस्थित किल्लाबन्दीले मध्यकालीन योजनावद्ध बस्तीको इतिहासलाई उजागर गरेको छ । ऐतिहासिक महत्वको यो स्थल भौतिक र अभौतिक सम्पदाले भरिपूर्ण एक प्राचीन नेवारी बस्ती हो । यस क्षेत्रको ऐतिहासिक एवं सांस्कृतिक अध्ययन विगतमा विभिन्न स्वदेशी तथा विदेशी विद्वानूहरूबाट भएको पाइए तापनि संयुक्त राष्ट्र शैक्षिक, वैज्ञानिक तथा सांस्कृतिक सङ्गठन (यूनेस्को) द्वारा संभावित विश्वसम्पदा सूचीमा सूचीकृत वज्रयोगिनी मन्दिर र साँखुको प्रारम्भिक बस्तीको बारेमा स्थलगत अवलोकन एवं विगतका अध्ययनहरूको विस्तृत खोज एवं विश्लेषण गरी अध्यावधिक रुपमा थप तथ्यहरू उजागर गर्नु यस लेखको मूल उद्देश्य हो । यस अध्ययनले वज्रयोगिनी मन्दिर र साँखुको प्रारम्भिक बस्तीको ऐतिहासिकता, धार्मिक, सांस्कृतिक, कला र वास्तुकला एवं पुरातात्विक महत्वका बारेमा सम्बद्ध सरोकारवाला निकाय, विद्यार्थी, संस्कृतिप्रेमी, कलाविद्, अनुसन्धानकर्तालगायत सबैलाई लाभ पुग्ने अपेक्षा गरिएको छ ।

**शब्द कुञ्जीका** : वज्रयोगिनी र साँखु प्रारम्भिक बस्ती, शङ्खरापुर, मध्यकालीन योजनावद्ध बस्ती, धार्मिक महत्व, सांस्कृतिक महत्व, पुरातात्विक महत्व, कला र वास्तुकला, संभावित विश्वसम्पदा सूची ।

* पुरातत्व अधिकृत, पुरातत्व विभाग

## सामान्य परिचय

नेपालको राजधानी काठमाडौँदेखि उत्तरपूर्व करिव १८ किलोमिटरको दुरीमा अवस्थित साँखु एक ऐतिहासिक, धार्मिक, सांस्कृतिक एवं पुरातात्विक महत्वको स्थल हो । मणिचुड पर्वतको फेदी शिवपुरी पर्वत श्रृखलामा पर्ने साँखु एक प्राचीन नेवारी बस्ती हो । यो सहरको व्यवस्थित किल्लाबन्दीले मध्यकालीन योजनावद्ध बस्तीको इतिहासलाई उजागर गरेको छ। काठमाडौँ उपत्यकाका प्राचीनतम महत्व बोकेका परम्परागत बस्तीहरूमध्ये शङ्खाकार रुपमा स्थापना भई विकसित भएको यो नेवारी बस्तीको छुट्टै ऐतिहासिक, सांस्कृतिक, धार्मिक, कला, वास्तुकला एवं पुरातात्विक महत्व छ ।

भौगोलिक दृष्टिकोणले ज्यादै सुन्दर भूपरिदृष्य रहेको साँखु बस्तीलाई वरिपरिबाट ठूल्ठूला हरियाली पहाडहरूले घेरेको छ । पूर्वमा साली नदी र पश्चिममा मनमती नदीको बीचमा अवस्थित यो बस्तीको पश्चिमतर्फ खेतीयोग्य समथर फाँट छ । चारैतिर वनदुर्गका रुपमा रहेको साँखु सहरको भित्र चारैतिर प्रवेशद्वारका रुपमा किल्लाबन्दीले घेरी मजवुद तुल्याइएको छ । आयातकार रुपमा रहेको यो नेवारी बस्ती झण्डै पूर्वदेखि पश्चिमतर्फ १५० मिटर र उत्तरदेखि दक्षिणतर्फ ४०० मिटरसम्म फैलिएको छ । दुइवटा मुख्य बाटोले बस्तीलाई उत्तरदेखि दक्षिणसम्म विभाजन गरेको यो सहरलाई चारैकुनाबाट प्रवेशद्वारहरूले सुरक्षित गरेको देखिन्छ । काठमाडौँदेखि ल्हासा (कुती) बीचको व्यापारिक मार्ग हाल शंखरापुर नगरपालिकाभित्र रहेको यो परम्परागत बस्ती काठमाडौँ उपत्यकाको एउटा मुख्य र आकर्षक सम्पदा बस्ती हो ।

## साँखुको प्राचीनता




काठमाडौँ उपत्यकामा अवस्थित विभिन्न बस्तीहरूमध्ये साँखु एक प्राचीन बस्ती मानिन्छ। साँखुको नामाकरण सम्बन्धमा विद्वान्हरूबीच विभिन्न अभिमतहरू पाइन्छन् । नेवारीमा 'सँ' भनेको भोट (तिब्बत) र 'क्व' भनेको 'मुनि' भन्ने हुन्छ । तसर्थ 'भोटमुनिको भूमि' भन्ने अर्थमा 'सक्व' नामाकरण भएको र त्यही शब्द क्रमशः अपभ्रंस भई 'साँक्व' वा 'साख्व' हुँदै साँखु नाम रहन गएको हो (आचार्य, २०६१, पृ. २६) । शङ्खपुर समेत भनिने साँखुको पुरानो नाम शङ्करापुर वा शङ्खदेश

हो (शर्मा र श्रेष्ठ, ई. २०१६, पृ. ३)। किंवदन्तीअनुसार पौराणिक कालमा साँखु लावण्य नगर थियो (विवश, २०७५, पृ. ४२)। राजा शंकरदेवले शङ्खको आकारमा बनाएको हुनाले साँखुको नाम सङ्खरापुर वा शङ्करापुर रहन गएको हो (प्रधान, २०७६, पृ. ८२)। उत्तरमध्यकालीन अभिलेखहरूमा साँखुका शङ्को, सक्व देश, शंकरापुरी, शङ्करपत्तनजस्ता विभिन्न नामको उल्लेख पाइन्छ (शर्मा र श्रेष्ठ, ई. २०१६, पृ. ६)। गोपालराजवंशावलीमा साँखुको 'सङ्को' नाम ईश्वीको १३३२ मा सर्वप्रथम प्रयोग गरिएको उल्लेख पाइन्छ।

लिच्छविकालभन्दा पहिले नै महत्वपूर्ण स्थलका रुपमा बज्रयोगिनी क्षेत्र रहेको कुरा लिच्छवि अभिलेखमा वर्णित गुंविहार शब्दले पुष्टि गर्दछ। लिच्छविकालका बौद्ध विहारहरूमध्ये सबैभन्दा बढी प्रसिद्ध विहार गुंविहार हो। आरम्भमा वज्रयोगिनीको गुंविहार स्थविरवादी बौद्धमार्गीहरूको अखडा रहेकोमा पछि उक्त विहार महायानीहरूको गढ बन्यो। महासाङ्घिककै विकसित रुप महायान हो (वज्राचार्य, वि.स. २०६८, ९७-९८)। साँखुमा वज्रयोगिनीको स्थापनापछि गुंविहार वज्रयानको गढ बन्न पुग्यो। वज्रयोगिनी प्रसिद्ध भएपछि गुविहारको प्रसिद्धिलाई वज्रयोगिनीको ख्यातिले पछि पाऱ्यो (वज्राचार्य, वि.स. २०६८, ९८)। चटान काटिएका गुफाहरू, लिच्छविकालीन अभिलेखहरूमा वर्णित गुंविहार र महासांघिक भिक्षुसंघ, लिच्छविकालीन चैत्यहरूजस्ता प्रत्यक्ष र अभिलेखीय साक्ष्यले साँखुको प्राचीनतालाई उजागर गरेका छन्। भाषावंशावली (पौडेल, वि.स. २०२०, पृ. ७५-७६) र गोपालराजवंशावली (वज्राचार्य, वि.स. २०५३, पृ. २२) मा राजा मानदेवले अज्ञानतावश आफ्ना पिताको बध गरेपश्चात् पितृहत्याको पाप मोचनका लागि वज्रयोगिनीका शरणमा परी तप एवं देवीको पूजाबाट प्राप्त आर्शीवचनले खासा चैत्य तयार गरी सबै पाप नष्ट भएको प्रसङ्ग पाइन्छ ।

लिच्छविकालमा नै साँखु क्षेत्र वनदुर्गको अवधारणा अनुरुप विकसित थियो (शर्मा र श्रेष्ठ, २०१६, पृ. ८)। त्यसताका वज्रयोगिनी (गुंविहार), स्वयम्भू, पशुपति, आदिनाथजस्ता उपत्यकाका प्रसिद्ध देवस्थलहरू वनदुर्गका रुपमा थिए (वज्राचार्य, २०५३, पृ. १९)। तिब्बती गुरु पद्मसंभव साँखुको मन्दिरमा गई (ज्ञवाली, वि.स. २०१९, पृ. २५१) पाँच वर्षसम्म बसेका थिए। उनले वज्रयोगिनीको गुफामा बसेर दुष्ट शक्ति (भखर्ष उयधभच) लाई वशमा लिएका थिए (शर्मा र श्रेष्ठ, २०१६, पृ. ८७)। मध्यकालमा आइपुग्दा महत्वपूर्ण किल्ला (शर्मा र श्रेष्ठ, २०१६, पृ. ८-९) का रुपमा विकसित भएको कुरा तात्कालिक ऐतिहासिक स्रोतहरूले खुलस्त गरेका छन्।

बौद्ध धार्मिक ग्रन्थ 'मणिशैल महावदन' (प्रधान, २०७६, पृ. ८०) अनुसार देवी वज्रयोगिनीको आदेशानुसार पुजारी जोगदेवले शङ्खको आकारमा साँखु सहरको स्थापना गराएका थिए र शंकरदेव यो सहरका पहिलो राजा भएका थिए।

पौराणिक कथाअनुसार शङ्खरापुर सहरको निर्माण ३२ लक्षणले युक्त योगवती तीर्थले घेरेर शङ्खको आकारमा नगरको वरिपरि ढल राखी अष्टमातृकाहरूसहित आठ टोलयुक्त आठै दिशामा बाटो, बीचमा लायकु (राजगृह) सहित उत्तर दिशामा मसान बनाई ढिकी नरहने गरी बनाइएको थियो । भाषावंशावलीअनुसार यो सहरको संस्थापक शंकरदेव हुन्, जसले शंखाकार सहरको स्थापना गरी बज्रयोगिनी देवीलाई अर्पेका थिए । देवमाला वंशावलीअनुसार शंकरदेवले हजार परिवारलाई मिलाएर शंखाकार रुपमा साँखुको निर्माण कलिगत सम्वत ३९२५ (वि. स. ८८२) मा गरेका थिए (नरहरिनाथ, २०१३, पृ. ९२) । यहाँ वर्णित शंकरदेव पछिल्लो लिच्छविकालका राजा थिए (प्रधान, २०७६, पृ. ८२) ।

चारैतिरबाट ठूल्ठूला पहाडहरूले घेरिएको यो योजनाबद्ध किल्लायुक्त बस्तीका रुपमा विकसित यो क्षेत्र मध्यकालमा घना र संरक्षित वनदुर्गका रुपमा रहेको कुरा तत्कालीन अभिलेखीय र ऐतिहासिक स्रोतहरूमा उल्लेख पाइन्छ । साँखुको मध्यकालीन इतिहासका बारेमा प्रकाश पार्ने पहिलो ऐतिहासिक दस्तावेज ने. स. २८८ (वि.स. १२२४) को राजा रुद्रदेवको अभिलेख हो (वज्राचार्य, २०६८, पृ. ९७-९८) । बज्रयोगिनी परिसरबाटै फेला परेको ने. स. २९३ (वि.स. १२२९) को अभिलेख तात्कालिक जनभाषा वा नेवारी भाषामा कुँदिएको पहिलो अभिलेख मानिन्छ (वज्राचार्य, वि.स. २०६८, पृ. १०९-११०) । गोपालराजवंशावलीमा १३९१ भाद्रमा पश्चिम नेपालका खस सैनिकहरू नेपाल उपत्यकामा पसेका र छ महिना बसी साँखुको बाटो फर्कदा उनीहरूले साँखुमा आग्जनी गरेको उल्लेख पाइन्छ (वज्राचार्य, २०६६, पृ. ११२) ।

मध्यकालमा साँखु भक्तपुर र कान्तिपुरको अधिनमा पर्दथ्यो । कान्तिपुरका राजा सूर्य मल्ल छ वर्षसम्म शंखपुर (साँखु) मा गई बसे र त्यसताका उनले बज्रय ोगिनीको जात्रा चलाए (ज्ञवली, २०१९, पृ.१२५) । पछि ने. स. ६७९ (वि. स. १६१५) मा शंकरपतनका प्रथम राजाका रुपमा अमृत मल्ल देखा परे । वि. स. १७८६ (ई. १७२९) को राजा जगज्जय मल्लको बज्रयोगिनीबाट प्राप्त २ वटा ताम्रपत्रहरूमा साँखुलाई पर्वतीय किल्लाका रुपमा उल्लेख गरिएको छ । यो सहर विगतमा कहिले कान्तिपुर त कहिले भक्तपुरको अधिनमा रहेको प्रष्ट हुन्छ । एकीन रुपमा किल्ला पर्खालको निर्माणबारे अभिलेख एवं ऐतिहासिक दस्तावेजहरूमा उल्लेख नभए तापनि संभवत यो सहरको निर्माण पूर्वमध्यकालमा भएको मानिन्छ ।

वज्रयोगिनीमा फेला परेको ताम्रपत्रबाट राजा जगज्योति मल्लको समयमा पर्वतीय गढको संरक्षण गरेबाट त्यसताका साँखुको सुरक्षात्मक र पर्वावरणीय महत्वबारे थाहा हुन्छ । त्यस्तै जंगलमा आगो लगाउन तथा गाई, ब्राह्मण, पाहुनाहरूलाई दुःख दिन मनाही गरिएको व्यहोरा उल्लेख छ । कान्तिपुरका

राजा जयप्रकाश मल्लका विरोधी दलले उनका भाइ नरेन्द्रप्रकाश मल्ललाई उक्साई साँखु, चाँगु, गोकर्णलगायत ठाउँका राजा घोषणा गरेका थिए (ज्ञवाली, २०१९, पृ. १६९) । कान्तिपुरका राजा जयप्रकाश मल्लको बज्रयोगिनी मन्दिरको एउटा ताम्रपत्राभिलेखमा बज्रयोगिनी, स्वयंभू, गोकर्ण, चाँगु र बालाजु किल्लाको जंगल वरपरका बाँदर वा स्यालजस्ता जनावरहरूलाई व्यक्तिले दुःख दिएमा ३२ मोहर दण्ड गरिने कुरा उल्लेख छ। उपत्यका विजयपछि तात्कालिक राजा पृथ्वीनारायण शाहले साँखु आफ्नो अधिनमा पारे (ज्ञवाली, २०१९, पृ. २००) । शाहकालीन शासकहरूले पनि साँखुको भौगोलिक विविधता र पर्यावरणीय संरक्षण र व्यवस्थापनमा विशेष जोड दिएका प्रसङ्गहरू पाइन्छन् । साँखु सहरलाई भित्रबाट घेरेको चार मुख्य प्रवेशद्वारहरू अद्यापि देख्न सकिन्छ, जसले गर्दा यो सहरलाई 'जीवन्त किल्लाको सहर (Living Fortified City)' पनि भन्न सकिन्छ ।

**वज्रयोगिनीको प्राचीनता**



साँखुस्थित वज्रयोगिनी अत्यन्त शक्तिशाली देवी मानिन्छिन् । हिन्दू एवं बौद्ध दुवै धर्मावलम्बीको आस्थाकी देवी वज्रयोगिनीका अनेकन् नामहरू छन् । उग्रतारा, नीलसरस्वती एवं खड्गजोगिनी जस्ता नामले पुकारिने यी देवीलाई तिब्बती धर्मावलम्बीहरू 'ध्वर्जेफामु' भन्छन् भने नेवारी भाषामा रातो वर्णकी आमा भएकीले 'ह्याउँ ख्वा माजु' नामले संवोधन गर्छन् । यिनलाई मनोकामना पूरा गरिदिने भएकीले 'च्छ्वास्सः कामिनी' पनि भन्छन् (आचार्य, २०६१, पृ. २७) ।

तिब्बतीहरूकी कुलदेवी यी देवीलाई वज्रधर आदिबुद्धको शक्तिका रुपमा पनि पुजिन्छ । राणाहरू पनि यी देवीलाई कुलदेवी नै मान्छन् (आचार्य, २०६१, पृ. २७) । तिब्बती परम्परामा यिनले डाकिनीको स्वरुपको प्रतिनिधित्व गर्छिन । डाकिनी गुरु पद्मसंभवसँग सम्बद्ध छिन् । यी देवी उग्रताराका साथै 'एकजट्टी' का नामले पनि चिनिन्छिन् (शर्मा र श्रेष्ठ, २०१६, पृ. ८३ र ८५) । प्राचीन ग्रन्थ कृयासंग्रहमा वज्रयोगिनी मन्दिरको झलक प्रस्तुत गर्दै यो मन्दिरलाई खड्गयोगिनी (शर्मा र श्रेष्ठ, २०१६, पृ. २४८) भनिएको छ ।

नेपाल उपत्यका भित्रका प्रख्यात ऐतिहासिक एवं धार्मिक स्थलहरूमध्ये साँखु वज्रयोगिनी पनि एक हो ।

राजा अंशुवर्माको हाँडीगाउँको संवत ३२ को अभिलेखमा पाँचवटा विहारको उल्लेख गर्ने क्रममा सबैभन्दा पहिले गुंविहारको उल्लेख छ (वज्राचार्य, २०५३, पृ. ३२३) । हाल वज्रयोगिनीको नामले प्रसिद्ध स्थल पहिले गुंविहारका नामले विख्यात थियो । यहाँ अवस्थित विहारलाई अद्यापि गुंविहार नै भन्छन् । मल्लकालीन ठ्यासफूहरूमा पनि गुंविहारको चर्चा पाइन्छ । प्रसिद्ध वज्रयोगिनी मन्दिरसँगै रहेको चैत्यलाई गुंविहारको मुख्य चैत्य मानिन्छ (वज्राचार्य, २०५३, पृ. ३२३) ।

ऐतिहासिक वज्रयोगिनी मन्दिर प्रारम्भमा ग्रन्थकूट शैलीमा (शिखर शैली) मा बनेको थियो । मल्लकालीन एउटा ठ्यासफूमा कान्तिपुरका प्रसिद्ध राजा प्रताप मल्लले ग्रन्थकूट देवल बनाएको उल्लेख पाइन्छ (शर्मा र श्रेष्ठ, २०१६, पृ. २४६) । हालको वज्रयोगिनी मन्दिर पुरानो मन्दिर भत्किएपछि राजा भास्कर मल्लले आमाको आदेशमा १७६९ (ई. १७१२) मा निर्माण गराएका हुन् । वर्तमान नेपाली शैलीको तीनतले यो मन्दिर मध्यकालीन नेपाली शैलीका मन्दिरहरूमध्ये एक उत्कृष्ट वास्तु नमूना मानिन्छ । ईँटा, काठ, प्रस्तर निर्मित वज्रयोगिनी मन्दिरका ढोका, झ्याल, टुँडाल र तोरणहरू ज्यादै कलात्मक र आकर्षक छन् । वर्गाकार योजनामा बनेको यो मन्दिरको मुख्य प्रवेशद्वार दक्षिणाभिमुख छ । वज्रयोगिनी मन्दिर प्रांगण अनेकन् प्राचीन कलाकृति, शिलालेख, गुफाहरू, मन्दिर एवं पाटीलगायतका सम्पदाहरूले भरिपूर्ण छ ।

**सांस्कृतिक महत्व**

काठमाडौँ उपत्यकामा अवस्थित साँखु एउटा महत्वपूर्ण परम्परागत बस्ती मानिन्छ । ऐतिहासिक बस्ती साँखुको भौगोलिक सुन्दरता, धार्मिक, सांस्कृतिक, कला, वास्तुकलात्मक एवं पुरातात्विक दृष्टिले ज्यादै विशिष्ट महत्व छ । बज्रयोगिनी मन्दिर र वरिपरि अवस्थित आठभन्दा बढी प्रागैतिहासिक महत्वका गुफाहरूले मानव सभ्यताको प्राचीनतम पक्षलाई उजागर गरेका छन् । लिच्छविकालपूर्व नै




यहाँ मानव सभ्यताको आरम्भ भैसकेको कुरा लिच्छवि अभिलेखमा गुंविहार शब्दको उल्लेख भएबाट पुष्टि मिल्छ, जुन गैरसंस्कृत वा किरात शब्द हो । लिच्छविकालदेखि नै साँखु क्षेत्र वनदुर्गको अवधारणामा विकसित भएको हो । मल्लकालमा आएर साँखुले अझ मजवुत र योजनावद्ध ढंगबाट विकसित सहरको रुप लियो ।

पूर्वमध्यकालमा आएर व्यवस्थित र योजनावद्ध रुपमा विकसित गर्ने क्रममा शंखाकार सहर बनाई चारैतिरबाट सुरक्षात्मक पर्खाल लगाई आठ टोलहरूमा विभाजित साँखु सहरमा भिन्नाभिन्नै जातिहरूले आफ्ना धार्मिक आस्था, मूल्यमान्यता र आवश्यकता परिपूर्तिका लागि टोलटोलमा देवीदेवताको स्थापना, देवताका लागि मठ, मन्दिरको निर्माण, मनोरञ्जन र सांस्कृतिक क्रियाकलापहरूको आयोजनाका लागि डबली र खुला चोकको व्यवस्थापन, पानीको नियमित आपूर्ति व्यवस्थापनका लागि ढुंगेधारा, इनार, पोखरी एवं राजकुलोको समेत व्यवस्थापन गरेका थिए, जुन प्रणालीले अद्यापि कार्यसम्पादन गर्दैआएको कुरा ज्यादै वैज्ञानिक र मननीय छ ।

**पुरातात्विक महत्व**

पुरातत्व विगत मानवका भौतिक अवशेष र खण्डहरहरूदेखि लिएर मानवशास्त्रलगायत विभिन्न शास्त्र सम्बद्ध विषय भएकोले मानव बसोबास भएको जुनसुकै स्थल पनि पुरातत्वका लागि विशेष महत्वको स्थल रहने सन्दर्भमा साँखुको पुरातात्विक महत्वलाई पनि उत्तिकै महत्वका साथ हेर्न सकिने

अवस्था देखिन्छ। ऐतिहासिक साँखु सहर वास्तवमा मणिचुडपर्वतको काखमा अवस्थित बज्रयोगिनी मन्दिर परिसरमा रहेका गुफाहरू, ऐतिहासिक चाँगुनारायण क्षेत्र र गागलफेदी जस्तो प्रागऐतिहासिक जीवको अवशेष फेला परेको स्थलसँग प्रत्यक्ष र परोक्ष रुपमा आसपासको प्राचीनतम मानव बस्ती भएकोले पनि यो स्थलको पुरातात्विक महत्वलाई विशेष महत्वका साथ हेर्नु पर्ने हुन्छ। लिच्छविकालदेखि नै विकसित र उन्नतशील किल्लाबन्दी सहरका रुपमा रहेको साँखु सहर पूर्वमध्यकालमा आएर व्यवस्थित र योजनावद्ध ढंगबाट नगर सभ्यता र संस्कृतिको विकास गर्न सफल परम्परागत नेवारी बस्ती भएको र आजसम्म पनि उक्त बस्तीको मौलिकता र ऐतिहासिक प्रामाणिकता यथावस्थामा निरन्तर रहिआएको हुनाले यस सहरको पुरातात्विक महत्व झनै बढ्दो देखिन्छ।

**धार्मिक महत्व**



साँखु परम्परागत बस्तीभित्र विकसित सम्पदा र सम्पदा क्षेत्रलाई मूलतः हिन्दुधर्म र बौद्धधर्मसँग सम्बन्धित गरेर अध्ययन गर्न सकिन्छ। हिन्दू, बौद्ध र शाक्तधर्मको केन्द्रका रुपमा रहेको यो ऐतिहासिक सहरभित्र तत्धर्म र सम्प्रदायसँग सम्बन्धित देवीदेवता र स्मारक एवं कलाकृतिहरूको अभूतपूर्व भण्डारण रहिआएको छ। त्यसमा पनि ऐतिहासिक साँखु सहरलाई पर्वतीय दुर्गबाट अहोरात्र निरीक्षण गर्ने प्रख्यात देवी बज्रयोगिनीको महत्व र गरिमा उच्च र विशिष्ट छ। हिन्दूधर्म अन्तर्गत यहाँ शैवधर्म, शाक्तधर्म, वैष्णवधर्म, गाणपत्य र सौर्य सम्प्रदायसँग सम्बधित धर्मको विकास र विस्तार भएको कुरा उक्त नगरमा स्थापित कलाकृति एवं वास्तु संरचनाहरूको अध्ययनबाट स्पष्ट हुन्छ। यहाँका चोकहरू, खुल्ला स्थल, साँघुरा गल्लीहरू, मठ मन्दिर, पाटी, पौवा, ढुंगेधारा लगायतका स्थानमा यी सम्प्रदाय सम्बद्ध मूर्तिहरूको नित्य र नैमित्तिक रुपमा पूजाआजा हुने गरेको

अद्यापि देख्न सकिन्छ । भौतिक र अभौतिक सम्पदाहरूको भण्डारणका रुपमा रहेका यहाँका सम्पदाहरूले श्रद्धालुहरूको आस्था र विश्वासलाई जगाएका छन् । वज्रयोगिनी जात्रा, एक महिने स्वस्थानी मेलालगायतका जात्राहरू साँखुका उल्लेख्य नैमित्तिक पर्वहरू हुन् । विगतदेखि नै यहाँ हिन्दू र बौद्धधर्मबीच एकापसमा धार्मिक समन्वय, सद्भाव र सहअस्तित्व कायम छ ।

**कला र वास्तुकला**



ऐतिहासिक, धार्मिक, सांस्कृतिक एवं पुरातात्विक महत्व बोकेको साँखु सहर विभिन्न धर्म र सम्प्रदायसँग सम्बन्धित कला र वास्तुकलाको संगमस्थलका रुपमा चिरपरिचित छ । यस सहरमा विद्यमान कला र वास्तुकलालाई धार्मिक र गैरधार्मिक वा लौकिक गरी २ भागमा विभाजन गरी अध्ययन गर्न सकिन्छ । धार्मिक कला र वास्तुकलाजन्य सम्पदाहरूमा शैवधर्म, वैष्णवधर्म, शाक्त धर्म, गाणपत्य, सौर्य सम्प्रदाय र बौद्धधर्म सम्बद्ध कलाकृतिहरू सहरको सबै टोल, ढुंगेधारा, साँघुरा गल्लीहरू, खुला स्थल, चोकहरू, प्रवेशद्धार, मठमन्दिर, विहारलगायतका स्थानहरूमा छरिएर रहेका भेटिन्छन् । यस्ता धार्मिक वास्तुकलाका उत्कृष्ट नमूनाहरूमध्ये बज्रयोगिनी मन्दिर, ज्योर्तिलिंगेश्वर मन्दिर, स्वस्थानी मन्दिर, तलेजु मन्दिर, धर्मशाला, सत्तल, पाटीपौवाहरू, शिवालय, स्वयंभू चैत्य, गणेश मन्दिर, मातृकाका मन्दिर, बज्रयोगिनी द्यों छेँ, विहार, चैत्य प्रमुख छन् । साँखु सहरमा लौकिक कला र वास्तुकलाका नमूनाहरू पनि देखिन्छन् । यहाँका महत्वपूर्ण

र उत्कृष्ट लौकिक वास्तुकलाका नमूनाहरूमा ढुंगेधारा, पाटीपौवा, धर्मशाला, डबली, सत्तल, इनार, परम्परागत नेवारी घरहरू पर्दछन् । साथै यहाँ ऐतिहासिक स्मारकहरू तथा मल्लकाल र राणाकालमा निर्मित भवनहरू पनि देखिन्छन् ।

**संभावित विश्वसम्पदा**



विश्वका विभिन्न राष्ट्रहरूमा रहेका ऐतिहासिक, धार्मिक, सांस्कृतिक, तथा पुरातात्विक दृष्टिकोणले अद्वितीय विश्वव्यापी महत्व बोकेका उत्कृष्ट एवं विशिष्ट सम्पदाहरूलाई विश्वसम्पदा सूचीमा समावेश गर्ने चलन छ र त्यस्ता सम्पदाहरूलाई मूलतः प्राकृतिक, सांस्कृतिक एवं मिश्रित गरी तीन भागमा विभाजन गरिएको छ । काठमाडौं उपत्यकाका ऐतिहासिक, धार्मिक, सांस्कृतिक, कला, वास्तुकलात्मक एवं पुरातात्विक महत्वका स्थलहरूमध्ये परम्परागत बस्ती साँखुले विशिष्ट र महत्वपूर्ण स्थान ओगटेको हुनाले बज्रयोगिनी र साँखुको आरम्भिक बस्ती (Vajrayogini and early settlment of Sankhu) लाई संयुक्त राष्ट्र शैक्षिक, वैज्ञानिक तथा सांस्कृतिक सङ्गठन (यूनेस्को) ले सन् २००८ मा संभावित विश्वसम्पदा सूचीमा सूचीकृत गरेको हो ।

साँखु र त्यसको शीरमा ताजझैं रहेको प्रसिद्ध बज्रयोगिनी मन्दिर क्षेत्रमा रहेका प्राचीन गुफाहरू र पर्वतीय गढका रुपमा रहेको यो क्षेत्रको प्रागैतिहासिक महत्व पनि उत्तिकै छ । लिच्छविकालभन्दा पहिलेदेखि नै साँखु अस्तित्वमा रहेको कुरा ऐतिहासिक दस्तावेज एवं अभिलेखीय प्रामाणहरूको आधारमा स्पष्ट हुन्छ । साँखु सहर पूर्वमध्यकाल (नवौं शताब्दीको मध्य) मा व्यवस्थित र योजनाबद्ध ढंगबाट स्थापना भई किल्लाको रुपमा विकसित थियो । यसैकालमा साँखु तिब्बतसँगको

व्यापारिक मार्ग बन्यो र चारैतिरबाट किल्लाबन्दीका रुपमा प्रवेशद्वारहरू स्थापना गरी योजनावद्ध ढंगबाट विकास भयो ।

भौतिक र अभौतिक सम्पदाहरूले भरिपूर्ण साँखुको चारैदिशामा निर्मित प्रवेशद्वार र त्यसभित्र देखिने विभिन्न कला र वास्तुकलाका अद्वितीय नमूनाहरू, वर्षभरि आयोजना गरिने जात्रापर्वहरू, उत्सव, संस्कार, खुला स्थलको व्यवस्थापन, धारा, पाटी, पौवा, डबलीलगायतका असंख्य सम्पदाहरूको समानुपातिक वितरण र पानीको दिगो र योजनावद्ध व्यवस्थापन गर्ने तवरले स्थापना गरी संचालन र व्यवस्थापन गरिँदैआएको र परम्परागत र मौलिक पक्षलाई अक्षुण्ण राखी भावी पुस्ता समक्ष हस्तान्तरण गर्नका लागि वज्रयोगीनी र साँखुको आरम्भिक बस्तीलाई विश्वसम्पदा सूचीमा समावेश गर्न थप पहल गर्नु सबैको दायित्व हो ।

**उपसंहार**

काठमाडौँ उपत्यका प्राचीन बस्तीहरूमध्ये साँखु एक महत्वपूर्ण बस्ती मानिन्छ । लिच्छविकालपूर्व नै अस्तित्वमा रहेको परम्परागत साँखु बस्ती प्रारम्भमा वनदुर्गका रुपमा रहेको थियो र पूर्वमध्यकालमा आएर यसले किल्लाको रुपमा योजनावद्ध ढंगमा विकसित भएको कुरा अभिलेखहरू एवं ऐतिहासिक दस्तावेजहरूको अध्ययनबाट थाहा हुन्छ । ऐतिहासिक, धार्मिक, सांस्कृतिक, पुरातात्विक एवं पर्यटकीय महत्व बोकेको यो सहर भौतिक र अभौतिक सांस्कृतिक सम्पदाहरूको भण्डार हो । कला र वास्तुकलाका असंख्य नमूनाहरू, सुन्दर र मनमोहक भूपरिदृष्य, सालीनदी र मनोहराको उर्वर खेतीयोग्य फाँट, प्राचीन महत्वका स्मारक सहितका साँगुरा गल्ली र खुला चोकहरू, आकर्षक ढुंगेधारा, डबली, हिन्दू र बौद्ध कलासम्बद्ध अनमोल कलाकृतिहरूको संयोजनबाट परम्परागत साँखु सहरको संस्कृति संभवत लिच्छविकालपूर्व आरम्भ भई पूर्वमध्यकालदेखि योजनाबद्ध ढंगबाट निरन्तर रुपमा अघि बढ्दैआएको तथ्य प्राप्त प्रमाणका आधारमा स्वीकार्नु पर्ने हुन्छ । मध्यकालमा साँखु तिब्बतसँगको व्यापारिक मार्ग थियो । अनियन्त्रित सहरी विकास, अव्यवस्थित निर्माण कार्य, वि. स. २०७२ बैशाख १२ को बिनाशकारी भूकम्प, जैविक, प्राकृतिक, रसायनिक, मानवीय एवं पर्यावरणीय लगायतका विविध कारणहरूले गर्दा दिनानुदिन परम्परागत साँखु सहरको मौलिकता र पुरानो स्वरुप बदलिँदो अवस्थातर्फ उन्मुख देखिन्छ । तसर्थ साँखुको प्रारम्भिक बस्तीको ऐतिहासिकता, मौलिकता, आधिकारिकता, संवेदनशीलता एवं सौन्दर्य मूल्यलाई जर्गेना गर्दै भावी सन्ततिलाई जस्ताको तस्तै हस्तान्तरण गर्न सबैको एकीकृत पहल जरुरी देखिन्छ ।

## सन्दर्भ सामग्रीहरू


आचार्य, निर्मलकुमार (२०६१). सांस्कृतिक सेरोफेरो, ललितपुर : साझा प्रकाशन ।

नरहरिनाथ, योगी (२०१३). देवमाला वंशावली. काठमाडौँ : गोरक्षपीठ ।

पौडेल, नयनाथ (सम्पा.) (२०२०). भाषावंशावली, पुरातत्व विभाग, नेपाल राष्ट्रिय पुस्तकालय ।

प्रधान, भुवनलाल (२०७६). नेपालको इतिहास र संस्कृतिका केही पक्ष, काठमाडौँ : नेपाल प्रज्ञा प्रतिष्ठान ।

वज्राचार्य, धनवज्र (२०५३). लिच्छविकालका अभिलेख, दोस्रो संस्करण, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र ।

वज्राचार्य, धनवज्र (२०६८). पूर्वमध्यकालका अभिलेख, दोस्रो संस्करण, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र ।

वज्राचार्य, धनवज्र (२०६६). गोपालराजवंशावलीको ऐतिहासिक विवेचना, दोस्रो संस्करण, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र ।

विवश, ज्ञानेन्द्र (२०७५). साँखुका सम्पदा र वास्तुकला, काठमाडौँ : नेपाल ललितकला प्रज्ञा प्रतिष्ठान ।

शर्मा, डि. आर. एण्ड टि.बी. श्रेष्ठ (ई. २०१६). साँखु : हिस्टोरिकल एण्ड कल्चरल हेरिटेज, काठमाडौँ : नेपाल एण्ड एशियन रिसर्च सेन्टर ।

ज्ञवाली, सूर्यविक्रम (२०१९). नेपाल उपत्यकाको मध्यकालीन इतिहास, काठमाडौँ : रोयल नेपाल एकेडेमी ।

# गोरखाको मध्यकालीन दरबार परिसरको ऐतिहासिक र साँस्कृतिक महत्व



✍ हरिप्रसाद भुसाल*

**१.परिचय**

गोरखा जिल्लास्थित गोरखा नगरपालिका वडा नं.६ मा गोरखा दरवार अवस्थित छ। राजधानी काठमाडौंदेखि २६ कोसको दुरिमा पर्ने यो दरबारसम्म करीव ४ घण्टाको गाडीको यात्राबाट पुग्न सकिन्छ। मध्यकालमा विभाजित नेपाललाई पुनर्एकीकरणको नेतृत्व लिई सवल र सुदृढ तुल्याउने शाह राजाहरूको राजधानीको रुपमा गोरखा दरवारलाई चिनिन्छ। नेपाल राज्य निर्माणको पृष्ठभूमि तयार भएको ५० भन्दा बढी राज्यहरूमा विभाजित नेपाललाई पुनर्एकीकरण गरी सवल र सुदृढ तुल्याउँदै राष्ट्र र राष्ट्रियता प्रति जागरुक गराई युगान्तकारी परिवर्तनको नेतृत्व दिने पृथ्वीनारायण शाहलगायतका दश पुस्ता राजाले राज्य संचालन गरेको स्थलका रुपमा गोरखा दरवारलाई लिइन्छ। शाह राजाहरूको उषाकालदेखि सिर्जना गरी संचालन गरेका मूर्त-अमूर्त सम्पदाहरू अद्यपि जीवन्त छन्। जसका आफ्नै मौलिक विशिष्ठता र आफ्नै प्रकारका परम्पराहरू छन्। राष्ट्रिय एकताको शुत्रधार राजा पृथ्वीनारायण शाहको जन्मथलो गोरखा दरबार र आसपासको क्षेत्रलाई विश्वव्यापी महत्वको रुपमा लैजानका लागि सम्भावित विश्व सम्पदाको सूचीमा  समावेश गरिएको हो।

नेपालमा सन् १९९६ र २००८ मा गरी १५ वटा सांस्कृतिक सम्पदाहरू सम्भावित विश्वसम्पदा सूचीमा सूचिकृत गरिएका छन्। विश्वव्यापी रुपमा अद्वितीय महत्व

---

* पुरातत्व अधिकृत, पुरातत्व विभाग

बोकेको मध्यकालीन समयको बास्तुकलात्मक, ऐतिहासिक तथा साँस्कृतिक सम्पदा भएको, ५० भन्दा बढी संख्यामा विभाजित रजौटाहरूलाई एकीकरण गरी आधुनिक नेपाल निर्माणको नेतृत्व लिएको तत्कालिन गोरखा राज्यको राजधानी भएको र उत्तर मध्यकालीन नेपालको तरल राजनैतिक अवस्थाको अन्त्य गरी स्थीरता प्रदान गर्ने शाह राजाहरूको मूल थलोका रुपमा रहेको कारणले यहाँको राजनैतिक, ऐतिहासिक, धार्मिक, सांस्कृतिक, पुरातात्विक महत्वयुक्त विरासतको संरक्षणको लागि गोरखा दरबार क्षेत्रलाई विश्व सम्पदाको सम्भावित सूचीमा सूचिकृत गरिएको हो ।

## २. ऐतिहासिकता

सम्भावित विश्व सम्पदाको सूचीमा सूचिकृत गोरखा दरबार क्षेत्र प्राचीनकालमा काठमाडौं केन्द्रबाट सोझै शासन हुने प्रदेशमा पर्दथ्यो ।[1] लिच्छवीकालका दुईवटा अभिलेख गोरखा दरवार परिषरमा रहेका छन् । अभिलेखमा यसै थानको पूजा वन्दोवस्ती गरिएको कुराले धार्मिक दृष्टिले गोरखाको महत्व लिच्छवी कालमानै रहिसकेको थियो । अक्षरहरू मेटिएर वुझ्न नसक्ने अवस्थामा पुगेको एक अर्को अभिलेख हनुमान भञ्ज्याङ समीको चौतारी मुनी रहेको छ । राजा जयदेवको नाम परेको यो अभिलेखमा महादेवका लागि जग्गा छुट्याईएको र त्यसबाट आउने कुतले महादेवको पूजाआजा गरिन्थ्यो भन्ने वुझिन्छ ।[2] उल्लेखित लिच्छवीकालिन दुईवटा अभिलेख अनुसार लिच्छवीकालमा गोरखाको राजनैतिक रुपमा भन्दा पनि धार्मिक रुपमा प्रशिद्ध थियो र केन्द्रबाट शासित जनपदको रुपमा रहेको थियो । गोरखा दरववारको हनुमान भन्ज्याङमा जयदेव द्धितियाको अभिलेखको दाँयातर्फ उमामहेश्वरको प्राचीन मूर्ति रहेको छ । गोरखा दरवार परिषरमा पाइएका भनी गोरखा दरवार संग्रहालयमा प्रर्दशनमा राखिएका लिच्छवीकालीन चैत्यहरूले यो क्षेत्रमा हिन्दु तथा वौद्ध दुवै धर्मावलम्वीहरूको वसोवास रहेको देखिन्छ । लिच्छवीकालपछि गोरखाको स्पष्ट उल्लेख आएको पाइँदैन । गोपालराज वंशावलीअनुसार १२ औं शताब्दीतिर सिञ्जाका खस शासकले पटक पटक नुवाकोटको बाटो हुँदै काठमाडौं उपत्यका आक्रमण गरेको बुझिने तथा वि.स.१३७८ को आदित्य मल्लको र १३९४ को पुण्य मल्लको ताम्रपत्र ताघवाई गुम्वामा पाइएको आधारमा गोरखा केही समय खसहरूको अधिनमा पुगेको देखिन्छ । यक्षमल्लको मृत्युपछि मल्लराज्य कमजोर वन्दै जादा पाल्पाका सेनहरूले नुवाकोटको वाटोबाट हमला गरेकोले गोरखामा सेनहरूको अधीकार जमेको थियो ।[3] गोरखाको खड्गदेवि मन्दिर मुकुन्द सेनले वनाउन लगाई पूजाआजाका लागि मगर पुजारी राखिदिएको किंवदन्ती पाइन्छ । पन्ध्रौं शताब्दीको उत्तरार्धमा विसाल खस राज्य विभाजित भई बनेका

1 पन्त, दिनेश राज, गोरखाको इतिहास (पहिलो भाग) दिनेशराज पन्त, काठमाडौं वि.सं. २०४३ पृ. ४
2 बज्राचार्य, धनबज्र लिच्छवीकालका अभिलेख, पृष्ठ ५२५
3 ५.ऐजन, पृष्ठ.. २०



पृथ्वीनारायण शाहको दरबार



शाहकालीन दरबार

वाईसी चौविसी राज्य उत्तर मध्यकालमा आएर विभिन्न भूरेटाकुरे राज्यहरूमा थप विघटित हुने शिलशिलामा बनेको सवैभन्दा कान्छो राज्य गोरखा थियो । इसाको

सत्रौ शताब्दीको पूर्वाधसम्म नेपालको वर्तमान भौगोलिक सिमानाभित्र पचास भन्दा बढ्तै रजौटाहरूको उदय भैसकेको थियो ।[4] यी राज्यहरू भित्र कुनै कुनैमा राजपरिवारको वंश लोप हुँदा वा उनका भाईहरू फुट्दा ती रियासतहरू एकै राज्यमा गाभीन आउने अथवा एक ठूलो राज्य फुटेर अनेक सानातिना रियासतहरूको उदय हुन्थ्यो । कतिपय छिमेकी रियासतहरू कहिलेकाही एक गठ पनि बन्दथ्यो र ती सामूहिक रितले शत्रुसित विरोध गर्दथे ।[5] लमजुङमा यसोव्रहम शाहले वि.स. १५५० असार १५ मा स्वतन्त्र लमजुङ राज्य स्थापना गरी शासन संचालन गरे । उनको माहिला छोरा द्रव्य शाहलाई दक्षिण उत्तर दुवैपट्टि दरौंदीको धनहर व्यासी समेत भएको हुनाले गोरखा वहुत उपयोगी थियो ।[6] वि.स. १६१६ भाद्र २५ गते नारायण दास अर्याल, गणेश पाण्डे, भागिरथ पन्थ, गंगाराम राना, सर्वेश्वर खनाल, केशव वोहोरा र मूर्ति खवासजस्ता गोरखाका स्थानीयहरूको सहयोगमा द्रव्य शाहले स्वतन्त्र गोरखा राज्य खडा गरेको देखिन्छ ।[7] यसोव्रह्ममा शाहकी रानीले गोरखा राज्य र लमजुङ राज्यको सिमाना चेपे नदि तोकी सन्धी गरिदिएको कुरा पनि वंशावलीहरूमा परेको छ ।[8] नेपाल राज्यमा विलिन हुन अगाडिसम्म गोरखालीहरूलाई निशङ्क भएर वस्न लम्जुङ्गेले कहिल्यै दिएनन् ।[9] गोरखा राज्य आर्थिक दृष्टिकोणवाट अन्य राज्यहरू मध्य कमजोर पहाडि प्रदेशमात्र भएको हुँदा कृषिनै मुख्य पेशा थियो । अरु राज्यहरू जस्तो भोट भारतसँग व्यापार सम्बन्ध थिएन न त उद्योग खानीहरूनै थिए । राज्य स्थापनाको समयदेखिनै लमजुङबाट देखिएको वक्रदृष्टिले सधै शत्रुता उत्पन्न गरायो । गोरखालाई निर्धन ठानी चौविसीमा गणनानै गरेनन् । द्रव्यशाह राजा भएदेखि नै कच्ची छाना भएको पत्थरको घर बनाई नाथ मूर्तिलाई गोरखनाथको मूर्ति मानेर नयाँ वसाएको वस्तीको नाम गोरखा गाँउ राखे ।[10] छत्र शाहले वनाउन लगाएको श्री शाके १५३१ मिति उल्लेखित दुईबटा नगराहरू गोरखा दरवारमा रहेका छन् । छत्रशाह पछिका रामशाहले[11] राज्य प्रशासन, गृहनीति कृषि, वाणिज्य न्यायिक नीतिहरू लागु गरे । उनले बसाएको थितिको चर्चा टाढाटाढासम्म फैलियो । उनको समयमा काठमाडौं उपत्यकाका राजाहरूसँग सुमधुर सम्बन्ध स्थापित भयो । आन्तरिक व्यवस्थालाई सुदृढ गरी त्रिशुली उपत्यकाको उत्तरतर्फ केरुङसम्म गोरखा राज्यको सिमाना विस्तार गरे । सल्यानमा गढी बनाएर भगवतीको

4 ऐजन, पृष्ठ.. २३

5 श्रेष्ठ, टेक बहादुर पर्वत राज्यको ऐतिहासिक रुपरेखा, पृष्ठ १७

6 शर्मा, बालचन्द्र नेपालको ऐतिहासिक रुपरेखा, कृष्णकुमारी देवी २०३३ पृ. १९८

7 शर्मा, बालचन्द्र नेपालको ऐतिहासिक रुपरेखा, कृष्णकुमारी देवी २०३३ पृ. १९८

8 आचार्य, बाबुराम श्री ५ वडामहाराजधिराज पृथ्वीनारायणसाहको संक्षिप्त जीवनी साझा प्रकाशन २०६१ पृ.

9 पन्त, पाद टिप्पणी नं. ६ पृ. ५३

10 पन्त, पाद टिप्पणी नं. ६ पृ. ५३

11 शर्मा, पाद टिप्पणी नं. १३ पृ.२११

मूर्ति स्थापना गरी त्यहाँ महीनखम्वा नामक शिलास्तम्भ उभ्याए संस्कृत भाषा र खस भाषाको लेख कुदाए ।[12] गोरखा आफ्नो मुकाममा दरवार, काली मन्दिर बनाउने, पोखरीथोकमा मुरलीधर नारयणको मन्दिर स्थापना गरी अभिलेख राख्ने तथा रामेश्वर शिवालय, गणेश मन्दिर स्थापना पनि यिनकै समयमा भए । डम्वरशाह वाहिरी राज्यहरूको राजनैतिक दाउपेचमा  अभिरुची देखाएका थिए । रुद्र शाहले गोरखा दरवारमा चौघेरा बनाएको कुरा वंशावलीमा उल्लेख छ । गोरखा दरवारको पूर्वपट्टि हनुमान भन्ज्याङ्वाट गोरखा दरवारमा आवतजावत गर्न सजिलो होस् भनी सिढि बनाउन लगाई रुद्रशाहले वि.स.१७२३ जेष्ठ २२ गते शिलालेख राखेका हुन ।[13] वंशावलीमा रुद्रशाह डम्वर शाह जस्तै वाहिरी राजनैतिक दाउपेचमा सहभागी भएको कुरा उल्लेख गरेका छन् । रुद्रशाहपछि पृथ्वीपति शाह गोरखाको गद्दीमा वसे । वि.स.१७३५ आश्विन १५ गते हनुमानढोका दरवारको मोहनचोकमा नृपेन्द्रमल्ल र पृथ्वीपति शाहले मितेरी लगाएका थिए । रामशाहको मृत्युपछि कमजोर बन्दै गएको गोरखाको आर्थिक सैनिक शक्तिलाई पृथ्वीपति शाहले मजवुत वनाए । उपत्यकाभित्र कान्तीपुरका राजासंग मित लगाई उपत्यकाको राजनीतिमा प्रभावकारी भूमिका खेल्न सफल भए । गोरखा पोखरीथोक रामेश्वर मन्दिर अगाडि वि.स. १७३७ आषाढ ८ गते आफ्नो शालिकसहितको ढुङ्गे खाबो स्थापित गर्न लगाए ।[14] पृथ्वीपति शाहपछि उनको नाति नरभूपाल शाह गोरखाका राजा भए । उनले नुवाकोट जित्ने प्रयास गरे सफल हुन सकेनन् । जेठीमहारानी चन्द्रप्रभावतीले गोरखा राज्यको सुरक्षा, प्रशासनिक कार्यलाई चतुरतापूर्वक चुस्तदुरुस्त राख्न महत्वपूर्ण भूमिका खेलिन् । वि.स. १७९९ मा नरभूपाल शाहको मृत्युपछि पृथ्वीनारायण शाह गोरखाको राजा बने ।

शक्ति हत्याउन बारम्वार षडयन्त्र, दाउपेच, आन्तरिक किचलो, कलहले गर्दा एक पक्ष आफ्ना विरोधी पक्षलाई हटाउन बाइसे चौबिसे राज्यहरू एक आपसमा अन्य राज्यहरूसँग सरसहयोगको गुहार माग्ने, लडाई, भिडाई गरी प्राप्त थोरै आर्थिक सहयोगवाट सन्तुष्ट हुने गर्दथे । गोरखा राज्यले नेपाल एकीकरणको कुशल नेतृत्व गर्यो । गद्दीमा बसेकै वर्ष पृथ्वीनारायण शाहले कान्तिपुर अन्तर्गत नेपाल उपत्यका र भोटविचको प्रमुख व्यापारिक मार्गका रुपमा रहेको नुवाकोट माथि आक्रमण गरे ।[15] जेठी महारानी चन्द्रप्रभाद्धारा प्राप्त भएको नैतिक शिक्षाद्वारा यिनी वालककालदेखि संयमित, साहसी, लगनशील र परिश्रमीसमेत बने र उमेरको साथै यी ज्ञानव्यवसनहरू पनि उनमा दृढ हुँदै गए ।[16] वि.स. १८०१ देखि वि.स. १८३१

12 पन्त, पाद टिप्पणी नं. १३ पृ. ५५

13 शर्मा, गोपीनाथ, चौविसी राज्यको इतिहास, मकालु प्रकाशन गृह, वि.सं. २०७१ पृष्ठ ८४

14 आचार्य, पाद टिप्पणी नं. ११ पृ. ७

15 आचार्य, पाद टिप्पणी नं. ११ पृष्ठ ८

16 आचार्य, पाद टिप्पणी नं. ११ पृष्ठ १०

सम्म करीव ३०-३१ वर्ष एक टकारसम्म योजनावद्ध रुपमा अगाडि बढी नेपाल एकीकरणको जग बसाए। कुशल राजनीतिज्ञ, महत्वकांक्षी, कुटनीतिको राम्रो जानकार, सुरविर पृथ्वीनारयण शाहले नेपाल र नेपालीको अस्तित्वको विजारोपण गरी आधुनिक नेपालको इतिहास प्रारम्भ गरे। गोरखाले नेपाल र नेपाली एकताको सन्देश दिँदै नेपाली राष्ट्रियताको विजारोपण गरायो। वि.स. १८२५ मा कान्तिपुर विजयपछि मुकाम नुवाकोटबाट पनि काठमाडौँ सर्यो र सधैका लागि काठमाडौं राजधानी कायम भयो। गोरखा राज्यको राजधानीका रुपमा रहेको गोरखा दरबार यसपछि क्रमशः ओझेलमा पर्दै जान थाल्यो। गोरखा दरवार परिषरमा रहेका जति पनि भौतिक अभौतिक सम्पदाहरू छन्। प्रायः सबैजसो गोरखाली राजाहरूका समयमा निर्माण भए, पछिबाट थपघट संरक्षणका कार्यहरू भए गरिए।

### ३.गोरखा दरवारको साँस्कृतिक महत्व

गोरखा दरवार परिसरलाई व्यवस्थित मजवुत र सौन्दर्य तुल्याउन रामशाहको विशेष भूमिका रहेको वंशवालीहरूमा उल्लेख छ। यहाँ लिच्छवीकालदेखि आधुनिक कालसम्मका स्मारकहरू रहेका छन्। शाहराजाहरूको उषाकालदेखिको जीवन्त संस्कृतिले हालसम्म पनि निरन्तरता पाएको छ। यो नै नेपाल र नेपालीको गौरव हो। गोरखा गोरखकाली तथा गोरखनाथ अन्तर्राष्ट्रिय चर्चाको विषय बन्यो। गोरखा राज्यले जन्माएको अभूतपूर्ण शक्तियुक्त सुसंगठित फौजले अंग्रेजहरूलाई थर्कमान बनायो। नेपाल अधिराज्य निर्माणको पृष्ठभूमि गोरखाले तयार गर्यो। गोरखा दरबार लिच्छवीकालदेखि प्रसिद्ध धार्मिक स्थलको रुपमा विकास भई गोरखनाथ गोरखकालीको सत्कृपाले यहाँका सम्पदाहरू ऐतिहासिक धार्मिक, एवम् पुरातात्विक रुपमा राष्ट्रिय गौरवका विषय बन्न पुगेका छन्। गोरखा दरवारका सम्पदाहरू प्राचीन शाहवंशीय राजाहरूको उदयदेखि प्रचलनमा आएका विभिन्न रितिथिति परम्परा तथा सांस्कृतिक गतिविधिहरू विना अवरोध विगत लामो समयदेखि सञ्चालित छन्। यहाँको कालिका मन्दिर र सिद्ध गोरखनाथको अस्तित्वले धार्मिक दृष्टिले पनि गोरखा प्रसिद्ध छ। यहाँ रहेका माथिल्लोकोट वज्रभैरव, चण्डीथान, हनुमानभन्ज्याङ, चौघेरा दरबार, गोरखनाथ, मूलदरवार, रंगमहल, कालिका दरबार मन्दिर, गणेशथान, रामशाह चौतारा, तल्लोकोट, तल्लो दरवार तथा पोखरीथोकका मूरलीधर नारायण रामेश्वर सिद्धगणेश रानीपोखरी आदि सम्पदाहरूले  तत्कालनी समयको कलावास्तुकला धार्मिक सांस्कृतिक गतिविधिबारे जानकारी दिन्छन्।

उत्तर दक्षिण तथा पूर्वतर्फबाट सुरक्षित किल्ला स्वरुपको स्थानमा निर्मित गोरखा दरवार क्षेत्रमा नेपाली मध्यकालीन वास्तुकलाको अनुपम नमुनाका रुपमा रहेको छ। चौघेरा दरवार, मूलदरवार, रंगमहल, कालिका मन्दिर, सित्तलपाटी र परम्परागत शैलीमा निर्मित नेपालकै कान्छो तल्लो दरवारलगायतका वास्तुसंरच

ना, कला तथा लिच्छवीकालदेखि शाहकालसम्मका अभिलेख, मूर्ति तथा अन्य पुरातात्विक वस्तुहरू रहेका छन् ।

### ४.धार्मिक महत्व

लिच्छवीकालदेखि  प्रसिद्ध धार्मिक स्थलका रुपमा विकास भई प्रसिद्धि कमाएको गोरखा दरवार परिसर बाह्रौं तेह्रौं शताब्दीताका सिद्ध गोरखनाथको तपोभूमि गोरखनाथ गुफाले थप प्रसिद्धि कमायो । डोटीदेखि पूर्वपट्टिमा गोरखामा र काठमाडौं उपत्यकामा मात्र गोरखनाथको मूर्ति रहेकाले डोटीदेखि पूर्वपट्टिका व्राम्ह्मण, ठकुरी, क्षेत्रीहरू पनि गोसाइकुण्डको स्नान गर्न र पशुपतिको दर्शन गर्न जाँदा गोरक्ष गोरखनाथको दर्शन गर्न आउने गर्दथे । सिद्ध लखनथापाले स्थापना गरेको मनकामना देवी पश्चिम प्यूठानदेखि पूर्व धादिङसम्मका मगर जातिका इष्टदेवि हुनाले र काठमाडौं मल्ल ठकुराईका रैतान पनि मनकामना पुण्यस्थल भएकोले मनकामनाका उपासक गोरखनाथको दर्शन गर्न गारखा आउथे ।[17] गोरखा राज्य स्थापना गर्न सिद्ध गोरखनाथले मार्ग दर्शन गरेको तथा राज्य स्थापनापछि कालिका स्थापना गर्न द्रव्य शाहलाई गोरखनाथले नै निर्देशन गरेको कुरा वंशावलीमा पाइन्छ । गोरखनाथ, गोरखकालीको सत्कृपाले यहाँका राजाहरूलाई मार्ग दर्शन गरेको शक्ति प्रदान गरेको, कतिपय युद्धमा गोरखनाथ तथा कालिका मन्दिरका पुजारीहरूले गोरखकाली सैनिकको मनोबल बढाउन, हौसला प्रदान गर्न युद्धमा सहभागी भएको विवरणहरू पनि पाइन्छन् । यसरी यहाँका सम्पदाहरू ऐतिहासिक, धार्मिक एवम् पुरातात्विक दृष्टिकोणमा राष्ट्रिय गौरवका विषय बन्न पुगेका छन् । प्राचीन समयदेखि धार्मिक स्थलकारुपमा रहेको गोरखादरवार परिसर शाह राजाहरूको उषाकालदेखि प्रचलनमा आएका रितिथिति परम्परा तथा सांस्कृतिक गतिविधिहरू विना अवरोध विगत समयदेखि ज्यूँका त्यूँ संचालित छन् । गोरखाले नेपाल पुन ऐकीकरणको नेतृत्व लिदैगर्दा पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म उत्तर हिमाली क्षेत्रदेखि तराईसम्म गोरखाली पुगेका कारण गोरखकाली र सिद्ध गोरखनाथका कारण गोरखाले प्रसिद्धि कमाएको छ। यहाँ रहेका उपल्लोकोट वज्रभैरव, चण्डीथान, हनुमानभन्ज्याङ, श्रीविद्या, चौघेरा दरवार, गोरखनाथ गुफा, मूल दरवार, रंगमहल, कालिका मन्दिर, गणेशथान, रामशाह चौतारो, तल्लोकोट, तल्लोदरवार, मुरलीधर नारायण मन्दिर, रामेश्वर शिवालय, सिद्धिगणेश, रानीपोखरीलगायतका सम्पदाहरूमा वर्षैभरी हुने धार्मिक सांस्कृतिक गतिविधिहरूले तिनलाई जिवन्त र सजिव तुल्याएका छन् । साउने सक्रान्ती, साउने भण्डारा, नाग पञ्चमी, जनैपूर्णिमा, गाईजात्रा, कृष्णजन्माष्टमी, कुशेऔसी, मालासिरी फुकाउने भाद्र शुक्ल अष्टमी, घटस्थापना, वडादशैं, रामेश्वर मन्दिरमा महादिपदान, तिहार, नुहागी, शिवरात्री, चैत्राष्टमी, रामेश्वरमन्दिरमा अखण्ड जलधारा रुद्री दरौदी किनारमा गरिने लखपति

17 आचार्य बाबुराम, श्री ५ वडामहाराजधिराज पृथ्वीनारायण शाहको संरक्षित जीवनी साझा प्रकाशन पुल्चोक, दोस्रो प्रकाशन २०६१, पृ. ७०.७१

पूजा चण्डीपूर्णिमा प्रत्येक शुक्ल र कृष्ण पक्षका अष्टमीलगायतका बर्षैभरि पर्व पूजाहरू विशेष प्रकारले सम्पन्न गरिन्छन् ।

शाहवंशले शुरु संचालन गरेका थरघर परम्परा तथा रीतिथिति अनुसार सवैले आ-आफ्ना साविकका जिम्मेवारी अनुरुपका कार्यहरू निर्वाध रुपमा संचालनमा छन् । अखण्ड धुनीसहित हरेक दिन रोटहरू पकाई गोरखनाथमा अर्पण गर्ने गरिन्छ । हरेक दिन दुई समय शंख घण्ट नगरा बज्छ । जसले यो क्षेत्रको वातावरणलाई आनन्दित तुल्याएको छ । पर्व विशेषमा थुम थुमवाट आ-आफ्ना जिममेवारीका सामाग्रीहरू ल्याई पूजा सम्पन्न गर्ने साविकदेखि कै परम्परा अद्यपि संचालित छन् ।

**५. कला वास्तुकलात्मक महत्व**

करीव ७ रोपनी क्षेत्रफल भएको दरवार क्षेत्र माफ्फकोट दरवारका नामले चिनिन्थ्यो । शाह राजाहरूको पुख्यौलीघर वा दरवार भएकोले यसलाई मजवुत किल्लाको रुप दिने तत्कालीन ज्ञान सिप प्रविधि तथा प्राप्त निर्माण सामाग्रीहरूको विशिष्ट समायोजनबाट दरवार निर्माण भएको छ । दरवार मूलतः दुई खण्डमा विभाजित छ । तल्लो खण्डमा चौघेरा दरवार रहेको छ । दुई तले यो दरवार चोकसहितको इट्टा, माटो, काठ, झिंगटी, ढुङ्गा आदिको प्रयोग गरी निर्माण गरिएको चौघेरा दरवार मध्यकालीन वास्तुकलाको अनुपम नमूनाका रुपमा रहेको छ । दरवार खण्डमा विशेषत ३ सम्पदा मूल दरवार, रंगमहल, कालिका मन्दिर, दरवार रहेका छन् । यी तिन सम्पदा आन्तरिकरुपमा एक अर्कासँग जोडिएका छन् । दरवारको तेस्रो तलाबाट पश्चिमतर्फको ढोका वार्तली हुँदै रंगमहल र त्यहाँबाट कालिका जाने ढोका रहेको छ । वडादशैँ चैत्रदशैम मूलदरवारको कैलाशकोठाबाट भगवती यही मार्गबाट सवारी चलाई कालिकाको मूल पूजा स्थलमा लगेर राखिन्छ । मूल दरवार र रंगमहल दक्षिणाभिमूख अवस्थामा निर्माण गरिएका छन् भने कालिका मन्दिर दरवार पूर्वाभिमूख अवस्थामा निर्माण गरिएको छ । मूलदरवार रंगमहल तथा कालिका मन्दिरबीचमा चोकजस्तो खुल्ला भाग छ । यसै भागमा तीन मौला रहेका छन् । कलात्मक आखी झ्याल, षड्कोण झ्याल, पाँचमुखे झ्याल, तोरण टुडाल, मुठल, सबै काष्ठकलायुक्त र प्रशतरकलायुक्त रहेका छन् । दरवारको पूर्वपट्टि रहेको गोखनाथ गुफा, मन्दिर त्यहाँ रहेको लिच्छवीकालीन शिलालेख, रोटपाटी, हनुमान भन्ज्याङका हनुमान, उमामहेश्वर, सरस्वती, लिच्छवीकालीन शिलालेख, चण्डीथानका मूर्ति, गणेशथानको स्नातक गणेशमूर्ति, तल्लो संग्रहालय भएको दरवार पदेली पोखरीथोकको रामेश्वर शिवालय जुन अभिलेखसहित सर्वप्राचीन शाहकालीन गुम्वज शैलीको मन्दिर, मुरलीधर नारायण शाहकालीन नेपाली शैलीको मन्दिर, शिखर शैलीको सिद्धिगणेश मन्दिरलगायतका दरवार, मठ, मन्दिर मूति, कोटलगायतका सम्पदाहरूले तत्कालीन कला वास्तुकलाको

उन्नत अवस्थाको चित्रण गरेका छन् । कला वास्तुकलासंगै यिनलाई जिवन्तता दिने मौलिक संस्कृतिले गोरखा दरवारलाई विश्वमा परिचित गराउन सफल भएको छ । साढे चारसय वर्ष पुराना जीवन्त सम्पदा भावी पुस्ताका लागि शिक्षा पद तथा राष्ट्रिय एकता, सद्भाव, सुरक्षा र समृद्धिको आधार तयार गर्न मद्धत पुग्ने छ । हाम्रा पूर्खाले सबै जात मिलि देश निर्माण गरेका थिए । हामी सबै मिलि यसको भविष्य निर्माण गरौ भन्ने सन्देश नेपाल र नेपालीलाई गोरखाले प्रदान गरेको छ । वि.स. १६६६ को अभिलेखसहितको नगरा, वि.स. १७७१ को धातुको तोप, दरवार संग्रहालयमा प्रदर्शनमा रहेका लिच्छवीकालिन चैत्यलगायतका महत्वपूर्ण वस्तुहरूले यसको प्रसिद्धि बढाउन मद्धत पुऱ्याएका छन् । हाम्रा भावी सन्ततीलाई पूर्खाहरूले देशको स्वतन्त्रता र स्वाधिनताको रक्षागर्न खेलेको अहम् भूमिका साथ राष्ट्रियताप्रतिको भावना जागृत गराउने विगत ईतिहासका साक्षी यहाँको कला वास्तुकलालाई जीवन्त तुल्याउँदै गौरव महशुस बनाउने हुँदा यिनको मौलिक संरक्षण गर्दै विश्व सम्पदास्थलका रुपमा अगाडि लैजानुपर्ने आजको आवश्यता हो ।

## निष्कर्ष

एक अस्थिर युगको अन्त्यपछि भएको युगान्तकारी परिवर्तनको सफल नेतृत्व तत्कालीन गोरखा राज्यले लियो । गोरखा राज्यले जन्माएको अभुतपूर्व शक्तियुक्त सुसंगठित फौजले अन्तराष्ट्रिय चर्चा समेत कमायो । राजा रामशाहको पालादेखिको थरघर परम्परा तथा रितिस्थिति अनुसार साविकका जिम्मेवारी अनुरुपका कार्यहरू हालसम्मनै सञ्चालित छन । लिच्छविकालदेखिको ऐतिहासिक विरासत बोकेको, मध्यकालीन बास्तुकलाको अनुपम नमूना, नयाँ नेपालका सुत्रधार एवं राष्ट्रिय एकताको प्रतिक राजा पृथ्वीनारायण शाहको जन्मस्थान भएको कारणले गोरखा दरबार क्षेत्र विश्व सम्पदाको संभावित सूचीमा रहेको छ । विश्व सम्पदाको संभावित सूचीमा सूचिकृत गोरखा दरबार क्षेत्रलाई विश्व सम्पदा सूचीमा सुचीकृत गर्ने आधारहरू पहिल्याई यहाँको ऐतिहासिक साँस्कृतिक तथा आध्यात्मिक मूल्य र मान्याको संरक्षण गर्ने कार्यलाई तदारुकताको साथ अघि बढाउनको लागि सबै सरोकारवालाहरूको तत्काल ध्यान जान जरुरी देखिन्छ ।

## सन्दर्भ ग्रन्थसूची


दिनेशराज, पन्त (२०४१), गोरखाको इतिहास ( पहिलो- चौथो भाग). काठमाडौंः दिनेशराज पन्त ।

बज्राचार्य, धनबज्र (२०५३), लिच्छविकालका अभिलेख (द्वितीय संस्करण भम.). कीर्तिपुरः नेपाल र एशियाली अनुसन्धान केन्द्र ।

श्रेष्ठ, टेक बहादुर, पर्वत राज्यको ऐतिहासिक रुपरेखा ।

शर्मा, वालचन्द्र (२०३३), नेपालको ऐतिहासिक रुपरेखा, वाराणासीःकृष्णकुमारी देवी ।

आचार्य, वावुराम (२०६१), श्री ५ वडामहाराजधिराज पृथ्वीनारायणशाहको संक्षिप्त जीवनी, काठमाडौँः साझा प्रकाशन ।

शर्मा, गोपीनाथ (२०७१), चौविसी राज्यको इतिहास, काठमाडौँः मकालु प्रकाशन गृह ।

वैद्य, तुलसीराम र मानन्धर, त्रिरत्न (२०५३), आधुनिक नेपालको प्रशासनिक ईतिहास, कीर्तिपुरः ने.ए.अ.के. २०५३ ।

गण्डकी अञ्चलका वर्गीकृत सांस्कृतिक सम्पदाहरूको विवरण पुरातत्व विभाग (२०६९) ।

प्राचीन नेपाल (विभिन्न अंकहरू), काठमाडौँः पुरातत्व विभाग ।

# प्रस्तावित विश्वसम्पदा सूचीमा भूर्तिका देवल



✍ प्रकाश खड्का*

**दुल्लु राम्रा कीर्तिखम्ब, दैलेख राम्रो गढी**
**काँ पुगेर के फल खान्छौ, भन्देउ मैना चरी**
**भूर्ति राम्रा पञ्चदेवल, दैलेख राम्रा गढी**
**माइती देश रैबार पुऱ्याऊ, पुगी जसै गरी**[1]

उपर्युक्त देउडा मार्फत् जनजिब्रोमा झुण्डिएका भूर्तिका देवलहरू नेपालका लागि संख्यात्मक रूपले अद्वितीय छन् । यस लेखमा ऐतिहासिक र सांस्कृतिक पक्ष गौण छ । कारण, यस विषयका सम्बन्धमा जे जति अध्ययन भएको छ, काठमाडौंमा बसेर तोकिएको समयसीमाभित्र त्योभन्दा बढी ओकल्न सक्ने सामर्थ्य ममा छैन । र, मैले धृष्टता पनि गरेको छैन । विश्व सम्पदा सूचीमा नपरेका तर पर्नुपर्ने आधार भएका थुप्रै सम्पदाहरू छन् । ती सम्पदाहरूलाई विश्व सम्पदा सूचीमा राख्नको लागि विभिन्न क्षेत्र तथा विज्ञसमेतको सुझाव अनुरुप इ.सं. २००८ जनवरी ३० मा भूर्तिका २२ देवल क्षेत्रलाई सम्भाव्य सूचीमा प्रस्ताव गरिएको थियो । प्रस्ताव भएको करिब डेढ दशक पुग्न लाग्दा त्यसका लागि के कति गृहकार्य भएको छ ? ऐतिहासिक तथा वास्तुकलाको खोजी कार्य कहाँसम्म पुगेको छ ? संरक्षण, पर्यावरण र प्रर्वधनका के कस्ता पहलहरू गरिएका छन् ? यी यावत् प्रश्नहरूसहित एक दशक अघि भूर्ति र दैलेख जिल्लाका देवलहरूको स्थलगत अध्ययन र त्यस यताको समयमा देवलहरूको संरक्षण, संर्वधन र प्रवर्धनका बारेमा मेरा आँखाले

1 यस लेखमा प्राप्त तथ्यांक एवं सामग्रीका लागि नेपाल फोटोपत्रकार महासंघका केन्द्रीय सचिव विशाल सुनारको सहयोगका लागि आभारी छु ।

* स्वतन्त्र अन्वेषक

देखेका दृश्यहरूलाई यस लेखनीमा समावेश गरेको छु ।

**१. देवलहरूको संग्रहालय दैलेख**

नागराजद्वारा स्थापित खस साम्राज्यको शीतकालिक राजधानी दुल्लु जिल्लागत विभाजनपछि दैलेखमा अवस्थित छ । संख्यात्मक हिसाबले खस साम्राज्यकालमा निर्माण भएका देवलहरू दैलेखमा सबैभन्दा बढी छन् । ती मध्ये प्रमुख देवलहरू निम्नअनुसार रहेका छन् ।[2]

**१.१ नारायण नगरपालिका**

वडा नं. १ कुइकानामा ५ देवलसहित १ देवल बारीमा गरी ६ देवल

वडा नं. २ जारकोटमा १ देवल

वडा नं. ४ देवलकाँडामा  ६ देवल

वडा नं. ६ भूर्तिमा २२ र  पञ्चदेवल

वडा नं. ७ किमुगाँउ ९ वटा देवल र १ अलग गरी १०

वडा नं. ८ तर्तांग १ देवल

वडा नं. ११ विन्ध्यावासिनीमा माखुमा १ देवल

**२.१ महावु गाँउपालिका**

वडा नं. १ दवडामा पञ्चदेवल

वडा नं. ३ मा अलग अलग स्थानमा २ देवल

वडा नं. ५ कासिकाँधमा पञ्चदेवल

**२.२ भैरवी गाउँपालिका**

वडा न २ रावतकोट पञ्चदेवल

वडा नं. ३ कोइराला गाउँमा पञ्चदेवल

वडा नं ३ लम्जीगाउँ (वाणगंगा) ५ पञ्चदेवल देवल

वडा नं. ४ डाँडीमाडीमा १२ वटा खम्वा), बालेकाँडा १

वडा नं. ७ को भोटेगढी बेहुलीको डाँडामा ८ देवल

**२.३ दुल्लु नगरपालिका**

वडा नं. ७ पटांगिनीमा २ देवल

वडा नं. १० भुकाहमा ३  देवल

वडा नं. १२ दहमा पञ्चदेवल

2 विशाल सुनारको टिपोट ।

**२.४ चामुण्डा बिन्द्रशैनी नगरपालिका**

वडा नं. ८ मा डौसुरमा १ देवल

**२.५ गुराँस गाउपालिका**

वडा नं. २ चाल्सामा १ देवल

**२.६ डुंगेश्वर गाँउपालिका**

वडा नं. १ लाकुरीमा १ देवल, अवलपराजुलमा १ देवल

**२.७ भगवतीमाई गाउपालिका**

वडा नं. १ स्थित गन्म वारि १, मध्य १ र पगनाथ १ गरी ३ वटा देवल

कतिपय देवलहरू भत्किसकेका छन् । कति त भत्किँदो अर्थात् जीर्ण अवस्थामा छन् । कतिपयको नामोनिसान मेटिसकेको छ भने केहीका जगभाग मात्र बाँकी छन् । भत्किसकेका देवलहरूको अभिलेख छैन । यसर्थ दैलेखलाई देवलहरूको खुला संग्रहालय हो भनी भन्न सकिन्छ ।

**२. गर्भमै छ इतिहास**

प्रारम्भमा मैले भनिसकेको छु, योगी नरहरिनाथले इतिहास प्रकाश[3] र धनवज्र वज्राचार्यले पूर्णिमा[4]मा जति लेखेका छन्, त्यसलाई स्वीकार्नु, नकार्नुको मसँग विकल्प छैन । भूर्तिका देवलहरू कहिले निर्माण गरिएका थिए ? कसले बनायो ? कुन प्रयोजनका लागि स्थापत्य गरिएका थिए ? उपर्युक्त सवालका रहस्यहरू भूर्तिको गर्भभित्रै लुप्त छन् ।

पहिलोपल्ट योगी नरहरिनाथले विषय उठान गरेका छन्- **भुर्ति २५ देवलमध्ये २३ शेष १ मगराहा ।**[5] मोहनप्रसाद खनालले भूर्तिको देवल क्षेत्रमा प्राप्त शाके संवत् १३३१ (वि.सं. १४६६) भएको अभिलेखको विवरण (शिलापत्रको तस्बीर प्रकाशित छैन) दिएका छन् । यस अभिलेखमा पनि **देवल** शब्द उल्लिखित छ । यसभन्दा पहिला दुल्लु पादुकास्थानको अशोकचल्लको स्तम्भ अभिलेखमा देवल शब्द उत्कीर्ण छ ।[6] परन्तु त्यस क्षेत्रका स्थानीय अथवा अन्य कुनै पनि अन्वेषकले अभिलेख देखेको एवं प्रकाशित गरेको देखिँदैन । अभिलेख पनि त्यहाँ देखिँदैन ।

ऐतिहासिक दृष्टिबाट हेर्दा जुम्लाका खस मल्ल साम्राज्यमा दुल्लु शितकालिक राजधानी थियो भने खस साम्राज्यको पतनपछि यो विलासपुर दैलेख राज्यको राजधानीको रूपमा रहेको थियो । यसैले यी देवलहरू खस राजाहरूको समयमा

3 इतिहास प्रकाश १ अंक । इतिहास प्रकाश २ अंक १ भाग । इतिहास प्रकाश २ अंक २ भाग । इतिहास प्रकाश २ अंक ३ भाग ।

4 धनवज्र वज्रचार्य पूर्णिमा पूर्णांक ४ : १४-२९।

5 इतिहास प्रकाश २ अंक १ भाग : ४१ ।

6 दुल्लु पादुका स्थानको यस अशोकचल्लको शिलालेखको आधिकारिकताका बारेमा ऐतिहासिक महेशराज पन्तले (बार्स एण्ड मिडियम) मा सप्रमाण टिप्पणी गरेका छन् । २००९ इ.सं.



भूर्ति देवल

वा खस राज्यबाट दैलेखलाई स्वतन्त्र राज्य घोषणा गरी राज्य गर्ने संसारी बर्मा वा उनका उत्तराधिकारीहरूबाट निर्माण भएको हुनुपर्दछ । देवलको वास्तुशैली र निर्माण प्रविधिलाई दष्टिगत गर्दा पनि चौधौँदेखि सोह्रौँ शताब्दीतिरको अवधिमा निर्माण भएको अनुमान हुन्छ ।[7] यस संस्थागत उद्घोषका पनि कुनै आकर छैनन्, बरू भावानात्मक विचार पोखिका छन् ।

बनोटको प्रकृति हेर्दा यी देवलहरू एकै समयमा निर्माण भएका नभई विभिन्न समयमा निर्माण भएका देखिन्छन् ।

### ३. शैली–संरचना

एकै स्थानमा, ठूलो संख्यामा भूर्ति देवल क्षेत्र नेपालका लागि अद्वितीय छ । २२ देवल जीवन्त रहेको भूर्तिमा स्थानीयका अनुसार पहिला २५ देवल थिए । दुई देवलका आधारभागका प्रस्तरहरू अझै पनि देखिन्छन् । अधिकांश मन्दिरहरू एकल छन् । एउटा मण्डपसहितको जोडी देवल छ । एकै स्थानमा यतिका ठूलो संख्यामा नेपालमा अन्यत्र पाइएका छैनन् । भुर्तिका सबै देवल एकै आधारशिलामाथि छैनन् । संख्यात्मक हिसाबमा एकै आधारशिलामाथि जारजरकोट घोगीका १३ चैत्य (छार्तेन) र जुम्ला महतगाउँका १२ चैत्य (छोर्तेन) बनेका छन् ।

7 भेरी अञ्चलका वर्गीकृत सांस्कृतिक सम्पदाहरूको विवरण २०७२ : २१ ।

आकारमा सबैभन्दा अग्लो ६ मी. र सबैभन्दा सानो देवल १.५ मी. अग्लो छ ।[8] सबै देवलहरू प्रस्तर (काटेर मिलाइएका)द्वारा निर्माण गरिएका छन् ।

स्थलगत अध्ययनको क्रममा भूर्तिका देवलक्षेत्रमा फलामका जोर्नी प्राप्त भएको थियो । आकारमा केही सानो भएपनि बनोटमा काँक्रेविहारका भग्नावशेषबाट प्राप्त जोर्नीझैँ दुरूस्तै छ ।

देवलहरूको समीप उत्तरी शिरानमा ढुंगेधारा छ । ढुंगेधाराको अवस्थितिले समेत यस क्षेत्रका देवलहरू निकै प्रसिद्ध रहेको, देवलमा आउने आगन्तुकको सुविधाका लागि पानीको व्यवस्था गरिरएको देखिन्छ ।

पुरातत्व विभागले भूर्तिका देवललाई क वर्गमा विभाजित सम्पदा मानेको छ । वर्ग विभाजनले प्रस्तावित विश्वसम्पदाको सूचीकरणमा के कति अर्थ राख्छ, त्यो पनि खोतल्ने प्राविधिक दक्षता मेरो होइन ।

## ४. प्रस्तावित विश्व सम्पदा पश्चात्

विश्वसम्पदा सूचीमा सूचीकृत भइसकेपछिका नेपालका सांस्कृतिक विश्वसम्पदास्थलहरू पर्यावरणको अवस्था असन्तुलित भौतिक पूर्वाधारको निर्माणको गति, आधुनिक आवासको निर्माणको अस्वाभाविक वृद्धिदर र संरक्षणमा सजिलोपनाको खोजी तथा प्रविधिको प्रयोगले हिजोभन्दा आज र आजभन्दा भोलि बिग्रदो छ । रैथाने ज्ञान, सीप, कला र प्रविधिभन्दा भेनिस चार्टरका दफा उपदफाहरूले महत्व पाएका छन् । सूचीकृत भइसकेपछि पर्यावरणका दृष्टिले नेपालका सांस्कृतिक विश्वसम्पदास्थलहरू विवादमुक्त रहन नसकेको परिप्रेक्ष्यमा दैलेखका भूर्तिका देवलहरूलाई विश्व सम्पदास्थलमा समावेश गर्नका लागि प्रस्ताव गरिएको पनि १५ वर्ष पुग्न लागिसकेको छ । यस डेढ दशकको समयमा भूर्तिसहित दैलेखका सांस्कृतिक सम्पदाहरूको संरक्षण र प्रवर्धनका सम्बन्धमा मैले देखेका, मनमा उठेका टिप्पणीहरूलाई लिपिबद्ध गरेको छु ।

### ४.१ जीर्णोद्धार

संकटापन्न अवस्थामा रहेका देवल केही हदसम्म भए पनि संरक्षण भएका छन् । देवल क्षेत्र सीमांकन भएको छ । पुरातत्व विभाग र स्थानीय तहबाट आंशिक रूपमा जीर्णोद्धार भइसकेको छ । देवल क्षेत्र चारैतिर काँडेतारले घेरिएको छ । देवल वरीपरीको झारपातहरू सफा गरिएका छन् । जीर्णोद्धार सिमेन्टले जोडेर देवलहरू टालटुल गर्ने काम पनि गरिँदै आएको छ ।[9]

प्रस्तावित विश्वसम्पदा स्थल भूर्तिका देवलहरूको पूर्वी शिरानमा एउटा कलात्मक ढुंगेधारा छ । वेवारिसे अवस्थामा रहेको यो ढुंगेधाराको वि.सं. २०७८।७९ मा नारायण नगरपालिकाद्वारा जीर्णोद्धार गरिएको छ । ढुंगेधाराको जीर्णोद्धार

8 डिल्लीराज शर्मा २०५८ : ९४ ।
9 विश्व के.सी. (पोखरेल) : ११९ ।

गरिए पनि नियमित संरक्षणको अभावमा ढुंगेधारामा झारपात उम्रिसकेका छन् । पहिलादेखि छायाँमा परेको यो ढुंगेधारामा पानीको मूल सुकीसकेको छ ।

### ४.२ प्राथमिकतामा सडक

भूर्तिका देवल भएर दैलेख बजार हुँदै महाबुसम्म पुग्ने प्राचीन गारेटो/घोडेटो बाटो ट्र्याक्टर, बससहितका सवारी साधन चल्ने सडकमा परिणत भएको छ । यस अर्थमा वर्तमानमा देवलभन्दा बढी महत्व सडक हुन आएको छ । सडकमा वजनदार सवारीसाधन चल्दा देवलको भूगर्भमा कति कम्पन्न हुन्छ, कुनै लेखाजोखा छैन । न त वातावरणीय अध्ययन गरी सडकको निर्माण भएको होस् ।

### ४.३ संरक्षणमा जनसहभागिता

सामान्य रेखदेख पनि नभएको, अतिक्रमणको चपेटामा परी नष्ट हुने क्रममा भएको[10] भूर्तिको देवल क्षेत्रमा काँडेतारबारको सुरक्षा प्रबन्ध छ । झारपात हटाइएको छ । देवलहरूको मौलिकतालाई गिज्याउने गरी आधुनिक निर्माण सामग्रीद्वारा बनाइएको प्रवेशद्वार छ । कुनै पनि निकायबाट नियमित रेखदेखको व्यवस्था छैन । अवलोकनका लागि प्रवेशद्वारको ढोका खुला छ । भूर्तिका देवलको शिरमा चढी हासखेल गरेको दृश्यले जो कोही सम्पदाप्रेमी द्विविधा हुन्छ- सवाल जनचेतनाको हो कि संस्कारको ।

## ५. पहिला राष्ट्रिय सम्पदा, अनि मात्र विश्वसम्पदा

जुम्लापछि खसमल्ल शासकहरूको प्राचीन अभिलेख-प्रमाण प्राप्ति भएको स्थानका रूपमा दैलेख प्रसिद्ध छ । भूर्तिका देवलहरूलाई पुरातत्व विभागले 'क' वर्ग[11]मा राखेको छ । काठमाडौं उपत्यकामा सात स्थान भएझैं भूर्तिसहित किमगाउँका १० देवल, खसमल्ल राजाहरूको ग्रीष्मकालिक राजधानी दुल्लु, मूर्तिकला एवं धार्मिक रूपले वैशिष्ट्यभूमि पादुकास्थान, शिरस्थान, नाभीस्थान गरी ५ स्थानलाई एउटै सांस्कृतिक विश्वसम्पदास्थलका राखी प्रस्ताव संशोधन गरिनु अपरिहार्य देखिन्छ ।

### ५.१ सम्भावनाभन्दा चुनौती धेरै छन्

भूर्तिका देवलहरू विश्वसम्पदा सूचीमा प्रस्तावित भएको समयदेखि अहिलेसम्मको आँकलन हेर्दा संरक्षण ठूलो चुनौती देखिएको छ । आधुनिकता, बजेटको पर्याप्तता, बढ्दो अव्यावस्थित विकास, भौतिक पूर्वाधारको निर्माण जस्ता कारकहरूले प्राचीन रिक्थहरू क्षय हुँदै गइरहेका छन् । सडकमा रहेका सम्पदा सारिएका छन् । प्राचीन ढुंगेधारामा जबरजस्ती सिमेन्टद्वारा स्वरूप बिगारिएका छन् । सदियौंदेखि बेवारिसे अवस्थामा रहेका देवलहरू विश्वसम्पदाको अभियान चल्दा समेत बेवारिसे अवस्थामै छन् । बरू झन् बिग्रिएका छन् । संरक्षणका प्रयासहरू नगन्य छन् ।

10 भेरी अञ्चलका वर्गीकृत सांस्कृतिक सम्पदाहरूको विवरण २०७२ : २१ ।
11 भेरी अञ्चलका वर्गीकृत सांस्कृतिक सम्पदाहरूको विवरण २०७२ : २१ ।

## ५.२ स्थानान्तरणका प्रतिनिधि उदाहरण[१२]

दैलेख बजरको प्रवेशद्धार सरस्वाती माविको परिसर भित्रै रहेको एक खम्बा हराएको छ । नारायण नगरपालिका वडा नं. ८ ठालुडाडामा रहेका दुई खम्बा दैलेख-सुर्खेत सडकमा पारिएपछि पहिले भएको स्थानबाट करिब २० मिटर तल सारिएका छन् । दैलेख बजारमा सारिएका ३ खम्बा मूल ठाउँ पहिचान हुन सकेको छैन । दैलेख नयाँ बजारको बिचोबिच भएका चार खम्बा पहिलेको स्थानबाट नयाँ ठाँउमा स्थानान्तर गरिएका छन् ।

सडककै कारण दुल्लु नगरपालिका वडा नं. १० का ७ खम्बा जोखिममा परेका छन् । दुल्लु नगरपालिका १२ वडाको दहमा रहेको देवल पनि सडक बिस्तारले प्रभावित बनेको छ ।

दुल्लु ७ भुमिथान ढुंगेधारा उत्खनन गरी करिब ४ मिटर पुरिएको अवस्थाबाट बाहिर निकालिएको छ । तर निजी जग्गामा भएका कारण जग्गा खरिद प्रक्रियामै रोकिएकाले काम अगाडि बढ्न सकेको छैन ।

केही वर्षअघि भैरवी गाउँपालिका ३ स्थित डाडीमाडी बजारको मध्यभागमा रहेका ऐतिहासिक निशानीहरू १२ खम्बाहरूलाई सडक बिस्तारको क्रममा पहिले भएको स्थानदेखि एकै ठाँउमा सारिएको छ ।

जति पनि देवलहरू रहेको छन्, अधिकाँश निजी जग्गामा बेवारिसे अवस्थामा रहेको छ । जीर्ण छन् । भत्किरहेका छन् । धेरै जसो एकल देवल भत्किएर पाताल भएका छन् ।

## ५.३ ढुंगेधाराको नासिदो मौलिकता

परम्परागत प्रविधि, परम्परागत वास्तुकलाको सौन्दर्यको रूपमा जीवन्त रहेका दैलेखका ढुंगेधाराहरू मौलिकता संकटापन्न अवस्थामा पुगेका छन् । जल प्रवाह बन्द भएका ढुंगेधाराहरू खण्डहर बनेका छन् । जलप्रवाह भइरहेका अधिकांश ढुंगेधाराहरू पर्याप्त बजेटको उपलब्धता, छिटो र सजिलो माध्यम सिमेन्टको प्रयोगद्वारा नयाँ स्वरूप दिइएका छन् । अधिकांश प्राचीन ढुंगेधाराको मौलिकता लोपोन्मुख छ ।

## ६. उपसंहार

खस साम्राज्यको पतन र खस साम्राज्यकै शिरोधार्य गर्ने टुक्रे राज्यहरूको अवसानपछि देवलहरूको चलिआएको जीवन्त परम्परा पनि नासिन, मासिन गएको थियो । पश्चिम नेपालका करिब करिब सम्पूर्ण देवलहरूमा धार्मिक एवं सांस्कृतिक परम्परा मृतप्राय देखिन्छन् । यसकै उपज भन्न सकिन्छ, धेरैजसो देवलहरू उपेक्षाकृत, बेवारिसे एवं संरक्षण विहिन स्थितिमा छन् । यतिसम्मकी

12 विशाल सुनारको टिपोट ।

कतिपय देवलहरू स्थानीयका खेतबारीमा छन् । सूचीकरण प्रस्तावनादेखि अहिलेसम्म प्रामाणिक इतिहासको खोजी नगन्य छ । विश्वसम्पदा सूचीकरण अभियानको बिगुल बज्दा समेत सांस्कृतिक सम्पदाहरूको स्थिति हिजोभन्दा आज र आजभन्दा भोलि झन् बिग्रदो अवस्था छ । तर सबै सत्यानाशै भएको, सक्किसकेको स्थिति छैन । चलनचल्तीको भनौ अथवा सजिलो बज्रको जोडाइमा होइन कि रैथाने प्रविधि अनुसार वास्तवमा संरक्षण गर्न सके दैलेखका अधिकांश सम्पदाहरूलाई जीवन्त बनाउन सकिने सम्भावना प्रसस्तै छ । यसका लागि रैथाने सीप, कला र प्रविधिलाई आत्मसाथ गरेर संरक्षणको अभियान थाल्नु असम्भव छँदैछैन । अनि मात्रै दैलेखमा विश्वसम्पदाको अभियानले सार्थकता पाउला कि !

**सन्दर्भस्रोत तालिका**


इतिहास प्रकाश २०१३

वि.सं. २०१३ मा काठमाडौँबाट इतिहास प्रकाशक संघद्वारा प्रकाशित योगी नरहरिनाथको इतिहास प्रकाश २ अंक भाग १ ।

डिल्लीराज शर्मा २०५८

वि.सं. २०५८ मा काठमाडौँबाट नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानद्वारा प्रकाशित डिल्लीराज शर्माको **पश्चिम नेपालको मूर्ति तथा वास्तुकला** ।

भेरी अञ्चलका वर्गीकृत सांस्कृतिक सम्पदाहरूको विवरण २०७२

वि.सं. २०७२ मा काठमाडौँबाट पुरातत्व विभागद्वारा प्रकाशित **भेरी अञ्चलका वर्गीकृत सांस्कृतिक सम्पदाहरूको विवरण** (द्वितीय संस्करण) ।

मोहनप्रसाद खनाल २०५५

वि.सं. २०५५ मा काठमाडौँबाट नेपाल र एसियाली अनुसन्धान केन्द्रद्वारा प्रकाशित मोहनप्रसाद खनालको **पश्चिम नेपालका मूर्ति र स्थापत्य ।**

विश्व के.सी. (पोखरेल) २०६८

वि.सं. २०६८ मा काठमाडौँबाट अभान्त को-भेन्चर्सद्वारा प्रकाशित विश्व के.सी. पोखरेलको **कीर्तिखम्ब** ।


✦✦✦

# रामजानकी मन्दिरको ऐतिहासिक र सांस्कृतिक पृष्ठभूमि एंव महत्व



✍ मञ्जु सिंह भण्डारी (थापा)*

**परिचय**

जानकी मन्दिर मधेश प्रदेशको धनुषा जिल्लाअन्तर्गत जनकपुर उपमहानगरपालिका भित्र पर्दछ । विश्व सम्पदाको सम्भाव्य सूचीमा समावेश गरिएको रामजानकी मन्दिरको सम्बन्धमा जानकारी लिदा मिथिला क्षेत्रको बारेमा चर्चा नगरी अधूरो रहन्छ । प्रचिन मिथिला क्षेत्रमा पर्ने जनकपुर एक महत्वपूर्ण पौराणिक तथा आध्यात्मिक नगरकोरुपमा परिचित छ । मिथिला क्षेत्रको प्रमुख भाषा मैथिली हो र यो भाषा बोल्ने मानिसहरूलाई मैथिल भन्ने गरिन्छ । प्राचिन मिथिला क्षेत्रमा भारतका केही भू-भाग समेत पर्दछन् । मिथिलाको उल्लेख सर्वप्रथम हिन्दू धार्मिक ग्रन्थ रामायणमा भएको थियो । रामायणका अलावा मिथिलाको उल्लेख महाभारत, पुराण तथा जैन र बौद्ध ग्रन्थहरूमा समेत रहेको बुझिन्छ । वर्तमान समयमा नेपालको नयाँ प्रशासनिक विभाजन अनुसार मधेश प्रदेशअन्तर्गत रहेका सप्तरी, सिराहा, धनुषा, महोत्तरी, सर्लाही, रौतहट, बारा र पर्सा जिल्ला तथा प्रदेश नं. १ अन्तर्गत रहेका मोरङ र सुनसरी जिल्ला मिथिला क्षेत्रभित्र पर्दछ भने भारतको विहार राज्यको चम्पारण, सीतामढी, वैशाली, मुजफ्फरपुर, दरभंगालगायतका जिल्लाहरूलाई पनि मिथिला क्षेत्र भन्ने गरिन्छ ।

विभिन्न धर्मशास्त्रहरूमा मिथिला क्षेत्रमा रहेको विदेह जनकवंशका शासकहरूले राज्य गरेको भन्ने रहेको छ । यस वंशका प्रथम शासक निमि रहेको कुरा *महेन्द्र मलंगियले मै जनकपुर हुँ भन्ने पुष्तक* मा उल्लेख गरेका छन् । त्यसपछि यस राज्यमा देवरत, शिरध्वज जनक, क्षमामी, वहुलाश्व र करालजनक मिथिलाका

* पुरातत्व अधिकृत,

राजा भएका थिए भन्ने महेन्द्र मलंगियको मै जनकपुर हुँ भन्ने पुस्तकको पृष्ठ १५ मा उल्लेख छ । यस विदेहमा जनकवंशका शासक शिरध्वजको विशेष महत्व रहेको देखिन्छ । उनको समयमा यज्ञवल्क्य, मैत्रेयी, गार्गी जस्ता प्रकाण्ड विद्वान तथा विदुषिहरूको जमघट भई शास्त्रास्त्र वादविवाद भइरहने कुरा विभिन्न धर्मशास्त्रहरूमा उल्लेख गरिएको पाइन्छ । त्यसैले यस समयको मिथिलालाई ब्राह्मण सहित्यको स्वर्णयूग मानिन्छ  भने यस समयमा महिलाको पनि विशेष भूमिका रहेको र उनीहरूकोसम्मानजनक स्थान रहेको कुरा पनि बुझ्न सकिन्छ । राजा शिरध्वज जनक शिवका परम भक्त रहेको र भगवान शिवल उनको भक्तिदेखि खुशी भई आफ्नो पिनाक धनु उनलाई दिएको कुरा विभिन्न धर्म शास्त्रहरूमा उल्लेख गरिएको छ । यही पिनाक धनुका कारणबाट राजा शिरध्वज जनककी छोरी सीताको विवाह रचिन पुगेको मानिएको छ । अयोध्याका राजा दशरथका छोरा रामले उक्त पिनाक धनुष भाँची सीतासँग विवाह गरेको प्रसँगहरू पनि विभिन्न धार्मिक ग्रन्थहरूमा पाइन्छ । यही धनुषको अवशेषबाट यस जिल्लाको नाम धनुषा रहन गएको भन्ने विश्वास गरिन्छ । जनक राजाको दरवार रहेको कारण जनकपुरको विशेष महत्व रहेको छ । राजा जनकले राज्य गरेको भएर यस ठाउँको नाम जनकपुर रहन गएको भन्ने विश्वास रहेको पाइन्छ । पौराणिककालीन दरवारका अवशेषहरू भने यहाँ उपलब्ध छैनन् । विष्णु धर्म पुराणमा राजा निमिदेखि शिरध्वज जनकको बारेमा उल्लेख गरेको छ ।

विदेहको पतनपछि यस क्षेत्रमा इशापूर्व ६०० देखि ३२५ को विचमा वृज्जी शासकहरूले राज्यको शासन गरेको मानिएको छ । वृज्जि शासनकालमा बुद्ध धर्मले व्यापकता छाइसकेको थियो । वृज्जी शासन कमजोर हुँदै गएपछि अजातशत्रुले सजिलै पराजित गर्यो भनिएको छ । ईशाको सातौं शताब्दीमा नेपाल भ्रमण गर्ने चिनिया यात्री हुयन साङ्गले मिथिला क्षेत्रको पनि भ्रमण गरेको थियो र उनले आफ्नो यात्रा वृतान्तमा मिथिला राज्यको उल्लेख गरेका छन् । उनले आफ्नो यात्रावृतान्तमा वृज्जी शासनकालमा चनसुना (जनकपुर) ज्यादै बिग्रेको अवस्थामा रहेको त्यहाँ अधिकांश हिन्दुहरू रहेको र थोरै संख्यामा मात्र बौद्ध धर्मालम्बी रहेको उल्लेख गरेका छन् । मिथिला क्षेत्र ११औं शताब्दीसम्म पालवंशको प्रभावमा रह्यो । त्यसपछि एघारौं शताब्दीमा हालको बारा सिम्रौनगढमा कर्णाट राजा नान्यदेवले शासन गर्दा मिथिला पनि कर्णाट क्षेत्रमा रहन गयो ।। कर्णाटबंशले राज्य गरेको करिव २३१ वर्षपछि मुसलमानी आक्रमणमा परी कर्णाट राज्य ध्वस्त भएपछि दिल्लीका केन्द्रीय इस्लामी सत्ताका ओइनवार कुलीन राजवंशीले चौधौं शताब्दीदेखि सोह्रौं शताब्दीसम्म शासन चलाएको कुरा डा.दुर्गानाथ झा 'श्रीश', ले आफ्नो पुष्तक मैथीली साहित्यिक इतिहासमा उल्लेख गर्नु भएको छ । १७औं शताब्दीतिर आइपुग्दा मिथिला क्षेत्र मकवानपुर राज्यमा रहन गएको थियो भने पृथ्वी नारायण शाहको नेपाल एकीकरण अभियानमा वि.सं. १८१९ मा उनले

मकवानपुर विजय गरेपछि मिथिला प्रदेश पनि स्वतः नेपालमा गाभिन पुग्यो ।

**रामजानकी मन्दिरको ऐतिहासिक पृष्ठभूमिः**



जानकी मन्दिर पौराणिक पात्र राम सिताको कथा अर्थात रामायणसँग सम्बन्धित मानिन्छ । १७औं शताब्दीमा भारतको लोहागढका सन्त सुरकिशोर दास जानकीका परम भक्त रहेको थिए । उनले जानकीजीको दरवारको खोजी गर्दै आउने क्रममा जानकीको मूर्ति पनि संगै लिएर आएका थिए । उनी भारतको विहार हुँदै सितामढी भएर जनकपुर आएका बेला गंगा सागरमा स्नान गरी विश्राम गर्ने वेला सपनामा उनलाई जानकीजीले दर्शन दिई गंगासागरको नजिकै रहेको निमको बोट मुनी जान संकेत गरी त्यहाँ मेरो महल छ त्यहाँ पूजा गरी बस्नु भन्ने आज्ञा भएपछि सुरकिशोर दासले त्यहीं सानो मन्दिर स्थापना गरेको भन्ने भनाई रहेको पाइन्छ । मन्दिर सञ्चालनका लागि विभिन्न समयमा सेन राजाहरूले जग्गा गुठी राखिदिएको प्रमाणहरू हाल पनि देख्न सकिन्छ । वि.सं. १७८० सालमा राजा मानिक सेनले मन्दिर सञ्चालनका लागि १४०० विगाह जमिन गुठी राखेको र वि.सं. १७९० मा हेमकर्ण सेन र १८६७ मा राजा गिर्वाण विक्रम शाहले सोही गुठी थामिदिएको ताम्रपत्र लालमोहरू हालसम्म पनि रहेको पाइन्छ ।

सुरकिशोर दासले बनाएको यो मन्दिरको महिमा टाढा टाढासम्म फैलियो । भारतको टिकमगढकी महारानी भृषभानु कुमारीले रामजानकी मन्दिरको महिमा सुने निसन्तान रहेको र उनले सन्तान प्राप्तिका धेरै तिर्थस्थलहरूमा जादा पनि सन्तान प्राप्त नभएपछि वि.सं. १९५२ सालमा सुरकिशोर दासले निर्माण गरेको जानकी मन्दिरलाई विशाल रुप दिई शिलान्यास गरी १९६७ सालमा पुरा भएको थियो । यसमा ९ लाख खर्च भएकोले यसलाई नौलखा मन्दिर पनि

भन्ने गरिन्छ। उनले मन्दिरको निर्माण सम्पन्न गरेपछि पुत्र लाभ भएको भन्ने भनाई रहेको पाइन्छ। मन्दिर निर्माणको केही भाग बाँकी रहेकोले उनकी बहिनि नरेन्द्रदेवीले पुरा गरिदिएकी थिइन भनिन्छ (स्मारिका २०१८ अन्वेषण मिथिला से अवध तक) वि.सं. १९९० सालको भूकम्पमा रामजानकी मन्दिरमा क्षति भएपछि जीर्णोद्धार गरिएकोमा। पुन वि सं २०७२ सालको भुकम्पबाट केही क्षति भएपछि पुरातत्व विभागबाट जीर्णोद्धार गरिएको थियो।

**रामजानकी मन्दिरमा महन्त परम्परा**

मठको यस्तो संस्था हो जहाँ गुरुले आफ्नो शिष्यहरूलाई शिक्षा दिक्षा उपदेश दिने गरिन्छ । हिन्दू धर्म संस्कृतिको निरन्तरता, संरक्षण व्यवस्थापनको लागि नै मठ परम्पराको शुरुवात भएको थियो। मठ अर्थात पीठ परम्पराको शुरुवात भारतबाट भएको पाइन्छ। हिन्दु धर्मका संरक्षक आदि शंकराचार्यले हिन्दु धर्मलाई एकत्रित र व्यवस्थित गर्नका लागि भारतमा चार मठ निर्माण गरेकाका थिए। भारतको उत्तर दिशामा बदरिकाश्रममा ज्योतिर्पिठ, पश्चिम दिशामा द्वारिकाशारदा पिठ, दक्षिण दिशामा शंगेरीपिठ र पूर्व दिशामा जगन्नाथपुरी गोवर्द्धन पीठ। शंकराचार्यले यी पीठहरूको स्थापनाका साथ साथै पीठका पिठाधिसको पनि नियुत्त गरेका थिए। हिन्दू धर्म संस्कृतिको संरक्षण, निरन्तरता र व्यवस्थापनको लागि महत्वपूर्ण केन्द्र हुँदै गए र हिन्दु धर्म संस्कृतिको संरक्षणमा यी मठहरूको महत्वपूर्ण भूमिका रहेको पाइन्छ।

मठको प्रभाव नेपालमा पनि परेको देखिन्छ। काठमाडौँ उपत्यकामा १४औं शताब्दी देखि मठ परम्पराको शुरुवात भएको देखिन्छ भन् नेपालको तराई क्षेत्रमा १७औं शताब्दीदेखि मठ परम्पराको शुरुवात भएको मानिन्छ। महोत्तरीको मटिहानी मठलाई ठूलो मठ मानिन्छ। तराई क्षेत्रमा भएका मठहरूमा विधिवतरुपमा महन्तको नियुक्ति यही मटिहानी मठका मानमहन्तबाट हुने गर्दछ। रामानन्द सम्प्रदाय सनातन धर्मको नीति अनुरुप संस्थापक शिर्ष गुरु सुरकिशोर दासबाट व्यवस्थापन गर्दै आएको परम्परालाई निरन्तरता दिदै मठका महन्तले रो जेको आफ्नो चेलालाई उत्तराधिकारी तोकेको हुन्छ। यहि उत्तराधिकारी नै पछि महन्तले कुनै कारणले महन्तबाट सन्यास लिएमा कुनै मुद्धा लागी बरखास्त हुनु परेमा वा महन्तको मृत्यु भएमा सोही उत्तराधिकारी नै महन्तको रुपमा चयन हुने गर्दछन्। महन्तको मृत्यु भएमा उनले चुनेको उत्तराधिकारीले १३ दिनसम्म काजकृया गर्ने गर्दछन् १३औं दिनका दिन मटिहानी मठका मानमहन्तबाट पगरी गुथाई विधिवत रुपमा महन्त घोषणा गर्ने प्रचलन शुरुदेखि नै चलिआएको छ। सुरकिशोर दासबाट सुरु भएको जानकी मन्दिरका महन्त परम्परा हालका रामतपेश्वर दासले १५औँ महन्त हुन्। उनले आफ्ना चेला रामरोशन दासलाई उत्तराधिकारी चयन गरिसकेका छन्। रामतपेश्वर दासपछि रामरोशन दास जानकी

मन्दिरका १६औँ महन्त हुनेछन् । जसरी एउटा घर परिवारलाई सभ्य अनुसासित र व्यवस्थित बनाउन घरमुलीको विशेष भूमिका रहेको हुन्छ त्यसैगरी मठलाई पनि सभ्य अनुसासित र व्यवस्थित बनाउनमा महन्तको विशेष भूमिका रहेको हुन्छ । गुरुशिष्य परम्परालाई अनुशण गर्दै विभिन्न गुठीहरू समेतको व्यवस्थापन गर्दै आएको जानकी मन्दिरका महन्तको विषयमा सम्मानित सर्वोच्च अदालतले गरेको परमादेशको फैसलापछि गुठी संस्थानबाट महन्त, पुजारीलगायतका जनशक्ति व्यवस्थापन निर्देशिका, २०७७ निर्माण गरी लागू भएकोले सोही निर्देशिकामा भएको व्यवस्था बमोजिम महन्तको सिफारिसमा महन्तका शिष्य एंव जेष्ठ चेला उत्तराधिकारी नियुक्त गर्ने नयाँ नियम लागू भए अनुसार रामरोशन दासलाई सोही नियमानुसार उत्तराधिकारी चयन गरिएको बुझिएको छ ।

**रामजानकी मन्दिरको वास्तुकला**

जानकी मन्दिर कला र वास्तुकलाको लागि विश्व प्रसिद्ध छ । भव्य रुपमा बनेको यो मन्दिर हेर्दा दरवार जस्तै देखिन्छ । यसलाई जानकी माताको दरवारको नामले पनि चिनिन्छ । लगभग ४८६० वर्ग फिटको घेरा भित्र लगभग ७० फिटको उचाइमा रहेको दुई तले मुगल वास्तुशैलीमा निर्माण गरिएको छ । चुनासुर्किको जोडाईमा इटाको गारो लगाई निर्माण गरिएको यो मन्दिर ५ खण्डमा विभाजित गरी बनाइएको यो मन्दिरमा ६० वटा कोठाहरू रहेका छन् । विभिन्न प्रयोजनका लागि प्रयोग गरिएको यो मन्दिर वरिपरि मुगल शैलीमा काठमाण्डौ उपत्यकामा प्रचलित चौघेरा बनौटमा निर्माण गरिएको छ । मुल मन्दिर प्रवेश गर्ने पुर्वतर्फको संरचनाको माथिल्लो भाग जुन आकर्षक ढंगबाट सजाई बार्दली निकाली बनाईएको छ जसलाई सिशमहल भनिन्छ । यहां मुल महन्तको वासस्थान रहेको छ । दक्षिणतर्फको भागमा मन्दिरको भान्छा घर रहेको छ, पश्चिमतर्फको भागमा हाल मिथिला संग्रहालय स्थापना गरिएको छ । यो भागमा ग्लमभच न्चयगलम कोठा पनि रहेको छ यसलाई पनि संग्रहालय प्रयोजनका लागि प्रयोग भएको छ । उत्तर तर्फको आधा भागमा महन्तका उत्तराधिकारीको निवास बनाईएको छ भने अन्यमा साधुसन्तहरूका लागि प्रयोग भएको देखिन्छ । जानकी मन्दिरको वास्तुशैली विशिष्ट छ । यहाँ बुर्जै बुर्जा बनाईएको छ भने बुर्जामा ठुला लगभग २२ वटा गजुर रहेको छ भने सानो लगभग चारसयको हाराहारीमा गजुर राखिएका छन् । जानकी मन्दिरको वाहिरी संरचनाको छतका बुर्जामा राखीएका गजुर हाल देखिदैन तर गजुर अडाउनका लागि बनाईएको स्ट्याण्ड अहिले पनि देख्न सकिन्छ । मुल मन्दिरको बाहिरी संरचनाको चारै कुनामा बुर्जा सहितको गोलाकार स्तभ्भ रहेको छ । मन्दिर परिसरबाट प्रवेश गर्न उत्तर तर्कफको ठुलो ढोका माथी प्रस्तरको जोडी सिंहको विचमा अंग्रजीमा एक लेखिएको छ जसको कसैले क्ष्तब एबबिअभ को अर्थ लगाएका छन् कसैले टिकमगढका राजा प्रताप

सिंह भनेका छन् भने कसैले टिकमगढको राजाको लोगो हो भनेका ।

जानकी मन्दिरको मुल प्रवेशद्धारबाट प्रवेश गरेपछि विच भागमा ८४ फिट लम्बाई, ४७ फिट चौडाई र लगभग ७० फिट उचाईको मुख्य मन्दिर रहेको छ। मन्दिरमा उत्तर, दक्षिण र पुर्व गरी तिन तिरबाट प्रवेशद्धार बनाईएकोछ। मन्दिरको गर्भगृहमा चाँदीको कलात्मक सिंहासनभित्र अष्टधातुको राम, सीता र लक्ष्मणको मूर्ति प्रतिस्थापन गरिएको छ। यो मन्दिरमा मार्वल प्रयोग गरिएको छ गर्भगृह ठिक अगाडी को दायाँ तर्फ हनुमानको मूर्ति रहेको छ भने बाँया तर्फ मन्दिरका प्रथम महन्त सुरकिशोर दासको मूर्ति बनाई राखिएको छ। मन्दिरको गर्भगृह पछाडी २ वटा कोठा बनाईएको छ एउटा कोठा जसमा गर्भगृहमा रहेको भगवानहरूलाई रातीको समयमा सुकला गराईन्छ भने अर्को कोठामा भगवानको नुहाउने कोठा भनिन्छ। मन्दिरको माथील्लो भागमा सुनजलप गजुर राखिएको छ। यस किसिमका भव्य मन्दिर नेपालमा अन्यत्र पाइँदैन। मन्दिरको निर्माण मार्वल, ईटा, सुर्कीको प्रयोगबाट भएको छ।।

**रामजानकी मन्दिरको पूजा परम्परा**

जानकी मन्दिरमा दैनिक विहान वेलुका पञ्चोपचार विधि अनुसार नित्य पूजा सञ्चालन हुन्छ। सर्वप्रथम विहान भगवानलाई मन्दिरका पुजारीहरूद्वारा रामसीतालाई वैदिक मन्त्र उच्चारण गरी जागा गराइन्छ। जागा गराइसकेपछि स्नानागारमा लगी वैदिक मन्त्र उच्चारण गर्दै मुख धुवाउने, पञ्चामृतद्वारा स्नान गराउने गरिन्छ। स्नानपश्चात् रामसीताको मूर्तिलाई वस्त्र पहिराइन्छ। वस्त्र पनि दिन अनुसार पहिराउने चलन छ। स्नान गराई लुगा फेराउने काम हुन्छ। हरेक दिन लुगा फेराईन्छ। यसरी लुगा फेराउंदा वार अनुसारको रंगको लुगा फेराईन्छ। जस अनुसार आइबार-गुलावी, सोमबार-सेतो, मंगलबार-रातो, बुधबार-हरियो,बिहीबार-पहेंलो, शुक्रबार-सेतो वा गुलावी र शनिबार- निलो वस्त्र पर्दछन लुगा फेराएर सिंहासनमा भगवानलाई विराजमान गराएपछि विहानको आरती गरिन्छ र विहानको भोग लगाईन्छ।भने विहान दिउंसो र रातिको समयमा भोग लगाउने प्रचलन रहेको पाईन्छ। विहानको भोगमा हलुवा पुरी मिठाईहरू हुन्छ भने दिउंसो र रातिको भोगमा दाल भात तरकारी भान्छामा जे पाक्छ त्यहि भोग लगाईन्छ। पूजा विहानदेखि शुरु हुन्छ। दिउंसोको १२ बजे अपरान्हमा मुल पूजा हुन्छ र भोग लगाइन्छ। त्यसपछि भगवानलाई आराम गराईन्छ। दिनको ३,४ वजे पुनः जागा गराईन्छ र साँझमा आरती गरिन्छ। रातमा पुनः भोग लगाइन्छ। भोग लगाएपछि भगवानलाई लुगा फेराई झोलुंगोमा सिरक डसना र झुल समेत ओढाई सुताइन्छ। मिथिला क्षेत्रमा रहेका जुनसुकै मन्दिरमा यो क्रियाकलाप रहेको पाईन्छ। मन्दिरमा भोग लगाएपछि मुल महन्तलाई भोग प्रसाद दिएपछि मात्र अन्य व्यक्तिहरूले खान पाउने परम्परा रहेको छ। दिंउसोको

भोग लगाएपछि मन्दिरमा आउने साधु सन्त जो कोहीलाई पनि भोजन गराउने परम्परा रहेको छ । यो मिथिला क्षेत्रको आफ्नो मौलिक संस्कृति हो र यसलाई मिथिला संस्कृतिको प्रमुख विशेषता मानिन्छ ।

**रामजानकी मन्दिरको धार्मिक तथा सांस्कृतिक महत्व**

जानकी मन्दिर हिन्दुहरूको महत्वपुर्ण तिर्थस्थल मानिन्छ । प्राचिन मिथिलाको राजधानी जनकपुरमा अवस्थित जानकी मन्दिर सम्पुर्ण हिन्दुहरूको आस्थाको केन्द्र रहेको छ । जानकी मन्दिर मिथिलाबासीहरूको सांस्कृतिक धरोहर पनि हो । जानकी मन्दिर आफैमा बैभवशाली छ भने मन्दिरसंग गाँसिएका अमुर्त सांस्कृतिक सम्पदाले मिथिला क्षेत्रको सभ्यता र संस्कृतिको उजागर गरेको छ । मन्दिरको वार्षिक क्यालेन्डर अनुसार जानकी मन्दिरमा गरिने र मन्दिरसंग सम्बन्धित गतिविधिहरू मिथिला विधि तथा परम्परा अनुसार गर्ने गरिन्छ । यहाँ जन्मदेखी मृत्यूसम्म गरिने संस्कारहरूको पालना गरिएको पाईन्छ । यस क्षेत्रमा गरिने हरेक पर्व पूजाहरूमा रामजानकीको कथासंग सम्बन्धित लोक गाथाहरू मैथिल गानाहरू गाउने प्रचलन रहेको पाईन्छ । रामसीताको प्रतिकात्मक सिन्दुरे रंगले मैथिल महौलाई सजाएको हुन्छ । यहाँ मनाईने पर्व पूजाहरूले मिथिला क्षेत्रको धार्मिक तथा सांस्कृतिक पक्षको समेत उजागर गरेको पाईन्छ । यहाँ परम्परा दखि प्रचलनमा रहेका पर्वहरूका कारण जानकी मन्दिरको धार्मिक तथा सांस्कृतिक महत्व रहेको बुझिन्छ । जानकी मन्दिर र मन्दिरसंग सम्बन्धित जात्रा पर्वहरूको यस प्रकार रहेका छन् ।

**विवाह पञ्चमीः**

रामजानकी मन्दिरसंग सम्बन्धित विवाहपञ्चमी महत्वपुर्ण पर्व हो । पौराणिक पात्र रामसीता विवाह संग सम्बन्धित पर्व नै विवाह पञ्चमी हो । राजा शिरध्वज जनक शिवका परम भक्त रहेको र भगवान शिव उनको भक्तिदेखि खुशी भई आफ्नो पिनाक धनु दिएको कुरा विभिन्न धर्म शास्त्रले उल्लेख गरेको छ । यही पिनाक धनुका कारणबाट राजा शिरध्वज जनककी छोरी सीताको विवाह रचिन पुगेको मानिएको छ । राजा जनकले जसले यो पिनाक धनु उचाल्न सक्छ उसैसंग आफ्नी छोरी सीताको स्वंयम्वर गरिदिने उद्घोष गरेको समय अयोध्याबाट श्रीराम आफ्ना गुरु विश्वामित्रसंग भ्रभणमा निस्कदा जनकपुर पुगेको र राजा जनकको उक्त उद्घोषलाई शिरोपर गरी पिनाक धनु उचालेर तीन टुक्रा परिदिए पछि मंसिरको शुक्ल पञ्चमीका दिन जानकी सीताको मर्यादा पुरुष श्रीरामसंग विवाह गरिदिएको प्रसंग रामायणमा उल्लेख गरेको छ । तसर्थ हरेक वर्ष मंसिरको शुक्ल पञ्चमीका दिन रामसीताको विवाहको सम्झना स्वरुप विवाहको वर्षगाँठ मनाउने परम्परा छ । यस अर्थले पनि विवाह पञ्चमीको ऐतिहासिक, धार्मिक एंव सांस्कृतिक दृष्टिकोणले अति नै महत्व रहेको पाइन्छ ।

विवाह पञ्चमी कहिले देखि मनाउन थालियो भन्ने कुनै ठोस प्रमाण प्राप्त छैन तर सुरकिशोर दासल जानकी मन्दिरको स्थापना गरेकोले उनैको समयदेखि यो पर्व मनाउदै आएको भनि अनुमान लगाउन सकिन्छ। विवाह पञ्चमीमा गरिने वैवाहिक समारोहको भारतको अयोध्याबाट सितामढी भिठ्ठमोड हुदै साधु सन्तहरू समेतको जन्ती (वाराती) नेपाल प्रवेश गर्दा नेपालको सिमानामानै भब्य स्वागत गरी मटिहानी, जलेश्वर, पिपरा हुदै जनकपुरधाममा लगिन्छ र त्यहा पनि जन्तीको भव्य तथा स्वागत गर्ने परम्परा छ। यस दिन भारतबाट वरीयातीमा विशिष्ट व्यक्तीहरू स्वंम आउने गर्दछन्। विवाह पञ्चमी पर्व ७ दिनको को विभिन्न कृयाकलाप गरेर मनाईन्छ। पहिलो दिन जनकपुर नगर दर्शन, दोस्रो दिन फूलबारी लीला, तेस्रो दिन धनुषभंग, चौथो दिन मटकोर, पाँचौं दिन तिलकोत्सव, छैठौं दिन वैवाहिक कार्यक्रम तथा सातौं दिन रामकलेवा विधिसाथ महोत्सव सम्पन्न हुन्छ। जनकपुरमा मनाईने विवाह पञ्चमीको मेला हेर्न देशविदेशबाट समेत मानिसहरू आउने गर्दछन् । भनिन्छ ५ लाख भन्दा बढी मानिसहरू त्यस समयमा जनकपुर आउने गर्दछन्। भारतको अयोध्याबाट आएका साधुसन्तहरूको जन्तीलाई महोत्तरी नाकाबाट प्रवेश गरेका जन्तीलाई विवाहपश्चात् रामकलेवा विधि सम्पन्न गरेर वीरगञ्ज नाकाबाट अयोध्याका लागि बस्त्र आभूषणसहित बिदाइ गरिन्छ। यस पर्वले विशेष गरी भारत र नेपालको धार्मीक तथा सांस्कृतिक सम्बन्ध अझ बलियो बनाएको छ।

**मिथिला परिक्रमा**

जनकपुरमा आयोजना गरिने विभिन्न पर्व मध्ये मिथिला परिक्रममा पनि एक हो। यस परिक्रममाको विशेष महत्व रहेको हुन्छ। यो पर्व पनि रामजानकीजीसंग सम्बन्धित पर्व मानिन्छ। मिथिला क्षेत्रको सम्पुर्ण भुमी चौरासी कोस रहेको छ। यस भित्र भारतको केही जिल्लाहरू पनि पर्दछ। मिथिला परिक्रमामा ३ वटा परिक्रमा रहेको छ। यस परिक्रमामा मिथिला विहारी (श्रीराम) र किशोरीजी (जानकीजी) को डोलि सजाएर साधु सन्त महन्त सहितको ठुलो जथ्थाले यो परिक्रमा गर्दछन्। पैदलयात्राबाट गरिने परिक्रमामा जहाँ विश्राम गरिन्छ त्यहाँ रातभर भजनकिर्तन गर्ने परम्परा रहेको छ। मिथिला परिक्रममा मुख्य गरी ३ वटा परिक्रमा रहेको छ जुन यस प्रकार छ।

**१ बृहद परिक्रमा**

वृहद परिक्रमा महत्वपूर्ण परिक्रमा हो। यो परिक्रमा करिब २६८ कि.मी. को दुरीमा गरिन्छ। यो परिक्रमाले लगभग सम्पूर्ण मिथिला क्षेत्रलाई समेटेको देखिन्छ। यो परिक्रमा कौशिकीबाट शुरु हुन्छ र तीर्थयात्रीहरू सिद्देश्वरसम्म पुग्छन्। सिद्देश्वरबाट तीर्थयात्रीहरू गंगा हुँदैसालीग्राम क्षेत्रसम्म पुग्छन्। यसपछि उनीहरू उत्तर हिमालयको नजिकसम्म पुगीदक्षिणतिर फर्कछन् र कौशिकीको

नजिक पुग्छन् । कौशिकीदेखि पुनः सिद्देश्वर पुग्छन् र वृहद परिक्रमा सम्पन्न गर्दछन् । स्थानीय बासिन्दाहरूको भनाई अनुसार वृहद परिक्रमाको लागि करिब १ वर्ष लाग्छ र यो अवधिमा सम्पूर्ण मिथिला क्षेत्रको परिक्रमा गरिन्छ। यो परिक्रमा ज्यादै कठिन र लामो समय लाग्ने हुनाले गृहस्थी भन्दा पनि साधुसन्तले मात्र भाग लिने गर्दछन । मिथिला परिक्रमामा यो वृहद परिक्रमाको उल्लेख भएता जनकपुर क्षेत्रमा यसको प्रचलनमा रहेको पाइँदैन ।

**२ मध्य परिक्रमा**

मध्य परिक्रमालाई आधुनिक बृहद परिक्रमा पनि भनिन्छ। यो परिक्रमा लगभग १२८ कि मि को पैदल यात्रा हुन्छ । यसलाई चौरासी परिक्रमा पनि भनिन्छ । १५ दिनसम्म गरिने यो परिक्रमा औंशीमा शुरु भएर पूर्णिमामा सकिन्छ। आकर्षक ढंगबाटबाट सजाईएको डोलिमा रामसीताको प्रतिक राखी १५ दिनसम्म परिक्रमा गराईन्छ। यो १५ दिने परिक्रमाका दौरान भारतको ४ स्थान र बाँकी नेपाल भित्र पर्दछ। १५ दिने परिक्रमा धनुषाको सुन्दर सदन अग्निकुण्डबाट किशोरीजी (जानकीजी) र ठुरा कचुरीबाट मिथिला विहारीजी (श्री रामजी) को सजाईएको डोला लिएर हनुमाननगर पुगेपछि परिक्रमा शुरु हुन्छ। पहिलो दिन हनुमाननगर दोस्रो दिन कलना(भातरमा पर्ने) तेस्रो दिन फुलहर(भातरमा पर्ने), चौंथो दिन मटियानी, पाँचौ दिन जलेश्वर, छैठौं दिन मढई, सातौं दिन धुव्रकुण्ड, आठौं दिन कञ्चनवना, नवौं दिन पर्वता, दशौं दिन धनुषाधाम,एघारौं दिन सतोषर, बाह्रौं दिन औढी (औरही), करुणा(भातरमा पर्ने), तेह्रौं दिन करुणा(भातरमा पर्ने), चौधौं दिन विशौल(भातरमा पर्ने), पन्ध्रौं दिन भारतको कलना भारतको कलना हुदै जनकपुर आईपुग्छ। जनकपुर पुगी सकेपछि तीर्थयात्रीहरूले जनकपुर क्षेत्रमा विभिन्न मन्दिर र धार्मिक स्थलहरूको दर्शन गर्दछन्। यथाशक्य गरिबहरूलाई दान दक्षिणा दिने गर्दछन्। यो यात्राको दौरानमा जहाँ जहाँ रातको समयमा वास बसिन्छ त्यस ठाउँका वासिन्दाहरूले भव्य रुपमा स्वागत गरी खानपिनको व्यवस्था साथै भजनकिर्तकोआयोजना गरेको हुन्छ । यस यात्रामा साधुसन्त महन्त महिला वालवालिका सवैले भाग लिएका हुन्छन् ।

**लघु (अन्तगृही ) परिक्रमा**

जनकपुर क्षेत्रमा प्रचलित परिक्रमामध्ये लघु परिक्रमा पनि एक हो । छोटो दुरीको परिक्रमालाई लघु परिक्रमाको नामले चिनिन्छ । यो परिक्रमा करिब ८ कि.मी. को रहेको हुन्छ । लघु परिक्रमालाई अन्तरगृह परिक्रमाको नामले पनि चिनिन्छ । यो परिक्रमा फागु पुर्णेमाको दिन जनकपुर उपमहानगरपालिका भित्र रहेको कदमचोक हनुमान मन्दिरबाट गंगासागर स्नान गरेर शुरु गरिन्छ। मिथिला विहारीको डोली लिएर कमद चोकमा भेला भएपछि परिक्रमा पथ मुरलीचोक हुंदै ज्ञानकुप विहार कुण्ड पापमोचनी सर आदी परिक्रममा गरेर पुन गंगा सागरमा नै आएर समाप्त

हुने गर्छ। लघु परिक्रमा विशेष गरी पवित्र पोखरी सरोवरको परिक्रम गरिन्छ। लघु परिक्रमामा सवै धर्म सम्प्रदाय जातीहरू महिला पुरुष वालवालिका सवैले गर्ने गर्दछन् । यो परिक्रमा गर्दा केही  नियम लागु गर्नु पर्ने हुन्छ। जसमा शुद्ध सात्विक भोजन फलहार र ब्रह्मचर्य आदी ब्रत पालना गर्नु पर्ने हुन्छ।

## झुला पर्व

मिथिला क्षेत्रको अर्को महत्वपुर्ण पर्व झुला पर्व हो। यो पर्व साउन तृतिया देखि पूर्णिमासम्म मनाइन्छ। साँझको समयमा मनाइने यो पर्व जनकपुरधामका सबै मठमन्दिरहरूमा मनाउने प्रचलन छ। झुला पर्वमा रामजानकीको मूर्ति वा प्रतिकात्मक चिन्ह बनाई आकर्षक ढंगबाट सजाईएको सिंहासनमा राखेर झुलाउने गरिन्छ। जानकी मन्दिरमा चाँदीको सिंहासनलाई भव्य रुपमा सजाई रामजानकी मूर्ति राखी झुला झुलाउने प्रचलन रहेको छ।  यस वखत भजन लगायत रामजानकीसंग सम्बन्धित लोकगाथा सुनाईन्छ भने रामलिलाका गानाहरू मैथिलि भाषामा गाईन्छ। झुला उत्सवमा जनकपुरका मठ मन्दिरहरू संगीतमय बनेका छन्। यस झुलन उत्सवमा सहभागी हुन नेपाल तथा सीमावर्ती भारतबाट समेत भक्तजनहरू आउने गर्दछन् । मिथिला क्षेत्रमा रहेका मठमन्दिर र कुटीहरूमा आयोजना भइरहेको झुला उत्सवमा गाइने धार्मिक गीत संगीतले सबैलाई मंत्रमुग्ध बनाइरहेको हुन्छ। मिथिलाको सांस्कृतिक पर्वका रुपमा चिनिने झुला  उत्सवको सुरुवात सन्त परम्पराको प्रारम्भदेखि नै भएको पौराणीक मान्यता रहेको छ ।

## जानकी नवमी

जानकी नवमी मिथिला क्षेत्रमा मनाईने अर्को महत्वपुर्ण पर्व हो। विशेष गरी यो जनकपुर र आसपासका क्षेत्रमा मनाईने गरिन्छ। बैशाखको शुक्ल पक्षको नवमी तिथिमा जानकीको जन्म भएकोले यसलाई जानकी नवमी भनिएको भनिन्छ। विवाहित महिलाहरू यस दिन आफ्नो पतिको लामो आयूका लागि ब्रत बस्ने गर्दछन् । यस दिन जनकपुरका सवै मन्दिरहरूमा विशेष पूजा हुने गर्दछ। रामायणको पाठ भजन किर्तन गरी जानकी नवमी पर्व मनाउने प्रचलन रहेको छ। यो अवसरमा जानकी मन्दिरबाट साधुसन्तहरूलाई नयाँ लुगाको वितरण गर्नुका साथै ब्राम्हणहरूलाई भोजन गराउने चलन पनि छ। कहिलेदेखि शुरु भयो स्पष्ट रुपमा आधारहरू पाइदैनन्। धेरैले जनकपुर क्षेत्रमा जानकी मन्दिर स्थापना भइसकेपछि नै यो परम्परा शुरुवात भएको उल्लेख गरेका छन् ।

## रामनवमी

जनकपुर क्षेत्रमा प्रचलित महत्वपूर्ण चाडहरूमध्ये रामनवमी पनि महत्वपूर्ण चाडको रुपमा लिइन्छ। हिन्दु धर्मग्रन्थ रामायणका अनुसार   चैत्र महिनाको शुक्ल

पक्षको नवमी तिथीका दिन भगवान श्री रामको जन्म भएकोले रामजन्मोत्सवको रुपमा मनाउने चलन छ । रामनवमीका दिन विशेष गरी जनकपुरको राममन्दिरमा विशेष पूजा सञ्चालन हुन्छ भने जानकी मन्दिरमा पनि विशेष पूजा गर्ने परम्परा रहेको छ । रामनवमीका दिन देश तथा विदेशबाट समेत श्रद्धालु भक्तजनहरू आउने गर्दछन् । भनिन्छ यस दिन पाँचलाख भन्दा बढी तीर्थयात्रीहरू जनकपुर आउने गर्दछन् ।

**गुरुपूर्णिमा**

गुरुपूर्णिमा पनि जनकपुर क्षेत्रमा मनाइने महत्वपूर्ण चाडपर्वहरूमध्ये एक मानिन्छ । यसलाई व्यासपूर्णिमा पनि भन्ने चलन छ । जनकपुर क्षेत्रमा भएका प्रायःजसो सबै मठमन्दिरहरूमा गुरुपूर्णिमा मनाउने चलन छ । मठका महन्तलाई गुरुका रुपमा हेरिने हुँदा उनीहरूको उपस्थितिमा चेलाहरूबाट गुरुपुर्णेमा भव्यताका साथ मनाउने परम्परा रहेको छ । गुरूपूर्णिमा हिन्दु धर्मावलम्बीहरूको एक पर्व हो । हिन्दूहरू, श्रीमद्‌भागवत, अठार पुराण र विष्णु सहस्रनामका रचयिता तथा अपौरूषेय वेदलाई चार भाग लगाउने वेदव्यासको जन्मजयन्तीलाई गुरूपूर्णिमाका रूपमा मनाउँछन् । उक्त दिन विद्यार्थीहरूले गुरुलाई फूलमाला अर्पण गर्दै उनीहरूबाट टीका थाप्ने चलन छ । त्यसै दिन आफूलाई शिक्षा दिने गुरुलाई सम्मान गर्नाका साथै व्यासलाई सम्झना गर्ने गरिन्छ ।

**मिथिला कला**

जनकपुरको धार्मिक तथा सांस्कृतिक क्षेत्रको कुरा गर्दा मिथिलाकलालाई पनि भुल्न सकिदैन । यो कलामा कोरिएका चित्रहरूको मिथिला क्षेत्रमा विशेष महत्व रहेको छ । विशिष्ट शैलीमा कोरिएका कलाभित्र मानव जिवनको सम्पुर्ण भावहरू व्यक्त गरेको पाईन्छ । ज्यामितिय शैलीमा कोरिएका मिथिला चित्रकलाका ५ शैली रहेको हुन्छ । भरनी कचनी तांत्रीक गोदना र कोहवर । भरनीमा चित्रमा विभिन्न रंग भरेर आकर्षक बनाईन्छ भने कचनीको अर्थ हुन्छ मसिनो मसिनो चित्र बनाउने त्यसैले कचनीलाई चित्रको आत्मा पनि भनिन्छ । कचनीमा प्राय कालो रंगको प्रयोग हुन्छ भने भरनीमा सजावट बढी हुन्छ । मिथिला क्षेत्रमा तन्त्र शास्त्रमा विश्वास गर्ने हुँदा चित्रमा पनि तान्त्रिक प्रभाव देखाउने प्रयास गरिएको हुन्छ । मिथिला कलामा गोदनाको पनि विशेष महत्व रहेको हुन्छ । अहिलेको आधुनिक यूगमा गरिने ट्याटु र मिथिला क्षेत्रमा गरिने गोदना एउटै प्रकारको रहेको देखिन्छ । विशेष गरी मिथिला महिलाहरूले हात खुट्टा पाखुरामा गोदना बनाउने परम्परा रहेको छ । कोहवर भनेको विवाहका लागि बनाईएको छुट्टै घर वा कोठाका भित्तामा कोरिने चित्र हो । यस्तो चित्रमा प्राय विबाहको कथा उत्किर्ण गरिएको हुन्छ भनिन्छ । मिथिला कला नै मिथिला क्षेत्रको जीवनशैलीको यर्थात नमुना हो । मिथिला

क्षेत्रमा बसोवास गर्ने धनी गरिव जुनसुकै वर्गका घरका भित्ताहरू मिथिला कलाले सजाईएको हुन्छ। मिथिलाकला मिथिला महिलाहरूको Creation हो यस कलामा महिलाहरूको विशेष भुमिका रहेको हुन्छ। हेर्दा सरल लाग्ने मिथिला चित्रकलाभित्र समाजको हरेक पक्षको चित्रण गरेको पाईन्छ। एउटा कथालाई चित्र मार्फत प्रस्तुत गरिने मिथिला कलामा गरिएको रंगको छनौट विशिष्ट प्रकारको रहेको पाइन्छ। यो कलाको विकास कहिले भयो भन्ने यकिन प्रमाण छैन तर राजा जनको दरवारमा कोरिएका कला नै मिथिला कला हो भनिन्छ। तसर्थ मिथिला कलाको ठोस प्रमाण प्राप्त नभएता पनि रामजानकीसंग सम्बन्धित पर्वपुजाहरूमा कोरिने चित्रले प्राचिन कालदेखि नै शुरुवात भएको थियो होला भनेर अनुमान लगाउन सकिन्छ।

**निष्कर्षः–**

नेपाल एक भुपरिवेष्ठतित सानो मुलुक हो। वि. सं. २०६८ को जनगणनामा यो सानो मुलुकमा १२५ जातजाती र १२३ भाषाभाषीक समुदायहरू वसोवास गरेको बताएको छ। विविध भौगोलिक क्षेत्र भित्र रहेका सवै जातजातीको आ-आफ्नो भाषा, रितिरिवाज परम्परा, संस्कृति रहेको पाईन्छ। यी मध्ये मधेश प्रदेश भित्र रहेको मिथिला क्षेत्र पनि एक हो। हालको मधेश प्रदेशको राजधानी जनकपुर प्राचिन मिथिलाको पनि राजधानी थियो। प्राचिन मिथिला क्षेत्र ८४ कोष भित्र २६८ कि मि रहेको भन्ने भनाई पाइन्छ। प्राचिन मिथिला क्षेत्रमा भारतका विहार राज्यको चम्पारण सीतामढी, वैशाली, मुजफ्फरपुर, दरभंगा लगायतका जिल्लाहरूलाई पनि मिथिला क्षेत्र भित्र पर्दथ्यो। प्रचिन मिथिला क्षेत्रमा पर्ने जनकपुर एक महत्वपुर्ण पौराणीक तथा आध्यात्मिक नगरको रुपमा परिचित छ।

जनकवंशका शासकहरूले राज्य गरेको भन्ने रहेको छ। यीनै जनकवंशका राजा शिरध्वज जनक र जनकपुरको विशेष सम्बन्ध रहेको छ। मिथिलाको आफ्नै भाषा, परम्परा, संस्कृति, रितिरिवाज, भेषभुषा र खानपान रहेको छ। विशिष्ट प्रकारको संस्कृति रहेको मिथिलामा रहेको जानकी मन्दिर पनि मिथिला संस्कृतिले सजिएको छ। वास्तुशैलीका दृश्टिकोणबाट उत्कृष्ट त छ नै त्यसभित्रका अमुर्त सांस्कृतिक सम्पदाले जानकी मन्दिरलाई अझ उच्च बनाएको छ जसका कारण आज यो विश्वमा परिचित हुन पुगेको छ। विश्व सम्पदा महासन्धि १९७२ को प्रावधान अनुसार विश्व सम्पदामा सूचीकृत विश्वका सर्वश्रेष्ठ एवं विश्वव्यापी महत्व भएका सांस्कृतिक एवं प्राकृतिक स्थलहरूलाई विश्व सम्पदा भनिन्छ। जनकपुरस्थित रामजानकी मन्दिर विश्व सम्पदा महासन्धि १९७२ को विश्व सम्पदाको निमित्त परिभाषित परिभाषा भित्र पर्दछ जसका कारण आज जानकी मन्दिरको विशिष्ट वास्तुशैली र परम्पराका कारण सन् २००८ मा विश्व सम्पदाको संभाव्य सूचीमा समावेश भइसकेको छ। जानकी मन्दिरलाई विश्व सम्पदाको

सम्भावित सूचिमा समावेश गर्ने क्रममा रामजानकी मन्दिर (RamJanaki Temple) भनिएको छ।

रामजानकी मन्दिर विश्व सम्पदाको सम्भाव्य सूचीमा समावेश भएको पनि आज १४ वर्ष भईसक्यो तर विश्व सम्पदा सूचीमा समावेश हुन सकिरहेको अवस्था छैन। कुनै पनि सांस्कृतिक सम्पदाहरू आजको भोली नै विश्व सम्पदा सूचीमा समावेश हुन सक्दैन। विश्व सम्पदा महासन्धि १९७२ अनुसार कुनै पनि सास्कृति सम्पदाहरूलाई विश्व सम्पदा सूचीमा समावेश गर्न धेरै चरणहरू पार गर्नु पर्ने हुन्छ। रामजानकी मन्दिरको उत्कृष्ट वास्तुशैली र यससंग सम्वद्ध अन्य अमुर्त सांस्कृतिहरू यसलाई विश्व सम्पदा सूचीमा समावेश गर्ने आधार हुन्। तर सो समग्र क्षेत्रको बहआयामिक पक्षहरूको व्यवस्थापन बढी चुनौतिपुर्ण हुन्छ। सर्व प्रथम यसको क्षेत्र निर्धारण गरी नक्शांकन गर्नु पर्छ। नक्शांकन गरिएको क्षेत्रभित्रका निजी घरहरू र रामजानकी मन्दिर लगायत सम्पदाहरूको विविध पक्षलाई समेटी तीनको महत्व स्पष्ट हुने गरी अभिलेखिकरण गर्नु पर्ने हुन्छ। यसका लागि पहिलो सर्त स्थानीय सरोकारवालाहरूले आफ्नो क्षेत्रलाई विश्व सम्पदामा सूचीकरण गर्ने विषयलाई आत्मसात गरेको हुनु पर्छ। विश्व सम्पदा सूचीमा समावेश भएपछि अन्तर्राष्ट्रिय कानूनलाई समेत मान्नु पर्ने हुन्छ। जवसम्म स्थानीय सरोकारवालाहरूले विश्व सम्पदा महासन्धि १९७२ का प्रावधानहरूलाई स्वीकार गर्न सक्दैन तवसम्म जानकी मन्दिर विश्व सम्पदा सूचीमा समावेश गर्न कठिन हुन जान्छ तसर्थ यसका लागि पहिलो कुरा स्थानीय सरोकारवालाहरूले विश्व सम्पदा सूचीको महत्वको वारेमा बुझ्न अति नै जरुरी रहेको देखिन्छ।

**सन्दर्भ ग्रन्थः**

सूचना विभाग, मेचीदेखी महाकालीसम्म भाग २।

पुरातत्व विभाग, सांस्कृतिक सम्पदाहरूको सर्वेक्षण प्रतिवेदन २०४२/४३, भाग १

पुरातत्व विभाग, धनुषा जिल्लाका भौतिक सांस्कृतिक सम्पदाहरूको संरक्षण एवं अध्ययन प्रतिवेदन, २०६६-६७.

मलंगियले महेन्द्र, मै जनकपुर हुँ।

शरण रामकुमार, मिथिला माहात्म्य जनकपुर परिचय ।

सुचना विभाग, नेपाल, हाम्रो सम्पदा, वर्ष ५०, अक ५ पूर्णाङ्क २३२, चैत्र-बैशाख, २०७७-२०७८ ।

स्मारिका, २०१८ अन्वेषण मिथिला से अवध तक जनकपुरधाम ।

झा डा. दुर्गानाथ "श्रीश" मैथिली साहित्यीक इतिहास ।

✦✦✦

# विश्वसम्पदाको सम्भावित सूचीमा रहेको रुरु क्षेत्रको ऐतिहासिक र सांस्कृतिक महत्व



✍ भाष्कर ज्ञवाली*

## परिचय

'रुरु क्षेत्र' यसलाई रिडीको नामले समेत चिनिन्छ । रिडी प्रसिद्ध कालीगण्डकी नदी र रिडी खोलाको संगम स्थलमा अवस्थित एक धार्मिक र सांस्कृतिक महत्व वोकेको स्थल हो । प्राचीनकाल देखिनै पवित्र हिन्दू तीर्थस्थलको रुपमा रहेको यो क्षेत्र पाल्पा, स्याङजा र गुल्मी जिल्लाको संगममा अवस्थित छ । यद्यपि प्राचीनकालको रुरु क्षेत्र हालको रेसुङ्गादेखि रिडी वजारसम्म फैलिएको उल्लेख रामनिवास पाण्डेले गरेका छन् (Pandey, sacred comlex of Ruru kshetra p. 33) । लुम्विनी प्रदेशको प्रमुख व्यापारिक वजार बुटवलदेखि ७० कि.मी. उत्तर र विश्व सम्पदाको सम्भावित सूचीमा रहेको मध्यकालीन शहर तानसेनदेखि १४ कि.मी. उत्तरमा यो क्षेत्र रहेको छ । रिडी गुल्मी जिल्लाको प्रवेशद्बार समेत हो । यस क्षेत्रको भौगोलिक अवस्थिति २७० ५६' २६" उत्तरी अक्षांश र ८२० २६' ३८" पूर्वी देशान्तरमा समुद्र सतहदेखि १८०० फिटको उचाइमा रहेको छ । नेपालमा रहेका हिन्दू धर्मावलम्वीहरूको चारवटा धार्मिक क्षेत्रहरू रुरु क्षेत्र, वराह क्षेत्र,पशुपति क्षेत्र र मुक्ति क्षेत्र मध्ये यो पनि एक हो । विदेशी विद्धान पर्सिवल ल्याण्डनले यो क्षेत्रलाई नेपालको वनारस भनेर चित्रित गरेका छन् । यो धार्मिक र सांस्कृतिक महत्व वोकेको स्थल हिन्दू धर्मावलम्वीहरूको पवित्रघाट समेत हो ।

---

* पुरातत्व अधिकृत, पुरातत्व विभाग

**नामाकरण**

रुरु क्षेत्र पौराणिक नाम हो । यसको नामाकरण सन्दर्भमा देवदत्त ऋषि र प्रम्लोचाबाट जन्मेकी कन्याले भगवान विष्णुको तपस्या गरी मुक्ति पाएको हुँदा ती कन्याको नामवाट यो क्षेत्र रुरु क्षेत्रको रुपमा चिनियो एक थरि विद्वानहरूको मत रहेको छ । अर्को मत अनुसार 'रिडी' शब्द मगर भाषाबाट आएको हो । मगर भाषामा 'रि' को अर्थ कालो र 'डी' को अर्थ पानी भन्ने हुन्छ । अर्थात कालो पानी वग्ने क्षेत्र (काली गण्डकी) को किनारमा  यो वस्ती भएकोले 'रिडी' भनिएको हो भन्ने मान्यता  रहेको छ (गुरुङ्ग, पृष्ठ १५३) । धार्मिक मान्यता अनुसार मानिस जन्मिदै तीन वटा ऋणहरू देव ऋण, पितृ ऋण र ऋषि ऋण लिएर आएको हुन्छ । जो व्यक्ति दामोदर कुण्डदेखि वग्दै आएको पवित्र कालीगण्डकी र रिडीखोलाको संगम स्थल जुन ठाउँमा प्राचीन कालमा विभिन्न ऋषिमुनिहरूले तपस्या समेत गरेका थिए त्यो व्यक्तिको पाप पखालिन्छ भन्ने मान्यताका आधारमा ऋणि भनियो र सो शब्द अपभ्रश भइ रिडी बन्न गएको धार्मिक र पौराणिक मान्यता रहि आएको  छ ।

**विश्वसम्पदाको सम्भावित सूचीमा रुरु क्षेत्र**

युनेस्कोको विश्वसम्पदा महासन्धीको Operational Guide line मा अद्वितीय विश्ववव्यापी महत्वबारे उल्लेख छ । यसलाई पुस्ट्याई गर्न सांस्कृतिक विश्वसम्पदाका हकमा ६ वटा आधारहरू तय गरेको छ । ती मध्ये रुरु सम्भावित विश्वसम्पदा क्षेत्रका लागि आधार (ii), (iii), (ख) प्रस्ताव गरिएको छ । रुरु क्षेत्र हिन्दूहरूको पवित्र धार्मिक तीर्थस्थल र दाह संस्कार स्थलको रुपमा प्राचीन ग्रन्थहरूमा उल्लेख हुनु, मुक्तिनाथ र दामोदर कुण्ड जाने प्राचीन पदमार्गमा पर्नु रुरु क्षेत्रमा रहेका विभिन्न शैलीका  कला वास्तुकला, विशिष्ट शैलीको मध्यकालीन मन्दिर परिसर, सेनकालीन मूर्तिकलाका नमूना, रिडी वजारमा रहेका मध्यकालीन शैलीका परम्परागत घरहरू, परम्परादेखि मनाइदै आएको जात्रापर्व र वैदिक पूजाविधिको निरन्तरता लगायतका विविधताको कारण सांस्कृतिक महत्वको सम्पदाको रुपमा विश्व सम्पदाको सूचीमा रहेको पशुपति क्षेत्रसँग तुलना गर्दै सन् २००८ मा रुरु क्षेत्रलाई विश्वसम्पदाको सम्भावित सूचीमा राखिएको हो (UNESCO) ।

**रुरु क्षेत्रको पौराणिक/धार्मिक इतिहास**

हिन्दू धर्मावलम्वीहरूको पवित्र तीर्थ स्थलको रुपमा रहेको रुरु क्षेत्र र भगवान ऋषिकेशको महिमा  सर्वप्रथम वराह पुराणमा पाइन्छ । त्यसैगरी स्कन्द पुराणको हिमवत्खण्डको गण्डकी क्षेत्र महात्म्यमा रुरु क्षेत्र र भगवान ऋषिकेशको धार्मिक महत्वको चर्चा गरिएको छ ।

भगवान वराहले पृथ्वीलाई सुनाएको कथा अनुसार धेरै समय पहिले रुरु क्षेत्रमा



देवदत्त नाम गरेका वैदिक ब्राह्मण बस्दथे । उनले कालीगण्डकीको किनारमा अवस्थित ऋषिकेश आश्रममा दशहजार वर्षसम्म कठोर तपस्या गरे । देवदत्तको कठोर तपस्यादेखि  देवराज इन्द्र डराएर उनको तपस्या भंग गर्नतर्फ लागे । देवराज इन्द्रले वसन्त ऋतुसँगै कामदेव, गन्धर्व र अप्सराहरूको समूहलाई बोलाएर देवदत्तको तपस्या भंग गर्न आदेश दिए । त्यसपछि देवदत्त ऋषिको तपस्या भंग गर्न गएका वसन्तऋतुले अनेकौ फूलहरू फुलाएर त्यस आश्रम वरपरको वन रमणीय वनाए । गन्धर्वहरूले पर्वतका गुफाहरूमा वाजा वजाए । हावाको तालमा फूलहरू नाचेको त्यस आश्रमको रमाइलो वनमा प्रवेश गरेर प्रम्लोचा नाम गरेकी अप्सराले मीठो गीत गाउन थालिन् । ती प्रम्लोचा नामकी अप्सरालाइ देखेर देवदत्त ऋषि आकर्षित भए । उनको सुन्दरताप्रति बसिभूत भई विवाहको प्रस्ताव राखे र दुवै जना विवाह वन्धनमा वाधिई सांसारिक सुखमा विलिन भए ।

केही समयपछि देवदत्त ऋषिलाई निद्रावाट व्यूझे जस्तै होस खुल्यो र पश्चाताप भयो । इन्द्रीय विजय गर्न नसकेको कारणले दोष मेरो आफ्नै हो भनेर वैराग्य उत्पन्न भई ऋषि देवदत्त प्रम्लोचालाई त्यही छोडी त्यस आश्रमलाई दूषित मानेर भृगु आश्रमतिर लागे । देवदत्त ऋषिद्वारा गर्भवती वनाएकी अप्सरा प्रम्लोचा एउटी कन्या जन्माएर स्वर्गीतिर लागिन् । ती कन्यालाई रुरु (मृग) हरूले आफ्नो दूध पिलाएर हुर्काए (संस्कृत भाषामा मृगलाइ रुरु भनिन्छ) । रुरुले दूध पिलाएर हुर्केकी कारणले तिनको नाम रुरु कन्या रहन गयो । ती रुरु कन्या जवान हुँदै गएर पनि विवाह नगरी तपस्यामा लागिन् । धेरै समयसम्म तपस्या गरेर आफ्ना इन्द्रियहरूलाई भगवान

विष्णुमा लीन गराएकी हुँदा ती रुरु कन्या मूढो झै अचल रहिन् । यो देखेर भगवान विष्णुले पनि आफ्ना सारा इन्द्रीयहरूलाई वशमा राखेर रुरु कन्याका हृदयभित्र प्रत्यक्ष दर्शन दिनुभयो । यसरी आफ्ना इन्द्रीयलाई वशमा राखेर रुरु कन्यालाई दर्शन दिएको हुँदा रुरु क्षेत्रमा रहेका  भगवान विष्णुको नाम ऋषिकेश रहन गएको हो । भगवान विष्णुलाई रुरु कन्याले आफूलाई दर्शन दिएको स्वरुपमा यस क्षेत्रमा वस्न अनुरोध गरे अनुसार भगवान ऋषिकेशको वास रिडी क्षेत्रमा भएको धार्मिक विश्वास छ (ढकाल, पृष्ठ १२७९-१२८५) । यसरी भगवान ऋषिकेशले आफैंले यो क्षेत्र पवित्र भूमि हुने र आफ्नो साक्षात दर्शन हुने जानकारी रुरु कन्यालाइ गराएको हुँदा यो क्षेत्र हिन्दूहरूको पवित्र धार्मिक तीर्थस्थलको रुपमा रहन गएको हो ।

## रुरु क्षेत्रको पुरातात्विक इतिहास

साहित्यिक स्रोतहरूले रुरु क्षेत्रको प्राचीनता पौराणिक युगसम्म पुर्‍याएको पाइन्छ । पुरातात्विक प्रमाणका आधारमा रुरु क्षेत्रको इतिहास धेरै पछि मात्र जानकारीमा आएको छ । हुनत रुरुक्षेत्र नजिकै पर्ने पाल्पाको माडि फाँटबाट नवपाषणकालीन हतियार फेला परेको वताइन्छ (शर्मा, पृष्ठ २४-२८) । बुद्धकालमा यसको नजिकै दक्षिण र दक्षिण पश्चिम दिशाको समतल भू-भागमा  शाक्य, कोलीय र मल्लहरूले शासन चलाएका थिए ।

लिच्छविकालको नेपाल पूर्वमा आसामदेखि पश्चिममा कुमाउसम्म फैलिएको थियो । समुद्र गुप्तको प्रयागस्थित स्तम्भ लेखले यहि कुराको पुष्टि गर्दछ । लिच्छवि शासकहरू आप्नो राज्यको सिमाना वर्तमान नेपालको सिमाना जतिकै फैलाएका थिए । लिच्छवि वंशका प्रख्यात राजा मानदेवको राज्य पश्चिममा गण्डकी पारीसम्म फैलिएको थियो ।यी विविध प्रमाणबाट रुरु क्षेत्र पनि लिच्छविकालमा तिनको अधिनमा रहेको प्रष्ट हुन्छ । लिच्छविकालको केन्द्रीय शासन कमजोर हुँदै गएपछि गण्डकी पस्नवण क्षेत्रमा लिच्छविहरूको अधिकार छुट्दै गयो ।

गण्डकी प्रदेशमा कतिपय विकसित वस्तीहरू मध्यकालको सुरुदेखि नै विषय अर्थात जिल्लाका रुपमा परिणत हुँदै थिए । जुनजुन वस्तीहरूलाई विषयको संज्ञा दिइएको हुन्थ्यो, त्यहाँ सामन्तहरूद्बारा प्रशासन चल्दथ्यो । केन्द्रको निर्देशनमा रहेर कार्य गरेतापनि ती सामन्तहरू शक्तिशाली मानिन्थे । इस्वी संवत् ९९८ मा राजा नरेन्द्रदेव र उदयदेवको संयुक्त शासनकालमा नै गण्डकी प्रदेशको गण्डीगुल्म निकै आवाद र विकसित भएको देखिन्छ । यसैगरी हर्षदेवको शासनकाल अर्थात इस्वी संवत् १०९३ सम्ममा गण्डी गुल्म विषय (जिल्ला) का रुपमा प्रतिष्ठित भइ सकेको थियो (वज्राचार्य, पृष्ठ २७-२८) । गण्डकी प्रदेशको मगरात अर्थात मग्वर विषयमा इस्वी संवत् ११०० ताका सामन्त रामदेवको प्रशासन चलेको वेला केन्द्रको गद्दीमा राजा शिवदेव विराजमान थिए । यस प्रकार इस्वीको बाह्रौं शताब्दीको सुरुवातसम्म रुरु क्षेत्र केन्द्रबाटै शासित भएको बुझिन्छ (खनाल, पृष्ठ ६) ।

गोपालराज वंशावलीका अनुसार बाहौं शताब्दीतीर सिन्जाका खस शासकहरूले पटक-पटक काठमाडौं उपत्यकामा आक्रमण गरेको साथै वि.सं. १३७८ को आदित्य मल्लको ताम्रपत्र र वि.सं. १३९४ को पुण्य मल्लको ताम्रपत्र गोरखाको ताघवाइ गुम्वामा पाइएको आधारमा  पाल्पा र गुल्मी अन्तर्गत पर्ने रुरु क्षेत्र समेत केही समय खसहरूको अधिनमा पुगेको बुझिन्छ (श्रेष्ठ पृष्ठ १६) । पन्धौं शताब्दीको उत्तरार्द्धतिर विशाल खस राज्य विभाजित भइ अनेकौ वाइसे र चौविसे राज्य हुन पुगे । यसपछि गण्डकी प्रदेशमा अवस्थित रुरु क्षेत्र सेनहरूको अधिपत्यमा आयो । पाल्पाका राजा रुद्रसेनको शासन विसं. १५५० तिर मानिएको छ (शर्मा, पृष्ठ ६) । उनीपछि मुकुन्द सेनको एक छत्र शासन पाल्पामा सुरु भयो । मुकुन्द सेन प्रथमको त्यस वेलाको राज्यभित्र गण्डकी प्रदेशका धेरै जसो भू-भागहरू पर्दथ्ये । उनको राज्य विस्तार पूर्वमा वराह क्षेत्र, पश्चिममा रिडी, उत्तरमा मुक्ति क्षेत्र र दक्षिणमा हरिहर क्षेत्रसम्म फैलिएको कुरा हिमवत्खण्डमा उल्लेख गरिएको छ (शर्मा, पृष्ठ ६) । कालीगण्डकीमा स्नान गर्दा राजा मुकुन्द सेनले ऋषिकेशको वर्तमान मूर्ति फेला पारेका हुन् भन्ने जनविश्वास रहेको छ । कालो र चिल्लो ढुंगामा कुँदेर बनाइएको भगवान ऋषिकेशको यो सुन्दर मूर्ति सेन शैलीमा बनेको रुरु क्षेत्रकै सबैभन्दा प्राचीन मूर्ति हो । प्रारम्भमा मुकुन्दसेन प्रथमले  सामान्य स्वरुपमा ऋषिकेशको मन्दिर बनाई उक्त मूर्ति गर्भगृहमा राखेको भन्ने स्थानीय परम्परा रहेको छ । वि.सं. १७८३ र वि.सं. १८०९ को गन्धर्व सेनका ऋषिकेश भगवानमा समर्पित  महत्वपूर्ण दुई अभिलेख सो क्षेत्रबाट प्राप्त भएका छन् । यसै गरी मुकुन्दसेन द्वितीयको भगवान ऋषिकेशलाई समर्पित वि.सं. १८१९ को कपर प्लेट समेत पाइएको छ । ऋषिकेश भगवान र भवानीको सम्झनामा पशुराम थापालाई सम्वोधन गरेको एउटा श्याम मोहर समेत मुकुन्दसेन द्वितीयको पाइएको छ । पृथ्वीपाल सेनको समेत ऋषिकेश र भवानी उल्लेखित डकुमेन्ट समेत फेला परेको छ (पाण्डे, पृष्ठ ४६) ।

यसप्रकार पाल्पाका सेन राजाहरूले रुरु क्षेत्रलाई निकै महत्व दिएको पाइन्छ । पृथ्वीनारायण शाहको नेपाल एकीकरणपछि सुरुवाती शाह राजाहरूले रुरु क्षेत्रको महत्वलाई विर्से पनि पछिका शाह राजाहरूले हिन्दूहरूको पवित्र तीर्थ स्थल रुरुक्षेत्रलाई महत्व दिएको पाइन्छ । ऋषिकेश मन्दिर परिसरबाट आधा कि.मी. दक्षिणमा रहेको सत्येश्वर महादेव मन्दिर अमरसिंह थापाले वनाएका थिए । संभवत भूकम्पबाट  सो मन्दिर भत्किसकेपछि  वि.सं. १८७९ मा राजेन्द्र विक्रम शाहको पालामा  भीमसेन थापाले सो मन्दिर पुनर्निर्माण गरी ३५६ मुरी खेत र केही पाखो मन्दिरको पूजाआजा र उत्सव मनाउन गुठी राखी दिएका थिए । यसैगरी १८२३ A.D. मा ठूलो घण्ट समेत उनले चढाएका थिए । त्यसपछि रणवीर सिंह थापाले  समेत वि.सं. १८९१ र वि.सं. १८९५ मा पहिले दिएको

सुविधालाई निरन्तरता दिँदै पुरोहितलाई रुक्का समेत दिएका थिए (शर्मा, पृष्ठ ४७)। यसप्रकार पौराणिककालदेखि हिन्दूहरूको पवित्र चारधाम मध्ये एकको रुपमा प्रसिद्धी पाएको रुरु क्षेत्र सेनकाल हुँदै वर्तमान समयसम्म पनि एउटा महत्वपूर्ण धार्मिक तीर्थस्थलको रुपमा रहन सफल भएको छ ।

**रुरु क्षेत्रको ऐतिहासिक र सांस्कृतिक महत्व**

पवित्र कालीगण्डकी र रिडी खोलाको संगम स्थलमा अवस्थित रुरु क्षेत्रमा भगवान विष्णु ऋषिकेशको रुपमा साक्षत र कालीगण्डकीमा शालिकरामको रुपमा विराजमान रहेको धार्मिक विश्वास छ । नेपालको चारधाम मध्ये एक मानिने यस क्षेत्रमा वैदिककालदेखि नै भृगु, देवदत्त, श्रृङ्गी र अयुर्व जस्ता ऋषिमुनिहरूको ध्यानकेन्द्र र आश्रय स्थलको रुपमा रहेको विभिन्न पुराणहरूमा उल्लेख पाइन्छ । कालीगण्डकी नदीमा स्नान गरी ऋषिकेश भगवानको दर्शन गर्दा भारतका चारधाम गए वरावरको पुन्य प्राप्त हुने र देव ऋण, ऋषि ऋण र पितृ ऋण तिरिने धार्मिक विश्वास छ । प्राचीनकालदेखि नै मुक्तिनाथ मानसरोवर जाने प्राचीन मार्गमा पर्ने यो क्षेत्रमा सेनकाल, शाहकाल र राणाकालमा वनेका थुप्रै कला तथा वास्तुकलाहरू छरिएर रहेका छन् । ती सम्पदाहरूको संरक्षण, पूजाआजाको व्यवस्थापन, जात्रा पर्व, मेला आदि संचालनका लागि तत्कालीन शासकहरूले गुठीको राम्रो व्यवस्थापन गर्नुका साथै ताम्रपत्र र रुक्का समेत पुजारी र गुठीयारीलाई दिएको पाइन्छ । अमूर्त सम्पदाको सम्वाहकको रुपमा रहेको माघेसंक्रान्ती मेला, हरिवोधनी एकादशी, ऋषिकेश भगवानको रथयात्रा, कालीगण्डकी नदीको किनारमा गरिने मृत्यु संस्कार, वैदिक पूजा विधि आदि जस्ता परम्पराको निरन्तरताले गर्दा रुरु क्षेत्रको धार्मिक, सांस्कृतिक तथा ऐतिहासिक महत्व रहेको छ ।

**रुरु क्षेत्रका महत्वपूर्ण कला तथा वास्तुकला**

पौराणिककाल देखिनै हिन्दूधर्मावलम्वीहरूको प्रवित्र तीर्थस्थलको रुपमा कालीगण्डकी र रिडी खोलाको संगमस्थलमा रहेको ऋषिकेश मन्दिर परिसरमा सेनकाल, शाहकाल र वर्तमान समयमा वनेका अनेकौं सम्पदाहरू छरिएर रहेका छन् । ऋषिकेश मन्दिर परिसर र रुरु क्षेत्रमा रहेका केहि महत्वपूर्ण सम्पदा यस प्रकार रहेका छन् ।

१. **ऋषिकेश मन्दिर** : ऋषिकेश मन्दिर परिसरको आगनको मध्यभागमा अवस्थित यो मन्दिर प्रारम्भमा मुकुन्दसेन प्रथमले कालीगण्डकीको किनारमा स्नान गर्ने क्रममा फेला परेको चतुर्वाहु विष्णुको मूर्ति गर्भगृहमा राखी वनाएको भन्ने परम्परा रहेको छ । गुम्वजशैलीमा रहेको वर्तमान मन्दिर भने वि.सं. १८१९ मा रणदल पाण्डेले वनाउन लगाएका हुन् । पछि मन्दिरलाई कमलको फूल आकारको स्वरुप दिई गजुर समेत राखिएको पाइन्छ । मन्दिरको पूजाआजा चलाउनको लागि राजा

मुकुन्दसेन प्रथमले गुठीको व्यवस्था गर्नुका साथै नित्यपूजा संचालनको लागि अर्गलीका भट्टराई ब्राहमणहरूलाई लालमोहर लगाई पूजा व्यवस्थापन समेत गरेका थिए। अहिले यो गुठीसँग ७०० रोपनी जग्गा रहेको छ।

२. **राधाकृष्ण मन्दिर** : ऋषिकेश मन्दिरको उत्तरतर्फ नेपाली तल्लेशैलीमा शाहकालमा राधाकृष्णको मन्दिर वनाएको पाइन्छ। ज्ञानेश्वर सरस्वतीका अनुसार यस मन्दिरको निर्माण स्व.फौजदार अम्वरराजले गराएका थिए। मन्दिरको गर्भगृहमा भगवान विष्णुको दश अवतार र राधाकृष्णको मूर्ति रहेको छ। अम्वरराजले मन्दिरको नित्य नैमित्य पूजा र जात्रा संचालनका लागि वि.सं. १८८६ मा गुठी समेत राखिदिएका थिए।

३. **रुरु कन्या मन्दिर** (**ऋषिकेश परिसर**): ऋषिकेश मन्दिरको अगाडिपट्टि शिखरशैलीमा चुनासुर्कीको प्रयोग गरी रुरु कन्याको मन्दिर बनाएको छ। गर्भगृहमा रुरु कन्याको गर्भगृहमा तामाबाट वनेको मूर्ति प्रतिस्थापन गरिएको छ। देवदत्त ऋषि र प्रम्लोचाको गर्भवाट जन्मेकी रुरु कन्याले यो क्षेत्रमा कठोर तपस्या गरी भगवान ऋषिकेशको दर्शन पाएकाले रुरु कन्याको मन्दिर ऋषिकेश मन्दिरको अगाडिपट्टि वनाएको हो।

४. **गायत्रीदेवी मन्दिर** : ऋषिकेश मन्दिर परिसरमा रहेको अर्को मन्दिर गायत्री देवीको मन्दिर हो। यो मन्दिर राधाकृष्ण मन्दिरको दक्षिणमा अवस्थित छ। आधुनिक निर्माण सामाग्रीको प्रयोग गरी वि.सं. २०१९ मा मिश्रित शैलीमा डण्डी श्वामी वोधाश्रमदद्वारा यो मन्दिर निर्माण गरिएको थियो। मन्दिरको गर्भगृहमा सिंहमरमरको गायत्रीदेवीको मूर्ति रहेको छ। यसको नियमित पूजा चलाउन ५ विगा जग्गा गुठी समेत राखिएको छ।

५. **शिव** (**महादेव**) **मन्दिर** : ऋषिकेश मन्दिर परिसरको पूर्वी दिशामा महादेव मन्दिर रहेका छन्। तीनवटा महादेवको मन्दिरलाई एकै स्थानमा जोडेर आयातकार स्वरुपमा यी मन्दिरको निर्माण गरिएको पाइन्छ। यी मन्दिरको नाम क्रमश शान्तभक्तेश्वर, शेरभक्तेश्वर र शान्त मुक्तेश्वर नामाकरण गरी गर्भगृहमा शिवलिङ्ग स्थापना गरिएको छ। वि.सं. १९६७ मा शेर सम्सेर र उनकी श्रीमती शान्तकुमारी देवीबाट यी मन्दिरको निर्माण गरिएको हो।

यी महत्वपूर्ण सम्पदा वाहेक ऋषिकेश मन्दिर परिसरमा शाहकाल र आधुनिक कालमा वनेका सत्तल, यज्ञ मण्डप र भक्तेनीहरू वस्ने घरहरू समेत रहेका छन्।

ऋषिकेश मन्दिर परिसर बाहेक रुरु क्षेत्रमा कैयौ महत्वपूर्ण कला तथा वास्तुकलाहरू छरिएर रहेका छन्। तीमध्ये वंगलामा अवस्थित गुम्वज् शैलीको वि.सं. १८७९ मा तत्कालीन प्रधानमन्त्री भिमसेन थापाद्वारा निर्मित सत्येश्वर महादेव मन्दिर र सत्तल, वंगलामा नै रहेको हाल भत्किसकेको मोतिलाल श्रेष्ठद्वारा निर्माण

गरिएको नेपाली शैलीको भिमसेन मन्दिर, रिडी वजारको भक्तेनीटोलमा अवस्थित मानकोटबाट कल्पवाश वस्न आएकी लिला कुमारीद्बारा निर्मित गुम्वज शैलीको लक्ष्मीनारायण मन्दिर, वि.सं.१५३० मा पाल्पाली राजा मणिमुकुन्दसेनद् बारा निर्मित र हाल पुनर्निर्माण गरिएको मणिमुकुन्देश्वर महादेव, रिडी वजारको ठाडो गल्लीमा रहेको आयातकार स्वरुपमा वि.सं. १९७९ मा कर्णेल बहादुर गम्भिर सिंह रायमाझीकी श्रीमती तिलकुमारीद्वारा निर्मित गम्भिर मुक्तेश्वर महादेव लगायत रिडी वजारमा रहेका परम्परागत नेपारी शैलीका घरहरू समेत रुरु क्षेत्रमा रहेका महत्वपपूर्ण कला तथा वास्तुकलाहरू हुन् ।

**रुरु क्षेत्रमा मनाइने प्रमुख मेला, जात्रा, पर्व र संस्कार**

**माघे संक्रान्ति** :– माघे संक्रान्ति, मकर संक्रान्ति तथा माघी नामले चिनिने यो नेपालको एक प्रमुख चाड हो । यो माघ महिनाको पहिलो दिन पर्दछ । ज्योतिष शास्त्र अनुसार सौरमासको हिसावले माघे संक्रान्तिदेखि सूर्य धनु राशिवाट मकर राशिमा प्रवेश गर्ने हुनाले यसलाइ “मकर संक्रान्ति” भनिएको हो । सामान्यतया सूर्यले सबै राशीलाई प्रभावित गरेतापनि सूर्यको कर्कट राशि र मकर राशि प्रवेशलाई धार्मिक दृष्टिले महत्वपूर्ण मानिन्छ (विकिपिडिया) ।

माघे संक्रान्ति पर्वमा नेपालभरि विभिन्न पवित्र नदी तथा त्रिवेणीमा स्नानगरी मन्दिरहरूमा दर्शन गर्ने प्रचलन छ। ती मध्ये कालीगण्डकी र रिडी खोलाको संगमस्थल रुरु क्षेत्रमा पनि माघे संक्रान्तिमा ठूलो मेला लाग्ने गर्दछ। यो मेला तीन दिनसम्म लाग्ने गर्दछ। धार्मिक पर्यटकको घुइचो रहने यो मेला जेठी, माइली र कान्छी संक्रान्तीका रुपमा प्रख्यात छ। माघे संक्रान्तीको पहिलो दिन वृद्ध व्यक्तिहरूको, दोस्रो दिन युवाहरू र तिनका परिवारको लागि र तेस्रो दिन दलित र पहिलो र दोस्रो दिन दर्शन गर्न जान नपाएका व्यक्तिहरूको लागि मानिन्छ। (पाण्डे, पृष्ठ १५४) मेलाको पहिलो दिन विहानदेखि कालीगण्डकी नदीमा स्नान गरी ऋषिकेश मन्दिरमा पूजा अर्चना र दर्शन गर्नेको घुँइचो लाग्दछ। काली गण्डकी नदीमा स्नान गरी ऋषिकेशको दर्शन गर्दा चारधाम गए वरावरको पुण्य प्राप्त हुने र देव ऋण, पितृ ऋण र ऋषि ऋण तिरिने धार्मिक विश्वास छ। यस वाहेक माघे संक्रान्तिमा रिडीमा आफ्ना पितृहरूलाई पिण्ड दिनेहरूको समेत अत्याधिक भीड लाग्ने गर्दछ। यस क्षेत्रमा आफ्ना पितृहरूलाई सम्झेर तिथि श्राद्ध गर्नाले काशी गया गएर श्राद्ध गरे सरह फल प्राप्त हुने धार्मिक विश्वास रहि आएको छ।

**हरिवोधनी एकादशी**

हरिवोधनी एकादशी वर्षमा पर्ने चौविस एकादशीमध्ये सबैभन्दा ठूलो एवं महत्वपूर्ण एकादशी हो। त्यसैले यसलाई ठूलो एकादशी पनि भनिन्छ। हिन्दू धर्मशास्त्रमा एकादशीलाई भगवान विष्णुको उपासना गर्ने पर्वको रुपमा लिइन्छ। आषाढ शुक्ल

एकादशीको दिन क्षीर सागरमा सुत्नु भएका विष्णु आजैको दिन उठ्नु हुने पुराणमा उल्लेख छ । यसैकारण पनि यस दिनलाई हरिवोधनी एकादशी भनिएको हो भन्ने विश्वास गरिन्छ । भविश्य पुराणमा अन्य एकादशीमा भन्दा आज गरिने भगवान विष्णुको उपासना फलदायी हुने कुराको उल्लेख पाइन्छ (विकिपिडिया) ।

रुरु क्षेत्रमा भगवान विष्णु ऋषिकेशको रुपमा साक्षत रहेको धार्मिक विश्वासका साथ माघे संक्रान्तिपछि दोस्रो ठूलो मेला हरिवोधनी एकादशी र द्वादशीका दिन लाग्ने गर्दछ । यसदिन गुल्मीपट्टिको भागवाट वाजागाजासहित फूलपाती लिएर ऋषिकेश मन्दिरमा जाने गर्दछन् । द्वादशीमा ऋषिकेशको सांकेतिक मूर्तिसहितको रथ यात्रा पाल्पा र गुल्मीको रिडी वजारमा आयोजना गरिन्छ । मुख्यतया द्वादशीका दिन ऋषिकेश मन्दिरमा वन्ने मनभोगको प्रसाद ग्रहण गर्नेको ठूलो भीड नै लाग्ने गर्दछ । यस दिन एकादशी नुहाउन र ऋषिकेशको जात्रा हेर्न टाढाबाट भक्तालुहरू आउने, अघिल्लो दिन आएर  वास वस्ने र अर्को दिन एकादशी नुहाउने, ऋषिकेशको दर्शन गर्ने र द्वादशीमा रथयात्रा हेर्नेको भीड नै लाग्ने गर्दछ । एकादशीलाई लक्षित गरेर वगरमा व्यापार गर्ने, कालीपारे नाचको प्रदर्शन गर्ने समेत गरिन्छ ।

यी वाहेक रुरु क्षेत्रमा मनाइने मेला, चाडपर्वमा निर्जला एकादशी, दशैं तिहार, कल्पवास, औंसी, चतुर्दशी, रुरु क्षेत्र परिक्रमा आदि महत्वपूर्ण रहेका छन् ।

**मृत्यु संस्कार**

पवित्र कालीगण्डकी र रिडी खोलाको संगम स्थलको रुपमा रहेको रुरुक्षेत्रमा गरिने महत्वपूर्ण संस्कारहरू मध्ये एक मृत्यु संस्कार हो । यस ठाउँमा गुल्मी, अर्घाखाँची, पाल्पा, स्याङ्जा लगायत नेपालका  विभिन्न स्थानबाट व्यक्तिको मृत्यु पछि अन्त्यष्टि गर्न शवहरू ल्याउने गर्दछन् । काली गण्डकीको वहाव क्षेत्रमा पर्ने पवित्र चार तीर्थस्थलहरूमध्ये रुरुक्षेत्रलाई महातीर्थ भनिएको छ । यस ठाउँमा भगवान विष्णु साक्षत ऋषिकेशको रुपमा रहनुका साथै कालीगण्डकीको पिधमा शालीग्रामको रुपमा वास गर्नु भएको हुँदा यस पवित्र स्थलमा जसको मृत्यु पछि अन्त्येष्टि संस्कार गरिन्छ उसलाई भगवान ऋषिकेशले वैकुण्ठबास गराउनु हुन्छ र जन्म र मृत्युको चक्रमा फस्न नपर्ने धार्मिक मान्यता रही आएको हुँदा यस क्षेत्रमा गरिने अन्त्यष्टिलाई निकै महत्वपूर्ण मानिन्छ ।

**सारांश**

पौराणिक र ऐतिहासिक तथ्यका आधारमा रुरु क्षेत्र हिन्दू धर्मावलम्वीहरूको महत्वपूर्ण केन्द्रको रुपमा रहेको देखिन्छ । अयुर्व ऋषि, भृगु ऋषि, श्रृङ्गी ऋषि, देवदत्त ऋषि जस्ता पौराणिककालका  महत्वपूर्ण ऋषिमुनिहरूको ध्यान केन्द्र र आश्रयस्थलको रुपमा रुरु क्षेत्र रहेको छ । पवित्र कालीगण्डकी र रिडी खोलाको संगमस्थलमा अवस्थित रुरु क्षेत्रमा भगवान विष्णु ऋषिकेशको रुपमा साक्षत र

कालीगण्डकीमा शालिग्रामको रुपमा विराजमान भएको धार्मिक विश्वास छ। वराहपुराण र स्कन्द पुराणको हिमवत्खण्डको रुरु महात्म्यमा रुरु क्षेत्रको धार्मिक र पौराणिक महत्वको वारेमा प्रकाश पार्दै देवदत्त ऋषि र प्रम्लोचाको प्रेम सम्वन्ध र तीवाट जन्मेकी रुरु कन्याको कथा व्याख्या गरिएको छ। प्राचीनकालदेखि नै लुम्विनी, मुक्तिनाथ र मानसरोवर जाने महत्वपूर्ण मार्गमा रुरुक्षेत्र परेतापनि यसको महत्व प्रस्ट्याउने ऐतिहासिक तथ्यहरू उपलब्ध हुन सकेका छैनन्। रुरु क्षेत्रलाई पाल्पामा सोहौ शताब्दीको सुरुवातसँगै शासन गर्ने सेन राजाहरूले हिन्दू धर्मावलम्वीको धार्मिक केन्द्रको रुपमा स्थापित गराउन महत्वपूर्ण योगदान दिएको पाइन्छ। रुरु क्षेत्रमा वर्तमानमा उपलब्ध प्राचीन कला तथा वास्तुकलाको नमुना सेनकाल देखिका पाइन्छन्। प्रारम्भिक शाहकालमा रुरु क्षेत्रको धार्मिक महत्वलाई कम मूल्याङ्कन गरिएता पनि पछिल्लो शाहकाल र राणाकालमा यस क्षेत्रमा वनेका कला तथा वास्तुकला, रिडी बजारमा रहेका नेपाली परम्परागत शैलीका घरहरू, अमूर्त सांस्कृतिक सम्पदाको रुपमा रहेको माघे संक्रान्ति मेला, हरिवोधनी एकादशी र रथयात्रा, पौराणिककालदेखि निरन्तर चलिआएको वैदिक परम्परा आदि कारणले रुरु क्षेत्र नेपालको पशुपति क्षेत्र जस्तै सांस्कृतिक महत्वको आधारमा सन् २००८ मा विश्वसम्पदाको सम्भावित सूचीमा रहन सफल भएको छ।

## सन्दर्भग्रन्थ


खनाल, मोहन प्रसाद (२०६१) : सेन राज्यको राजनैतिक इतिहास (नेपाल र एसियाली अध्ययन केन्द्र, त्रि.वि. काठमाडौं)।

गुरुङ्ग, जगमान (२०६१) : नेपालको राष्ट्रिय समिकरणको परिपेक्ष्यमा गण्डकी प्रस्रवण क्षेत्रका तीर्थस्थलहरूको विश्लेषणात्मक अध्ययन (नेपाल र एसियाली अनुसन्धान केन्द्र त्रि.वि. काठमाडौं)।

ढकाल, प्रा. डा. वेणीमाधव (२०७५) : (हिमवतखण्ड गण्डकी क्षेत्र महात्म्यम् तेस्रो अध्याय रुरु क्षेत्रको वर्णन) काठमाडौ।

पाण्डे, रामनिवास :Sacred complex of Ruru Ksetra ,(Adroit Publishers, Delhi)=whc=unesco=org÷tentative lists÷5259÷

शर्मा, डिल्लीराज (१९८७) : "नेपालमा नवपाषण युगको खोजीको सन्दर्भमा पाल्पामा प्राप्त नवपाषणकालीन औजार _"Nepalese culture" vol, v1 ,

शर्मा डिल्लीराज (२०६०) : गण्डकी प्रस्रवण क्षेत्रको सांस्कृतिक सम्पदा, कला र वास्तुकला (नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रि.वि. काठमाडौ)।

बज्राचार्य, धनवज्र (२०३०) : लिच्छवीकालका अभिलेख (नेपाल र एसियाली अध्ययन संस्थान त्रि.वि. काठमाडौं)।

श्रेष्ठ, टेक बहादुर (२०५९) : पर्वत राज्यको ऐतिहासिक रुपरेखा (काठमाडौंः नेपाल र एसियाली अध्ययन केन्द्र त्रि.वि. काठमाडौ )

# नेपालका प्राचीन स्मारकहरूको संरक्षणमा संलग्न अवयवहरू



✍ **दीपक थापा मगर***

## पृष्ठभूमि

नेपालमा भएका ऐतिहासिक तथा धार्मिक स्मारकहरू, पुरातात्विक स्थलहरू, कलात्मक तथा पुरातात्विक वस्तुहरू, धार्मिक नाच, जात्रा, रीतिरिवाज तथा पर्वहरू सबैको संरक्षण आजको मूल चिन्ता र चासोको विषय बनेको छ । यस्ता संस्कृति र सभ्यताका महत्वपूर्ण निधिहरूको संरक्षण हुन जरुरी छ । त्यसैले यस विषयमा सक्रिय चिन्तन हुनु वर्तमान आवश्यक्ता हो । नेपालका भौतिक तथा सांस्कृतिक सम्पदाको रुपमा रहेका वास्तुकला, मूर्तिकला, ऐतिहासिक वस्तुहरू, स्मारकहरू, निजी ऐतिहासिक घर-भवनहरू तथा अभिलेखहरूले तत्कालीन जीवनशैली र संस्कृतिको परिचय दिन्छ । नेपालमा यस्ता अमूल्य प्राचीन सांस्कृतिक, धार्मिक एवम् पुरातात्विक स्मारकहरू अनगिन्ती छन् । यस्ता प्राचीन स्मारक तथा ऐतिहासिक, धार्मिक तथा पुरातात्विक महत्वका स्थलहरूको संरक्षण, सम्वर्द्धन र सुरक्षण हुनु जरुरी छ । तसर्थ प्राचीन स्मारक र पुरातात्विक वस्तुको विषय उठान गरिसकेपछि यहाँ यसका अर्थ समेत प्रष्ट पार्नु जरुरी छ ।

## परिभाषा र अर्थ

परापूर्वकालमा निर्माण वा स्थापना भएका इतिहास, कला, साहित्य, वास्तुकला आदिको दृष्टिकोणले महत्वपूर्ण सार्वजनिक सम्पत्ति, कम्तीमा एक सय वर्ष पुरानो मन्दिर, घर, देवालय, शिवालय, मठ, गुम्बा, विहार, स्तुपा, ढुंगेधारा, कुवा, इनार आदिलाई प्राचीन स्मारक भनिन्छ । पूर्वजहरूले सिर्जना गरेका साना भन्दा साना वस्तुदेखि ठूला-ठूला स्मारकहरू, पुरातात्विक घर भवन, स्थल एवम्

---

* कानून अधिकृत, पुरातत्व विभाग

अवशेषहरू, कलाकृतिहरू आदिलाई सम्पदा भन्न सकिन्छ। यस्ता सम्पदाहरू कुनै पनि राष्ट्रको गौरवशाली अवयवहरू हुन्। यिनीहरूलाई राष्ट्रिय नीधिको रुपमा लिन सकिन्छ। यस्ता ऐतिहासिक, पुरातात्विक, धार्मिक एवम् सांस्कृतिक सम्पदाहरूको आर्थिक एवम् पर्यटकीय महत्व वर्तमान समयमा अझ प्रगाढ बन्दै गएको छ। यस्ता सम्पदाहरूलाई विशेष गरी सांस्कृतिक सम्पदाको सूचीमा राखी परिभाषित गर्ने गरेको पाइन्छ।

नेपालको सन्दर्भमा प्राचीन स्मारक संरक्षण ऐन (संशोधन सहित), २०१३ ले "**प्राचीन स्मारक**" र "**पुरातात्विक वस्तु**" शीर्षकमा मानव निर्मित सम्पदाहरूलाई परिभाषित गरेको देखिन्छ। यस परिभाषामा नेपाल राज्य भर भएका सम्पूर्ण मूर्त र अमूर्त सम्पदाहरूलाई समेट्ने प्रयास भएको पाइन्छ। तर "**प्राचीन स्मारक**" वा "**पुरातात्विक वस्तु**" वा "**सम्पदा**" शब्दमा सारभूत रुपमा फरक अनुभूति हुन्छ।

प्राचीन स्मारक संरक्षण ऐन (संशोधन सहित), २०१३ का अनुसार "**प्राचीन स्मारक भन्नाले इतिहास, कला, विज्ञान, वास्तुकला वा स्थापत्यकलाको दृष्टिकोणले महत्व राख्ने सार्वजनिक सम्पत्ति एकसय वर्ष नाघेको मन्दिर, स्मारक, घर, देवालय, शिवालय, मठ, गुम्बा, विहार, स्तुपा आदि सम्झनु पर्छ र सो शब्दले स्मारक रहेको ठाउँ र राष्ट्रिय वा अन्तर्राष्ट्रिय दृष्टिकोणले विशिष्ट मूल्य राख्ने एक अर्कोसँग जोडिएको वा एकै इलाकामा बेग्लाबेग्लै रुपमा अवस्थित मानव बस्ती वा स्थल प्राचीन मानव बस्तीको अवशेष, प्राचीन स्मारकहरूको भग्नावशेष, गुफा आदि समेतलाई जनाउँछ।**" भनी उल्लेख गरेको छ।

**पुरातात्विक स्थल वा वस्तु** भन्नाले त्यो साधन वा माध्यम हो जसको सहायताले हाम्रो अतीत वा इतिहासको बारेमा जानकारी पाउन सकिन्छ। प्राचीन घर, बस्ती, प्रागःऐतिहासिक हातहतियार, जीवनशैली झल्कने अवशेष, अभिलेख आदिलाई पुरातात्विक वस्तु भन्न सकिन्छ।

प्राचीन स्मारक संरक्षण ऐन (संशोधन सहित), २०१३ दफा २ खण्ड (ख) अनुसार **पुरातात्विक महत्वका वस्तु** भन्नाले "**प्रागः ऐतिहासिक कालमा मानिसले निर्माण गरी उपभोग गरेको वस्तु वा कुनै पनि देशको इतिहास बोध गराउने हस्तलिखित वंशावली, हस्तलिखित ग्रन्थ, स्वर्णपत्र, शिलापत्र, ताम्रपत्र, काष्ठपत्र, भोजपत्र, ताडपत्र, कागजपत्र, मुद्रा वा ऐतिहासिक विशिष्ट व्यक्ति बसेको घर र त्यस्तो व्यक्तिले प्रयोग गरेको वस्तु, ढुंगा, काठ, माटो, हस्तिहाड, हाड, काँच, कपडा, कागज, धातु आदि वा बेलबुट्टा भरी आकर्षक ढंगले बनाएको घरको कुनै महत्वपूर्ण भाग वा सो घरमा उपयोग गरिएको वस्तु वा बेलबुट्टा भरी वा नभरी बनाइएको मूर्ति, देवी देवताको मन्दिर, चैत्य, शालिक, पौभाचित्र, राजप्रासादमा उपयोग भए-गरिएका वस्तु, पशुपन्छी, स्थावर जंगमको प्रतिकृति र नेपाल सरकारले समय-समयमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएको**

**वस्तुसमेत सम्झनु पर्छ ।"** भनी उल्लेख गरेको छ ।

A monument is a type of structure that was explicitly created to commemorate a person or event, or which has become relevant to a social group as a part of their remembrance of historic times or cultural heritage, due to its artistic, historical, political, technical or architectural importance- (Wikipedia, the free encyclopedia)

परम्परादेखि चलिआएका लोकसंस्कृति, परम्परा, चाडपर्व, जात्रा, संस्कार, मानवीय जीवनपद्धति, धर्म, चालचलन आदिलाई अमूर्त सम्पदा भन्न सकिन्छ । यस्ता सम्पदाहरू तिनीहरूको स्वभावैले अनुभव मात्र गर्न सकिने प्रकृतिका हुन्छन् । तिनीहरूको कुनै आकार प्रकार एवम् स्वरुप हुदैन । मूर्त सम्पदाको भौतिक स्वरुप देखिए तापनि समाज र राष्ट्रलाई जिवन्तता दिनका लागि अमूर्त सम्पदाहरूको पनि उत्तिकै महत्वपूर्ण योगदान रहेको हुन्छ । विशेष गरी सम्पदाहरूलाई तिनीहरूको स्वरुप, गुण एवम् प्रकृतिको आधारमा सांस्कृतिक, प्राकृतिक, धार्मिक, ऐतिहासिक, पुरातात्विक भनी विभाजन गरी अध्ययन गरिएको समेत पाइन्छ । त्यसै गरी भौतिक र अभौतिक रुपमा पनि सम्पदाहरूको वर्गिकरण गरेको पाउन सकिन्छ ।

मुख्यतयाः सांस्कृतिक सम्पदाहरूलाई तिनीहरूको विशेषता, स्वरुप, प्रकृति, गुण आदिको आधारमा  मूर्त सम्पदा र अमूर्त सम्पदा गरी दुई भागमा विभाजन गर्न सकिन्छ । मानव निर्मित ठोस आकार प्रकार एवम् स्वरुप भएका सम्पदाहरूलाई मूर्त सम्पदा भनिन्छ । हाम्रा पूर्वजहरूले निर्माण गरेका सानो पोते तथा प्वालका दानाहरूदेखि लिएर ठूला-ठूला राजप्रसादहरू, मन्दिरहरू, मठहरू, स्तुपा, विहार एवम् चैत्यहरू, घर भवनहरू कलाकृतिहरू, पुरातात्विक स्थल एवम् अवशेषहरू आदि मूर्त सम्पदा अन्तर्गत पर्दछन् ।

हाम्रा पूर्खाहरूले सिर्जना गरेका सबै कुराहरू चाहे **त्यो मूर्त होस् वा अमूर्त होस्** लाई सम्पदा भनेर परिभाषित गरिएको पाइन्छ । यस्ता सम्पदाहरू भविष्यका पुस्ताहरूका लागि पुर्खाहरूको अनुपम उपहार हुन सक्छन् । यस्ता सम्पदाहरू पूर्खाहरूको नासोको रुपमा सही स्वरुपमा सुरक्षित अवस्थामा भावी पुस्तालाई हस्तान्तरण गर्नु हामी सबैको दायित्व हो ।  मन्दिर, विहार, गुम्बा, चैत्य, स्तुपा, मठ, सत्तल, पाटी लगायत प्राचीन स्मारकहरूलाई प्राचीन सम्पदासमेत मानी आएको पाइन्छ । ऐतिहासिक, पुरातात्विक, धार्मिक, पौराणिक, सांस्कृतिक, सामरिक, जैविक, राजनैतिक महत्व बोकेका प्राचीन सम्पदाहरूको मौलिकता एवम् ऐतिहासिकता परिवर्तन नहुने गरी संरक्षण, सुरक्षण र सम्वर्द्धन हुनु आवश्यक छ । यस्ता प्राचीन सम्पदाहरूको संरक्षण, मर्मत तथा जीर्णोद्धार कार्य पुरातत्व

विभागले गर्दै आएको छ ।

प्राचीन स्मारक संरक्षण ऐन (संशोधनसहित), २०१३ को दफा ३क उपदफा (१) मा नेपाल सरकारले स्वामित्वको दृष्टिले प्राचीन स्मारकलाई सार्वजनिक र नीजि प्राचीन स्मारक गरी दुई किसिमले वर्गीकरण गर्न सक्ने व्यवस्था रहेको छ । साथै उपदफा (२) मा नेपाल सरकारले महत्वको दृष्टिले अन्तर्राष्ट्रिय, राष्ट्रिय, प्रादेशिक र स्थानीय महत्व गरी चार भागमा वर्गीकरण गर्न सकिने व्यवस्था गरेको छ ।

युनेस्कोले सन् १९७९ मा नेपालका विभिन्न सांस्कृतिक तथा प्राकृतिक सम्पदाहरूलाई "विश्व सम्पदा क्षेत्रको सूची" मा सूचीकृत गरेको थियो । नेपालका प्राकृतिक सम्पदाहरू समेतलाई युनेस्कोले विश्व सम्पदा सूचीमा समावेश गरे तापनि यहाँ यी सात सम्पदाहरू एवम् विश्व सम्पदा सूचीमा समावेश उन्मुख नेपालका सांस्कृतिक, ऐतिहासिक, पुरातात्विक सम्पदाहरूको बारेमा चर्चा गरिएको छ ।

### १. काठमाडौं दरवार क्षेत्र

काठमाडौ उपत्यकाको मध्यभागमा रहेको यो दरवार प्राचीन नेपालको अनुपम नमूना हो । नेपालका अधिकांश सांस्कृतिक एवम् पुरातात्विक क्रियाकलापहरूको केन्द्रको रुपमा परिचित काठमाडौं उपत्यकामा प्राचीन स्मारक स्थलहरूको बाहुल्यता रहेको छ । वास्तुकला तथा पुरातात्विक दृष्टिले "**काठमाडौं उपत्यकालाई एउटा खुला आकाशे संग्रहालय**" को रुपमा लिने गरिन्छ । काठमाडौं उपत्यकाका तीनै सांस्कृतिक केन्द्रहरूमध्ये हनुमानढोका राजदरवार एक केन्द्रको रुपमा रहेको मानिन्छ । यस दरवार क्षेत्रले मल्लकालदेखि नै प्रसिद्धि पाएको थियो भने शाहकालमा यसले "**बसन्तपुर दरवार**" को नामले प्रसिद्धि पाएको इतिहास साक्षी छ । यो दरवार क्षेत्रमा रहेका ऐतिहासिक भवन र मन्दिर राजा रत्न मल्लदेखि पृथ्वीविरविक्रम शाहका पालासम्म निर्माण गरिएको प्राप्त अभिलेखहरूबाट प्रष्ट हुन्छ ।

हनुमानढोका क्षेत्र र वरिपरिका सांस्कृतिक पर्यावरणलाई सन् १९७९ मा युनेस्कोको विश्व सम्पदा समितिले काठमाडौ उपत्यकाका सांस्कृतिक सम्पदा अन्तर्गत "विश्व सम्पदा सूची" मा समावेश गरेको थियो । प्राचीन स्मारक संरक्षण ऐन, २०१३ बमोजिम नेपाल सरकारले हनुमानढोका दरवार परिसर र वरिपरिका क्षेत्रलाई समावेश गरेर नेपाल राजपत्र खण्ड ३४, मिति २०४१।०४।१५ को नेपाल राजपत्र भाग ३ मा "हनुमानढोका संरक्षित स्मारक क्षेत्र" घोषित सूचना प्रकाशित गरेको थियो । साथै नेपाल राजपत्र खण्ड ३७ संख्या ३६ मिति २०४४।०९।१३ मा यस क्षेत्रको वर्तमान सिमानासहित चार किल्ला प्रकाशित गरिएको थियो ।

### २. पाटन दरवार क्षेत्र

पाटन कला नै कलाले युक्त शहरको रुपमा परिचित छ । काष्ठकला, प्रस्तरकला, मूर्तिकला, चित्रकला, धातुकला लगायत वास्तुकलाको उद्‌गम स्थलको

रुपमा पाटनलाई चिनिन्छ । लिच्छविकालमा पाटनलाई “**युपग्राम**” को नामले पुकारिन्थ्यो । लिच्छविकालमा पाटन क्षेत्रमा थुप्रै अभिलेखहरू, मूर्तिहरू पाइएकोले यो क्षेत्रलाई कला, वास्तुकला एवम् सांस्कृतिक कलाको केन्द्रको रुपमा विकास भैसकेको अनुमान गरिन्छ । यस नगरलाई “**मनिङ्गल**”, “**यल**”, “**ललितपत्तन**”, “**ललितपुरी**”, “**पाटन**” आदि नामले समेत परिचित रहेको अभिलेखहरूबाट प्रष्ट हुन्छ । पाटनलाई अझ City of Fine Arts भनेर पनि चिनिन्छ । प्रायः राजा सिद्धिनरसिंह, श्रीनिवास र योगनरेन्द्र मल्लले पाटनका स्मारक स्थलहरूको निर्माण गर्न लगाएको अभिलेखहरूबाट जानकारी पाउन सकिन्छ ।

विभिन्न स्मारकहरूको निर्माणमा प्रयोग भएका मौलिक प्रविधि, शैली र स्वरुपले प्रदर्शन गरिरहेको अद्बितीय महत्वले गर्दा पाटनका कतिपय स्मारकहरू नेपाली मात्रको नभएर विश्वका सम्पूर्ण मानव समुदायकै अनुपम सिर्जना मान्न सकिन्छ । पाटन दरवार परिसरमा अवस्थित विभिन्न १९ स्मारकहरूलाई सन् १९७९ मा युनेस्कोको विश्व सम्पदा समितिले काठमाडौ उपत्यका सांस्कृतिक सम्पदा अन्तर्गत “विश्व सम्पदा सूची” मा समावेश गरेको थियो । त्यसै गरी नेपाल सरकारले पाटन दरवार परिसर र आसपासका क्षेत्रलाई समावेश गरेर “ललितपुर दरवार संरक्षित स्मारक क्षेत्र” को घोषणा गरी नेपाल राजपत्र खण्ड ३४ संख्या १६ मा २०४१ सालमा प्रकाशित गरेको थियो ।

### ३. भक्तपुर दरवार क्षेत्र

काठमाडौं उपत्यकाका मल्लकालीन तीन शहरहरूमध्ये भक्तपुर निकै प्रसिद्ध शहर मानिन्छ । लिच्छविकालमा यसलाई **खोपृङद्रङ्ग** (शिवदेव र अंशुवर्माको गोलमाढीको अभिलेख) भनिन्थ्यो । आजकल भक्तपुरको नामले प्रसिद्ध यो नगरको नाम “**भादगाउँ**” र नेवारी भाषामा “**ख्वपदे**”, “**खपुदेश**” पनि भन्ने गरेको पाइन्छ ।

नेपालका प्राचीन शहरहरूमध्ये भक्तपुरलाई ऐतिहासिक, पुरातात्विक, सांस्कृतिक हिसाबले निकै महत्वपूर्ण मानिन्छ । भक्तपुर शहरको बीचमा अवस्थित प्रसिद्ध भक्तपुर दरवारको हालका भागहरू एवम् दरवारको वरिपरि रहेका सबै स्मारकहरू प्रायः १७ औं र १८ औं शताब्दीदेखिका मानिन्छन् । भक्तपुरमा “**बसन्तपुर**” नामक राजदरवार राजा जगतप्रकाश मल्लले निर्माण गराएको अभिलेखहरूबाट जानकारी पाउन सकिन्छ । थुप्रै कलाकृतिले भरिपूर्ण दरवारको संरक्षणका निम्ती केही महत्वपूर्ण नियमहरू बनाइएको थियो । दरवारको होसियारीपूर्वक संरक्षण गर्नु पर्ने, दरवारको कसैले पनि हानी पुऱ्याउन नहुने, यसको संरक्षणका लागि शासकहरू उत्तरदायी हुनेछन् भन्ने नियमहरू अभिलेखमा पाइन्छ ।

अनेकौं कलाकृतिले सुसज्जित भक्तपुरलाई ऐतिहासिक र पुरातात्विक दृष्टिकोणले मौलिक पहिचान भएको शहर मानिन्छ । पुर्खाहरूबाट वर्तमान पुस्ताका लागि

उपहार स्वरुप प्रदान गरिएको मौलिक प्रविधि, शैली र स्वरुपयुक्त ऐतिहासिक एवम् सांस्कृतिक धरोहरका रुपमा रहेको भक्तपुरका स्मारकहरू अमूल्य राष्ट्रिय निधि हुन् । भक्तपुर दरवार र आसपासका क्षेत्रमा अवस्थित करिब १२ स्मारकहरूलाई सन् १९७९ मा युनेस्कोको विश्व सम्पदा समितिले काठमाडौं उपत्यका सांस्कृतिक सम्पदा अन्तर्गत "विश्व सम्पदा सूची" मा समावेश गरेको थियो जसको कारण यी स्मारकहरूको प्रसिद्धि अन्तर्राष्ट्रिय क्षेत्रमा समेत व्यापक हुन पुगेको छ । त्यसै गरी नेपाल सरकारले यस क्षेत्रलाई भक्तपुर दरवार संरक्षित स्मारक क्षेत्र घोषणा गरी नेपाल राजपत्र खण्ड ३४ संख्या १६ मा २०४१ मा प्रकाशित सूचना अनुसार संरक्षित स्मारक क्षेत्र घोषित भएको क्षेत्रको वर्तमान सिमाना नेपाल राजपत्र खण्ड ४६ संख्या ४७ मिति २०५३।११।२७ मा प्रकाशित गरिएको थियो ।

### ४. बौद्ध क्षेत्र

काठमाडौं उपत्यकाबाट उत्तर पूर्वी क्षेत्रमा रहेको बौद्ध आकार र उचाइको हिसाबले दक्षिण एसियाकै ठूला स्तुपा मध्ये मानिन्छ । यो बौद्धनाथ स्तुपा ३६ मिटर अग्लो रहेको छ । यसलाई "**खस्ती चैत्य**", "**खसौ चैत्य**" **र** "**खस चैत्य**" पनि भन्ने गरेको पाइन्छ । बौद्ध शिक्षा र सांस्कृतिक केन्द्रको रुपमा परिचित बौद्ध क्षेत्रलाई सांस्कृतिक, धार्मिक एवम् पुरातात्विक दृष्टिकोणले महत्वपूर्ण सम्पदाको रुपमा लिइन्छ । मण्डल आकारमा रहेको यो स्तुपाको निर्माण पाँचौ शताब्दीमा भएको मानिन्छ । त्यसै गरी यसको जीर्णोद्धार आठौं शताब्दीमा भएको प्राप्त अभिलेखहरूबाट जानकारी पाउन सकिन्छ । सो समयमा यो बौद्धनाथ स्तुपा निर्माण गर्न करिब १२ वर्ष लागेको बताइन्छ । मौलिक प्रविधि, शैली र स्वरुपमा निर्माण गरिएको बौद्धनाथ क्षेत्रलाई सन् १९७९ मा युनेस्कोको विश्व सम्पदा समितिले काठमाडौ उपत्यकाका सांस्कृतिक सम्पदा अन्तर्गत "विश्व सम्पदा सूची" मा समावेश गरेको थियो । त्यसै गरी नेपाल सरकारले यस क्षेत्रलाई बौद्ध संरक्षित स्मारक क्षेत्रको रुपमा घोषणा गरी संरक्षण, सुरक्षण, व्यवस्थापन र सम्वर्द्धनमा विश्व जगतको ध्यान आकर्षित गरेको छ ।

### ५. चाँगुनारायण मन्दिर

भगवान विष्णुको मन्दिरका रुपमा रहेको चाँगुनारायणको निर्माणका सम्बन्धमा आजसम्म पनि प्रमाणिक तथ्य फेला परेको छैन । काठमाडौं उपत्यकाका विश्व सम्पदा स्थलको संरक्षित स्मारक क्षेत्रहरूमध्येको चाँगुनारायण मन्दिर एउटा महत्वपूर्ण क्षेत्रको रुपमा रहेको छ । यस क्षेत्रलाई ऐतिहासिक, पुरातात्विक, धार्मिक एवम् सांस्कृतिक रुपमा पनि साह्रै महत्वपूर्ण मानिन्छ ।

काठमाडौ उपत्यकाका शेषनारायण, विशंखुनारायण, इचंगुनारायण मन्दिरका साथै चाँगुनारायणलाई महत्वपूर्ण चार नारायणहरू मध्ये मानिन्छ । यहाँ रहेको

शिलालेखले यो मन्दिर काठमाडौ उपत्यकाका पूराना मन्दिरमध्ये एक रहेको जनाउँछ । यहाँका प्रस्तर, काष्ठ तथा धातुकला उदाहरणीय मानिछन् । मौलिक कला, संस्कृति, मौलिक प्रविधि, शैली र स्वरुपमा निर्माण गरिएको चाँगुनारायण क्षेत्रलाई सन् १९७९ मा युनेस्कोको विश्व सम्पदा समितिले काठमाडौ उपत्यकाका सांस्कृतिक सम्पदा अन्तर्गत "विश्व सम्पदा सूची" मा समावेश गरेको थियो । त्यसै गरी नेपाल सरकारले यस क्षेत्रलाई "चाँगुनारायण संरक्षित स्मारक क्षेत्र" को रुपमा घोषणा गरी संरक्षण, सुरक्षण, व्यवस्थापन र सम्वर्द्धनमा विश्व जगतको ध्यान समेत आकर्षित गरेको छ ।

### ६. स्वयम्भू क्षेत्र

काठमाडौं उपत्यकाको पश्चिमतर्फको पद्मकण्ठ गिरी पहाडको थुम्कोमा रहेको स्वयम्भूनाथ अति प्रसिद्ध बौद्ध मन्दिर र चैत्य हो । ३६० खुड्किलो पार गरेपछि स्वयम्भूनाथको महाचैत्यमा पुग्न सकिन्छ । एघारौँ र बाह्रौँ शताब्दीअघि नै स्वयम्भू स्तुपा निर्माण भैसकेको थियो । सन् १९५३ मा पुरातत्व विभागको स्थापना भएपछि यस क्षेत्रको संरक्षण, सम्वर्द्धन तथा जीर्णोद्धारको दायित्व यस विभागले लिँदै आएको छ ।

यस क्षेत्रलाई सन् १९७९ मा युनेस्कोको विश्व सम्पदा समितिले काठमाडौ उपत्यकाका सांस्कृतिक सम्पदा अन्तर्गत "विश्व सम्पदा सूची" मा समावेश गरेको थियो । त्यसै गरी नेपाल सरकारले मिति २०५१।०५।२० मा नेपाल राजपत्रमा सूचना प्रकाशन गरेर यस क्षेत्रलाई "स्वयम्भू संरक्षित स्मारक क्षेत्र" को रुपमा घोषणा गरी संरक्षण, सुरक्षण, व्यवस्थापन र सम्वर्द्धनमा विश्व जगतको समेत ध्यान आकर्षित गरेको छ ।

### ७. पशुपतिनाथको मन्दिर क्षेत्र

विश्वभरिका हिन्दु समुदायको पवित्र तिर्थस्थलको रुपमा रहेको पशुपतिनाथ मन्दिर प्यागोडा शैलीमा निर्माण गरिएको छ । भारतका चार धामको दर्शनपछि पशुपतिनाथको दर्शन गरे मात्र चार धामको दर्शन पूरा हुने जनविश्वास हिन्दु जगतमा रहेको छ ।

काठमाडौं जिल्लाको ऐतिहासिक, धार्मिक एवम् पर्यटकीय दृष्टिले महत्वपूर्ण तिर्थ स्थलको रुपमा पशुपतिनाथको मन्दिर क्षेत्रलाई लिइन्छ । काठमाडौ जिल्लाको बागमती नदी किनारामा रहेको यो मन्दिर क्षेत्र करिब २ सय ४० हेक्टर जग्गामा फैलिएको छ । पशुपतिनाथ मन्दिर क्षेत्रलाई एक खुला संग्रहालयको रुपमा समेत मानिन्छ । उपत्यकाकै प्राचीनतम् धार्मिक स्थलको रुपमा यसले आफ्नो परिचय बनाएको छ । शैव, शाक्त, वैष्णव, बौद्ध, जैन, सौर, गणपत, नाथ, सिख आदि प्रमुख सम्प्रदायका मानिसहरूको समान आस्था एवम् श्रद्धाको केन्द्रको रुपमा यस

क्षेत्रलाई मानिन्छ । जन्मदेखि मृत्युसम्मका संस्कार सम्पन्न गरिने यस पावनपुण्य धाममा बागमती नदीले अझै यसको महिमालाई बढाई दिएको छ जसले यस क्षेत्रलाई एक जीवन्त सम्पदाको रुपमा जोगाई राख्न सफल भएको पाइन्छ ।

यस क्षेत्रलाई सन् १९७९ मा युनेस्कोको विश्व सम्पदा समितिले काठमाडौ उपत्यकाका सांस्कृतिक सम्पदा अन्तर्गत "विश्व सम्पदा सूची" मा समावेश गरेको थियो । पशुपतिनाथ मन्दिर पशुपति क्षेत्र विकास कोष ऐन, २०४४ ले व्यवस्था गरेको प्रावधान अनुरुप संरक्षण, सम्वर्द्धन, सुरक्षण र व्यवस्थापन हुँदै आएको छ ।

माथि उल्लेखित प्रत्येक सम्पदाहरूको संरक्षित स्मारक क्षेत्रमा हुने संरक्षण एवम् निर्माण मापदण्ड, २०६४ तर्जुमा गरी लागू गरिएका छन् ।

विश्व सम्पदा सूचीमा समावेश भएका काठमाडौं उपत्यका भित्रका सात स्मारक क्षेत्रहरू र यी प्राचीन स्मारकहरूको स्वामित्व, महत्व र ऐतिहासिकताको आधारमा पुरातत्व विभागले स्थलगत रुपमा विस्तृत अध्ययन र अनुसन्धान गरी "क", "ख" र "ग" श्रेणी गरी संरक्षित क्षेत्रका वर्गीकृत स्मारकहरूको सूची तयार पारेको थियो जसको सारलाई देहाय बमोजिम उल्लेख गरिएको छ :

| **सम्पदा क्षेत्र** | **वर्गीकृत स्मारक क्षेत्र** | | |
|---|---|---|---|
| | **"क"** | **"ख"** | **"ग"** |
| काठमाडौं दरवार क्षेत्र | • तलेजु मन्दिर, जगन्नाथ मन्दिर<br>• शिवपार्वती मन्दिर, ठूलो घण्टा,<br>• कालभैरव, मैजुदेवल,<br>• कुमारीघर, बसन्तपुर दरवार,<br>• गद्दी बैठक, काष्ठमण्डप<br>• कवीन्द्रपुर, अशोक विनायक मन्दिर,<br>• गरुड,<br>• त्रैलोक्य मोहन (नारायण)<br>• कुमारी घर, शिव मन्दिर,<br>• जोशी आगम घर,<br>• विष्णु मन्दिर, कृष्ण मन्दिर,<br>• ठूलो नगरा,<br>• गोपीनाथ मन्दिर,<br>इन्द्रपुर आदि । | • नेपाल संस्कृत वि.वि. रहेको भवनसत्तल,<br>• गद्दी बैठक,डबली,<br>• शिव मन्दिर, सिंह सत्तल,<br>• भगवती मन्दिर<br>• लक्ष्मीनारायण मन्दिर<br>• सिखमु बहाल, कालभैरव<br>• सरस्वती मन्दिर<br>• कागेश्वर मन्दिर<br>• कोटीलिङ्गेश्वर महादेव<br>• महेन्द्रेश्वर मन्दिर परिसर<br>• महाविष्णु मन्दिर<br>• नारायण मन्दिर<br>• लायकु वहिल, चैत्य<br>• आकाश भैरव मन्दिर | • चैत्य, जलद्रोणी<br>• कामदेव मन्दिर<br>• गणेश मन्दिर<br>• रामेश्वर मन्दिर<br>• लक्ष्मीनारायण मन्दिर<br>• निजी घर, सत्तल<br>• कपालेश्वर महादेव मन्दिर<br>• जगन्नाथ मन्दिर<br>• कालीदेवी मन्दिर<br>• कान्तेश्वर महादेव मन्दिर<br>• महालक्ष्मी मन्दिर<br>• विच्छे बहाल<br>• द्यो छें<br>• शिवालयलगायत निजी घरहरू । |

| | | | |
|---|---|---|---|
| पाटन दरवार क्षेत्र | • सुन्दरी चोक, मूल चोक,<br>• केशवनारायण चोक,<br>• तलेजु आगछें, तलेजु मन्दिर,<br>• बहादुर शाह बैठक भवन,<br>• तुसा हिंटी, कोतपाटी<br>• भण्डारखाल बगैंचा,<br>• पाटन कृष्ण मन्दिर,<br>• च्यासिंदेवल, रिशंकर मन्दिर,<br>• चार नारायण, गणेश मन्दिर,<br>• भीमसेन मन्दिर, मिशा हिंटी,<br>• विश्वनाथ मन्दिर, कान्तिहिँटी<br>• राजश्री महाविहार (ईबाबही),<br>• कुम्भेश्वर मन्दिर,<br>• हिरण्यवर्ण महाविहार (क्वावहा) | • भैरव मन्दिर<br>• गणेश मन्दिर,<br>• उमा महेश्वर<br>• स्वठ नारायण<br>• गजेन्द्र मोक्ष मन्दिर<br>• न्हयांक बही<br>• ज्यावा बही<br>• लामो पाटी<br>• दत्तात्रय मन्दिर<br>• ढुंगेधारा<br>• ललित पाटीलगायत केही निजी घरहरू । | • कोपेश्वर मन्दिर<br>• शिवालय,<br>• त्रिविक्रम विष्णु मन्दिर<br>• अर्धनारेश्वर मन्दिरसहित करिब ४५ निजी घरहरू । |
| भक्तपुर दरवार क्षेत्र | • भक्तपुर दरवारभित्रका सबै चोकहरू<br>• भैरब मन्दिर, सलाँगणेश मन्दिर<br>• सलाँगणेश द्यो छें<br>• वाने लयाकु, दत्तात्रय मन्दिर<br>• नारायण मन्दिर<br>• भिमसेन मन्दिर, ढुंगेधारा<br>• नृत्यनाथ मन्दिर (नासः द्यो)<br>• माहेश्वरी द्यो छें<br>• गणेश द्यो छें<br>• इन्द्रसिद्धि विनायक<br>• महादेव मन्दिर, ढुंगेधारा<br>• उमामहेश्वर मन्दिर<br>• धुमावती, नारायण मन्दिर<br>• जंगम सत्तल, न्यातपोल<br>• ऐशा-मारी सत्तल<br>• भैरवनाथ मन्दिर<br>• चतुर्वर्ण महाविहार<br>• हरिशंकर मन्दिर, शिलु महादेव<br>• यक्षेश्वर मन्दिर, ठूलो घण्टा<br>• सिद्धिलक्ष्मी मन्दिर<br>• भूपतिन्द्र मल्लको शालिक स्तम्भ<br>• रामेश्वर मन्दिर, मूल घर<br>• राधाकृष्ण मन्दिर, जङ्गम मठ<br>• खौमा वहाः, सन्तनु वहाः<br>• जलद्रोणी, गोदावरी मठ,<br>• चिकंअप्पा मठ, सुकुलढोका<br>• सिथु,दथु र तजा मठहरू<br>• पुजारी मठ, पुलान्चोट्टा मठ<br>• तीलमाधव नारायण मन्दिर<br>• सिंख्वाल परिवारको घर | • महादेवस्थान, ढुंगेधारा<br>• बालकुमारी<br>• सलाँगणेश पोखरी<br>• ढुंगेधारा, जंगम पाटी<br>• भोटे वहा, ढुंगेधारो<br>• महाँकाल भैलद्योफल्चा<br>• चैत्य (चिवाः), गोलमाढी<br>• नारायण मन्दिर<br>• भिमसेन मन्दिर<br>• नारायणस्थान<br>• बुलबुल हिंटी<br>• जलधेनु (वालाखु)<br>• जगन्नाथ मन्दिर<br>• त्रिपुरासुन्दरी द्यो छें<br>• चतुर्नारायण<br>• त्रिपुर विद्यापीठ आगम<br>• पाहाछें पाटी, बालखु गणेश<br>• शिव मन्दिर, कुमार द्यो छें<br>• न्यातपोलको आसपासका चार गणेश<br>• उमामहेश्वर स्थान<br>• लों हिंटी र नवग्रह<br>• बेताल पाटी, दत्तात्रय मन्दिर<br>• अन्नपूर्ण (सिद्धिलक्ष्मी)<br>• नारायण मन्दिर<br>• भण्डार पोखरी, रामेश्वर पोखरी<br>• महादेव मन्दिर,<br>• जलधेनु (जलद्रोणी)<br>• बार्दली मठ, भीमसेन सत्तल<br>• भक्तपुरको मूल प्रवेशद्धार लास्कुं (खौमा) ढोका<br>• केही निजी घरहरू | • सकुलान पाटीवस्थान<br>• इनाचो पाटी<br>• महादेवस्थान<br>• त्रिपुरासुन्दरी पीठ<br>• इनार/जलद्रोणी<br>• गुपुहिटी<br>• नरसिंह मन्दिर<br>• भीमसेन डबली<br>• नासमना डबली<br>• टौमढी डबली<br>• भुवनेश्वरी<br>• च्यासिं मण्डल<br>• इट्टाचपली (सत्तल)<br>• बद्रीनाथ मन्दिर<br>• जगन्नाथ मन्दिर<br>• धनविनायक गणेश<br>• ढुंगेधारा<br>• भौरवही(दीपांकर विहार)<br>• रेडियो बाजेको घर लगायत केही निजी घरहरू । |

| | | | |
|---|---|---|---|
| स्वयम्भु क्षेत्र | • स्वयम्भु महाचैत्य<br>• बुद्ध प्रतिमार आक्रमण<br>• बज्रधात्वेश्वरी<br>• हारती माताको मन्दिर<br>• चैत्य परिसर, बुद्ध मूर्ति<br>• चतुर्व्यह चैत्य, शिवलिङ्ग परिसर<br>• मुर्ति संग्रह, विरुपाक्ष<br>• दिपंकर बुद्ध, प्रज्ञापारमिता,<br>• षटभुज महाकाल<br>• वैरोचन, अक्षोभ्य<br>• नागपुर, पवन भैरव<br>• प्रतापपुर मन्दिर, चिबहाः परिसर<br>• बज्रधातु मण्डल<br>• भैरव मूर्तिहरू, शान्तिपुर<br>• लिच्छवी चैत्य, शिवालय<br>• मूर्ति संग्रहालय, हरमुक्तेश्वर<br>• हनुमान मूर्ति, चैत्यहरू<br>• चैत्य परिसर, बसुवन्धु चैत्य | • देवधर्मा गुम्बा<br>• सम्येगु विहार<br>• चैत्य (मञ्जु श्री पर्वत) | • ज्ञानमाला भजन सत्तल<br>• टशि गोमङ्ग छ्योर्तेन<br>• वायुपुर<br>• चम्पक रुख डबली<br>• सत्तल<br>• पाटी<br>• ढुङ्गेधारा<br>• देवल, चैत्य<br>• आगम घर |
| बौद्धनाथ क्षेत्र | • बौद्धनाथ स्तुपा परिसर<br>• मूर्तिहरू, अजिमा मन्दिर<br>• चैत्यहरू, बुद्ध मूर्ति<br>• गणेश र अन्य मूर्तिहरू<br>• भारादयाक, शान्ताशी, मैत्रेय<br>• चुन मिसाउने खाल्डो | • ढुंगेधारा<br>• ढुङ्गे धारा | • देवराज शाक्य, मन्गाई लामाको घर<br>• पासाङ ग्याल्जीनको घर लगायत निजी घरहरू |
| चाँगुनारायण क्षेत्र | • चाँगुनारायण मन्दिर<br>• मानदेव स्तम्भ, गरुड<br>• शिवदेव, अंशुवर्माको अभिलेख<br>• भूपालेन्द्र मल्ल र भूवनलक्ष्मीको सालिक<br>• गरुडासन विष्णु, ढुंगे धारा<br>• राधाकृष्ण मन्दिर, द्यो छें, पाटी<br>• श्रीधर विष्णु मन्दिर<br>• नाट्येश्वर, जलद्रोणी<br>• विष्णु (माधव नारायण)<br>• पारिजात, लोकेश्वर<br>• महाविष्णु, सोमलिङ्गेश्वर महादेव<br>• गणेश, हात्तीको प्रतिमा<br>• छिन्नमस्ता भगवती<br>• शिव मन्दिर, लक्ष्मीनारायण<br>• विश्वरुप मूर्ति<br>• नृसिंह मूर्ति, त्रिविक्रम मूर्ति<br>• कान्तिभैरव<br>• किलेश्वर महादेव मन्दिर<br>• ४ वटा सत्तल, पानी ट्याँकी<br>• धर्मशाला, दुई माली देवता<br>• शंख, चक्र, गदा | • चर्तुव्यूह विष्णु<br>• विष्णु चर्तुव्यूह मूर्ति<br>• जलद्रोणी<br>• जलद्रोणीका मूर्तिहरू<br>• गणेश मन्दिर<br>• नारायण धारा<br>• ढुङ्गेधारा<br>• सरस्वती मन्दिर | • भैरव पाटी<br>• सत्तल<br>• शंखदह<br>• जलद्रोणी<br>• ढुङ्गेधारा<br>• सरस्वती मन्दिर<br>• तारणी प्रसाद/लक्ष्मण भट्टको घर<br>• वैष्णव राज/शिवराज श्रेष्ठ लगायतका निजी घरहरू |

माथि उल्लेखित बाहेक नेपालले सन् १९९६ र त्यसपछि सन् २००८ मा गरी थप १५ वटा धार्मिक, ऐतिहासिक, पुरातात्विक, सांस्कृतिक प्राचीन स्मारक तथा

सम्पदाहरूलाई "विश्व सम्पदा सूची"मा समावेश गर्न युनेस्को समक्ष अनुरोध गरेको छ। यी सम्पदाहरूका सम्बन्धमा आधिकारिक निर्णय हुन बाँकी छ। नेपालका प्रस्तावित सम्पदाहरू देहाय बमोजिम छन् :

(१) पनौतीको मध्यकालीन वास्तुकला क्षेत्र (सन् १९९६)

(२) प्राचीन शाक्य अधिराज्यका पुरातात्विक अवशेष रहेका तिलौराकोट (सन् १९९६)

(३) मुस्ताङको मुक्तिनाथ उपत्यकाको गुफा वास्तुकला (सन् १९९६)

(४) गोरखास्थित मध्यकालीन दरवार क्षेत्र (सन् १९९६)

(५) रामग्राम (सन् १९९६)

(६) ललितपुरको खोकना (सन् १९९६)

(७) मुस्ताङको लो मान्थाङ (सन् २००८)

(८) बज्रयोगिनी र साँखुका प्रारम्भिक बस्ती (सन् २००८)

(९) कीर्तिपुरको मध्यकालीन बस्ती (सन् २००८)

(१०) रुरु क्षेत्रको ऋषिकेश हाता (सन् २००८)

(११) नुवाकोट दरवार क्षेत्र (सन् २००८)

(१२) जनकपुरको रामजानकी मन्दिर (सन् २००८)

(१३) तानसेनको मध्यकालीन नगर (सन् २००८)

(१४) जुम्ला जिल्लाको सिंजा उपत्यका (सन् २००८)

(१५) दैलेखको भूर्ती मन्दिर क्षेत्र (सन् २००८)

**सम्पदा संरक्षणमा संलग्न अवयवहरू**

हाम्रा पुर्खाहरूले सिर्जना गरेका सम्पदाहरूको सुरक्षण, संरक्षण, प्रस्तुतिकरण, व्यवस्थापन परम्परागत रुपमा चलिआएका धार्मिक एवम् सांस्कृतिक कार्यक्रमहरूको सञ्चालन आदि प्रयोजनका लागि विभिन्न अवयवहरू क्रियाशील रहेका हुन्छन् । यस्ता सरकारी एवम् सार्वजनिक निकायहरूले आ-आफ्नै प्रकारका ऐन, नियम, निर्देशिका, कार्यविधि, मापदण्डहरू तर्जुमा गरी लागू गरिएका छन् । नेपालको सन्दर्भमा यस्ता सांस्कृतिक सम्पदाहरूको सुरक्षा एवम् संरक्षणको प्रयोजनको निमित्त देहाय बमोजिमका ऐन कानूनहरू क्रियाशील रहेका छन्ः

**१. विश्वका प्राकृतिक तथा सांस्कृतिक सम्पदाहरूको संरक्षणसम्बन्धी महासन्धी, १९७२**

विश्वका प्राकृतिक तथा सांस्कृतिक सम्पदाहरूको संरक्षणसम्बन्धी महासन्धी, १९७२ का प्रावधानहरूले व्यवस्था गरे बमोजिम प्राचीन स्मारक तथा सम्पदाहरूको संरक्षण, सुरक्षण र सम्वर्द्धन कार्य हुँदै आएको छ। यसलाई संयुक्त राष्ट्रसंघको महासभाले सन् १९७२ नोभेम्बर १६ तारिखमा पारित गरेर

कार्यान्वयनमा ल्याएको थियो । नेपाल यस महासन्धीको पक्ष राष्ट्र भएकोले यसलाई नेपालले राष्ट्रिय कानून सरह मानी आएको छ। विश्व सम्पदा सूचीमा सूचीकृत प्राचीन सम्पदाहरूको अलावा नेपालका अन्य प्राचीन स्मारक एवम् सम्पदाहरूको उत्खनन् , अभिलेखीकरण, संरक्षण, सुरक्षण र सम्वर्द्धनका कार्यमा युनेस्को लगायत अन्तर्राष्ट्रिय संघ संस्था तथा निकायहरूको समेत उत्तिकै चासो रहेको पाइन्छ । मानव सभ्यताको विकासका साथै प्राचीन दरवार, भवन, मठ, मन्दिर, चैत्य, गुम्बा, विहार, सत्तल पाटी लगायत स्मारकहरूको व्यवस्थापनमा समेत निकै गम्भिरतापूर्वक कामहरू भएको छ ।

२. **प्राचीन स्मारक संरक्षण ऐन** (**संशोधन सहित**), २०१३

प्राचीन स्मारक तथा सम्पदाहरूको सुरक्षण र संरक्षण गर्ने मुख्य ऐन नै प्राचीन स्मारक संरक्षण ऐन (संशोधन सहित), २०१३ हो । यस ऐनलाई कार्यान्वयनका लागि प्राचीन स्मारक संरक्षण नियमावली, २०४६, त्यसै गरी प्राचीन स्मारक संरक्षणसम्बन्धी कार्यविधि, २०६४, अभिलेख संरक्षण ऐन, २०४६ र अभिलेख संरक्षण नियमावली, २०६३ समेत बनेका छन् ।

(क) प्राचीन स्मारक संरक्षण ऐन, २०१३ मा "**प्राचीन स्मारक**" **र** "**पुरातात्विक वस्तु**" को परिभाषा दिइएको छ जुन माथि नै उल्लेख गरी सकेको छ ।

प्राचीन स्मारक संरक्षण (संशोधन सहित) ऐन, २०१३ को परिभाषा खण्डमा दिइए बमोजिम प्राचीन स्मारक हुन एक सय वर्ष नाघेको र सार्वजनिक सम्पत्ति दुवै विशेषता हुनु अनिवार्य छ। सबै स्मारक र सम्पदाहरू सय वर्ष पुगेको हुँदैमा सार्वजनिक सम्पत्ति नहुन पनि सक्छ । त्यस्तै राष्ट्रिय वा अन्तर्राष्ट्रिय दृष्टिले महत्वपूर्ण भई विशिष्ट मूल्य राख्ने भएपछि पनि ती सबै सार्वजनिक सम्पत्ति भएको हुनुपर्छ भन्ने छैन । इतिहास, कला, विज्ञान, वास्तुकला वा स्थापत्य कलाको दृष्टिकोणले महत्व राख्ने भने पनि स्थावर जङ्गमलाई प्राचीन स्मारक भन्नु पर्ने वा मान्नु पर्ने हुन आउँछ ।

(ख) यस ऐनको दफा ३ बमोजिम नेपाल सरकारले कुनै पनि प्राचीन स्मारक रहेको ठाउँ वा क्षेत्रलाई संरक्षित स्मारक क्षेत्र घोषणा गर्न सक्ने व्यवस्था गरेको छ । यस्ता क्षेत्रमा कुनै पनि कार्य गर्न पुरातत्व विभागको पूर्व स्वीकृति लिनु पर्ने उल्लेख छ। यस्ता क्षेत्रभित्र घर भवन निर्माण, मर्मत गर्न पुरातत्व विभागको स्वीकृति लिनु पर्ने, स्वीकृति विपरित निर्माण गरेमा भत्काउन सक्ने प्रावधान पनि छ । तर यसको कार्यान्वयन प्रभावकारी ढंगले हुन सकेको छैन ।

(ग) प्राचीन स्मारक तथा पुरातात्विक वस्तुहरूको आयात, निर्यात र संकलन

गर्न सो ऐनको दफा १३ ले प्रतिबन्ध लगाएको छ । कुनै ठाउँमा सार्न संग्रह गर्न परेमा नेपाल सरकारको पूर्व स्वीकृति लिनु पर्नेछ । तर नेपाल सरकारको स्वीकृति निस्सा लागेको क्यूरियो निकासी गर्न वा नेपालभित्र एक ठाउँबाट अर्को ठाउँमा सार्न वा कुनै ठाउँमा संग्रह गर्न यसले बाधा पुऱ्याएको मानिने छैन भनी व्यवस्था गरिएको छ ।

(घ) उक्त ऐनको दफा १६ ले कुनै व्यक्ति वा संस्थाले कुनै पुरातात्विक स्थलको उत्खनन् गर्न चाहेमा नेपाल सरकारको स्वीकृति लिनु पर्ने र यस्ता उत्खननबाट प्राप्त पुरातात्विक महत्वका वस्तुहरू नेपाल सरकारको अधीनमा हुने प्रावधान छ ।

(ङ) सार्वजनिक स्मारकहरूको सुरक्षा, मर्मत तथा जीर्णोद्धार कार्य पुरातत्व विभागले गर्नु पर्ने प्रावधान यस ऐनमा छ । साथै संरक्षित स्मारक क्षेत्रभित्रका निजी स्वामित्वमा रहेका स्मारकहरूको संरक्षण, मर्मत तथा जीर्णोद्धार गर्न पुरातत्व विभागको स्वीकृति लिनु पर्ने प्रावधान ऐनमा छ । तर स्वीकृति नलिई सो कार्य गरे गराएमा दशहजार रुपैयाँदेखि एकलाख रुपैयाँसम्म जरिवाना वा  छ महिना कैद वा दुवै सजाँय हुन सक्ने व्यवस्था ऐनमा छ ।

(छ) प्राचीन स्मारक संरक्षण ऐन, २०१३ को दफा १२ ले प्राचीन स्मारक तथा पुरातात्विक वस्तुहरूलाई नष्ट गरेमा, भत्काएमा, बेरुप पारेमा, परिवर्तन गरेमा त्यस्तो प्राचीन स्मारक तथा पुरातात्विक वस्तुको बिगो बमोजिमको रकम असुल उपर गरी अपराधको प्रकृति हेरी पाँच हजारदेखि एक लाख रपैयाँसम्म जरिवाना वा पाँच वर्षदेखि पन्ध्र वर्षसम्म कैद वा दुवै सजाय हुने प्रावधान रहेको छ ।

(ज) प्राचीन स्मारक क्षेत्र वरिपरि सुरुङ्ग खन्ने वा विष्फोटक पदार्थ हाली जमिन फोर्ने काममा नियन्त्रण गर्न आवश्यक छ भन्ने नेपाल सरकारलाई लागेमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी त्यसरी सुरुङ्ग खन्न वा विष्फोटक पदार्थ हाली जमिन फोर्न नपाउने गरी तोक्न सक्ने प्रावधान यस ऐनमा गरिएको छ । साथै सोको उल्लंघन गर्ने व्यक्तिलाई दश हजार रुपैयाँसम्म जरिवाना वा डेढ वर्षसम्म कैद वा दुवै सजाँय हुने व्यवस्था गरिएको छ । नेपाल सरकारको वा निजी स्वामित्वमा रहेको जुनसुकै प्राचीन ऐतिहासिक, कलात्मक वा धार्मिक महत्वको स्थानमा कसैले प्रवेश गर्न चाहेमा सम्बन्धित व्यक्तिको धार्मिक भावना वा चलिआएको रीतस्थितिमा आघात नपुऱ्याई प्रवेश गर्न पाउने तर प्रवेश गर्न नदिई अनुचित रोकतोक गरेमा **पाँचसय रुपैयाँ**सम्म जरिवाना हुने व्यवस्था ऐनमा छ ।

प्राचीन स्मारक संरक्षण ऐन, २०१३ लाई केलाएर हेर्दा यो ऐन सम्पदा संरक्षण

तथा व्यवस्थापन गर्नका लागि पूर्ण र पर्याप्त नभएको जस्तो लाग्छ । यसमा धेरै नै कमी कमजोरीहरू छन् । यसमा भएका प्रावधानहरू महत्वपूर्ण छन् तर यसलाई पूर्णता दिन आवश्यक छ । यसलाई समय सापेक्ष रुपमा परिमार्जन एवम् संशोधन गर्नु आवश्यक छ । तथापि यो ऐनलाई कार्यान्वयन गर्नका लागि सहजता सिर्जना गर्न प्राचीन स्मारक संरक्षण सम्बन्धी कार्यविधि, २०६४ तर्जुमा गरी लागू गरिएका छन् । त्यसै गरी पूराना अभिलेखहरूको संरक्षणका लागि अभिलेख संरक्षण ऐन, २०४६ र अभिलेख संरक्षण नियमावली, २०६३ समेत लागू गरिएको छ । विश्व सम्पदा सूचीमा परेका सांस्कृतिक सम्पदाहरूमध्ये चाँगुनारायण, स्वयम्भु, भक्तपुर दरवार, हनुमानढोका दरवार, पाटन दरवार, बौद्ध, पशुपतिनाथलगायत क्षेत्रको संरक्षण एवम् निर्माणसम्बन्धी मापदण्ड, २०६४ समेत क्रियाशील छन् ।

३. **स्थानीय सरकार सञ्चालन ऐन,** २०७४

यस ऐनको दफा ९ बमोजिम प्रदेश सरकारले कुनै गाउँपालिका वा नगरपालिकाको ऐतिहासिक महत्व, पुरातात्विक वस्तु, कला वा संस्कृतिको संरक्षण वा पर्यटन प्रवर्द्धन गर्न उपयुक्त देखेमा त्यसको मापदण्ड तोकी कुनै गाउँपालिका वा नगरपालिका वा सोको कुनै क्षेत्रलाई चार किल्ला खोली सांस्कृतिक वा पर्यटकीय क्षेत्र घोषणा गर्न सक्ने प्रावधान रहेको छ । यसै गरी यस ऐनको दफा ११ को उपदफा (२)मा सार्वजनिक ऐलानी र पर्ति जग्गा, सार्वजनिक भवन, सम्पदा तथा भौतिक पूर्वाधारको संरक्षण र सुरक्षा गर्ने काम, कर्तव्य र अधिकार तोकिएको छ । त्यसै गरी पुरातत्व, प्राचीन स्मारक तथा संग्रहालयको संरक्षण, सम्भार, प्रवर्द्धन र विकास स्थानीय तहको काम, कर्तव्य र अधिकारमा समावेश गरिएको छ ।

यस ऐनको दफा १२ को उपदफा (२) मा ऐतिहासिक, पुरातात्विक, धार्मिक तथा सांस्कृतिक महत्वका सम्पदा, प्राचीन स्मारक, सार्वजनिक तथा सामुदायिक भवन, सरकारी, ऐलानी, पर्ति जग्गाको लगत राख्ने तथा संरक्षण गर्ने वडा समितिको काम, कर्तव्य र अधिकार तोकिएको छ । त्यसै गरी खुला क्षेत्र, चोक, घाट, पाटी, पौवा, सत्तल, धर्मशाला, धार्मिक तथा सांस्कृतिक स्थल, डाँडापाखा, चरन क्षेत्र, पानीको मुहान, पोखरी, तलाउ, इनार, कुवा, ढुंगे धारा, गुठीघर, बाटो, सडक, पुल, पुलेसा, कुलो, नहर, पानी घट्ट, मिलको तथ्यांक संकलन गरी अद्यावधिक लगत राख्ने, संरक्षण गर्ने लगायतका काम, कर्तव्य र अधिकार समेत यस ऐनमा उल्लेख गरिएको छ ।

४. **गुठी संस्थान ऐन,** २०३३

"गुठी" भन्नाले कुनै मठ, वा कुनै देवी-देवताको पर्व, पूजा वा जात्रा

चलाउन वा कुनै धार्मिक वा परोपकारी कामको लागि कुनै मन्दिर, देवस्थल, धर्मशाला, पाटी-पौवा, इनार, पोखरी, तलाउ, धारा, पियाउ, बाटो, घाट, पुल, चौतारा, गौचरन, बाग, बगैचा, जंगल, पुस्तकालय, पाठशाला, औषधालय, चिकित्सालय घर, इमारत वा संस्था बनाउने, चलाउने वा त्यसको संरक्षण गर्न कुनै दाताले आफ्नो चल अचल सम्पत्ति वा आयस्ता आउने अरु कुनै सम्पत्ति वा रकममा आफ्नो हक छाडी राखेको गुठी समेतलाई सम्झनु पर्छ भनी गुठी संस्थान ऐन, २०३३ को दफा २ खण्ड (ग) मा उल्लेख गरिएको छ । यस ऐन बमोजिम राजगुठी, छुट गुठी, निजी गुठी गरी गुठीलाई विभाजन गरिएको छ भने गुठी रैतान नम्बरी, गुठी नम्बरी, गुठी तैनाथी, गुठी अधीनस्थ गरी जग्गाको स्वामित्वको आधारमा जग्गाको वर्गीकरण गरिएको छ ।

परम्परागत रुपमा चलिआएका जात्रा, पर्व, मेला, पूजाआजा आदि चलाउने, तिनलाई निरन्तरता दिनका लागि व्यवस्था गर्ने, मठ मन्दिरको संरक्षण गर्ने, गुठी जग्गाहरूको व्यवस्था गर्ने आदिका लागि गुठी संस्थान ऐन महत्वपूर्ण मानिन्छ । यस ऐनलाई गुठी जग्गाहरूको व्यवस्था गर्न, जात्रा, मेला, पर्व एवम् पूजाआजा नियमित रुपमा सञ्चालन गर्नका लागि गुठी संस्थानको काम, कर्तव्य र अधिकार तोकी व्यवस्थित रुपमा सञ्चालन गर्न केन्द्रित भएको देखिन्छ । यस ऐन बमोजिम गुठीका दानपत्र, लिखत र परम्परा बमोजिम पर्व-पूजा आदि नरोकिने व्यवस्था गर्ने, धर्मलोप हुन नदिने गुठी आम्दानीको व्यवस्थित परिचालन गर्ने आदि व्यवस्था गरिएको पाइन्छ ।

५. **नगर विकास ऐन, २०४५**

बढ्दो जनसंख्या र शहरीकरणको परिप्रेक्ष्यमा भई रहेका नगरहरूको पुनःनिर्माण, विस्तार र विकासको साथै नयाँ नगरहरूको निर्माण गरी नगरबासीहरूलाई आवश्यक सेवा र सुविधाहरू पुऱ्याउन तथा सर्वसाधारण जनताको स्वास्थ्य, सुविधा एवम् आर्थिक हित कायम राख्नका लागि नगर विकास ऐन, २०४५ लागू गरिएको देखिन्छ। पुरातात्विक, धार्मिक एवम् ऐतिहासिक क्षेत्रको संरक्षण गर्नका लागि नगर विकास योजना लागू भएका क्षेत्रमा यो नगर विकास ऐन, २०४५ महत्वपूर्ण मानिन्छ। यस ऐनको दफा ९ को उपदफा (१) मा पुरातात्विक, धार्मिक, ऐतिहासिक स्थलहरूको उपभोग र प्रयोग गर्न नगर विकास समितिको स्वीकृति लिनु पर्ने र यस्ता क्षेत्रमा कुनै पनि कार्य गर्न समितिले निषेध गर्न सक्ने प्रावधान रहेको छ। त्यसै गरी सो ऐनको दफा ११ मा प्राचीन स्मारकसम्बन्धी प्रचलित नेपाल कानूनको अधीनमा रही नगर विकास योजना लागू भएका क्षेत्रमा कुनै सांस्कृतिक तथा ऐतिहासिक सम्पदाको समुचित विकास तथा सम्भारको लागि आवश्यक परियोजना बनाई कार्यान्वयन गर्न सक्ने व्यवस्था गरिएको छ। साथै समितिले निषेध गरेका

